# भाषा वंशावली

## भाग २

प्रकाशक
श्री ५ को सरकार
शि.मं. पुरातत्व विभाग
नेपाल राष्ट्रिय पुस्तकालय

पुरातत्व प्रकाशनमाला ३८।

# भाषा वंशावली

## (द्वितीय भाग)

बिब्लियोग्राफर श्रीशंकरनाथ अधिकारीको
अध्यक्षतामा

पं. देवीप्रसाद लंसाल
ज्योतिषाचार्य- महेन्द्र विद्या भूषणबाट सम्पादित

श्री ५ को सरकार
शि.मं. पुरातत्व विभाग
नेपाल राष्ट्रिय पुस्तकालयबाट प्रकाशित

# दुइ शब्द

यो वंशावली विगत २०२० पौष १ गते प्रकाशित भएको हस्तलिखित ग्रन्थ भाषा वंशावलीको दोश्रो भाग हो। उक्त पहिलो भागमा हामीले दोश्रो भाग पनि निकट भविष्यमैं निकालिने छ भनी लेखेका थियौं ता पनि कतिपय कारणहरूले गर्दा ढिलाई हुनगएकोमा हामी सबै पाठक वर्गहरू सित क्षमा याचना गर्छौं ।

ऐतिहासिक दृष्टि कोणले यो दोश्रो भाग पहिलो भागको अपेक्षाकृत निकै उपयोगी सिद्ध हुने छ । पहिलो भागमा नेपालको उत्पत्ति सम्बन्धी पौराणिक कथा किंवदन्तीहरू विशेष रुपले वर्णन गरीएका थिए र तिनीहरूको धार्मिक दृष्टि कोणले आफ्नै महत्व भएको र नेपालको विषयमा सृष्टिको आदि कालदेखि उल्लेख भएको हुँदा ती पौराणिक घटन हरू सुरुदेखिनै समावेश गरिएका हुन् । यो बाहेक नेपाल देव देवीहरूको वासस्थान कहलाउनुको साथै यहाँका नर नारीहरूको जीवनको प्रत्येक पाइला धा मक परम्पराले अनु प्राणित भएको हुँदा यस देशको इतिहासको शुभारम्भ पनि धार्मिक पृष्ठ भूमिमा आधारित मान्नु कुनैं युक्तिसङ्गत होवैन भन्न पनि नस किने भएको र इतिहासको क्षेत्र भित्र पर्ने घटनाहरू मात्र समावेश गर्दा वंशावली अधूरो नैं हुने ठानी सृष्टिको शुभारम्भदे खकै घटनाहरू राखी एक पूर्ण वंशावली तयार पार्ने उद्देश्य लिई यो वंशावली प्रकाशित गरीएको हो ।

यो भाग मल्ल राजा श्री नन्द देवबाट सुरू भई श्री ५ बडा महाराज पृथ्वीनारायणशाहको कान्तिपुर प्रवेश संम राखी टुङ्ग्याइएको छ। यस भागमा इन्द्रचोकको निर्माण मत्स्येन्द्रनाथको उत्पत्ति आदि घटनाहरूको वर्णन छ र अन्य कैही घटनाहरू प न धार्मिक कुराहरू द्वारा पुष्टि भएका छन् मल्ल राजा जयस्थितिमल्ल र उनका सुधार तथा रीतिरिवाजहरू विशेष रूपले बर्णन गरिएका छन् । सम कालिन घटनाहरूमध्ये भक्तपुर र ललितपुरका राजाहरूको थोर वहुँत वर्णन गरि एको छ ।

हुन त वास्तविक रूपमा वंशावलीलाई पूरा ऐतिहासिक महत्व दिन सकिदैन ता पनि हामी यस लाई सर्वथा इतिहासको रूपमा स्वीकार नगर्न पनि सक्दैनौं। नेपालको विषयमा पहिले इतिहास लेख्ने युरोपियन विद्वानहरूले पनि वंशावलीको सहायता लिएको हामी प्रशस्त उदाहारण पाउँछौं ।

यो अत्यन्त खुशीकी कुरा हो कि आज हाम्रो देश पनि यस क्षेत्रमा निकै अगाडि बढ़ी सकेको छ र आज हामीलाई आफ्नो देशको इतिहास पढ्न विदेशी विद्वानहरूको मुख ताकनु पर्दैन विभिन्न ठाउँमा पाइएका शिलालेख तथा शिला पत्रहरुको आधारमा प्रमाणिक इतिहासको सृजना धमाधम भई रहेछ र वंशावलीमा उल्लेख भएका कुरा तात्कालिक प्रमाण हरु द्वारा पुष्टि भएका छैनन् तापनि थोर बहुत

कुराहरू मिल्न आएका छन् । अतः यो वंशावली पाठक वर्ग तथा इतिहासकारहरूलाई हाम्रो देशको विशुद्ध इतिहास तयार पार्न थोरै मात्रामा भएपनि सहायक सिद्ध होला भन्ने हाम्रो धारणा छ ।

अन्त्यमा म विभागका निर्देशक श्रीरमेश जङ्ग थापाज्यूलाई यो वंशावली शीघ्रातिशीघ्र प्रकाशित गर्न उत्साहित गर्नु भएकोमा धन्यवाद ज्ञापन गर्दै दोस्रो भागको पनि केही पृष्ठहरूको प्रतिलिपि संपादन का निमित्त तयारगर्नु भएका पहिलो भागका संपादक श्री नयनाथ पौडेल लाई पनी धन्यवाद दिन्छु । यस भागका सम्पादक श्री देवीप्रसाद लम्सालले परिश्रम पूर्वक सम्पादन गरी यो भाग समयमा नै समाप्त गरिदिनु भएकोले वहाँ विशेष धन्यवादका पात्र हुनु हुन्छ ।

०२३ कातिक ७ गते

शंकरनाथ अधिकारी
बिब्लीयो ग्राफर
नेपाल राष्ट्रिय पुस्तकालय

# मेरो भनाई

जुन सुकै देश वा राष्ट्रको आफ्नै ढङ्गको इतिहास परम्परा साहित्य र संस्कृति हुन्छ, तर सहीसा-माग्री उपलब्ध हुदानै हरेक क्षेत्रको बास्तविकतथ्य ज्ञानहुन शक्तछ। इतिहास बाट गतघटनाहरुको केबल क्रममात्र थाहाहुने हैन। त्यस बाट राष्ट्रको योग्यता अयोग्यता सफलता विफलताका कारणहरू खोजन र जान्न सकिन्छ। इतिहास क्रियात्मक राजनीति हो, जसको ढढर्शला गतशताब्दिहरुका भिन्न भिन्न अनुभव द्वारा स्थापित गरिएको छ र राष्ट्रको भाविविकाशको निमित्त हामी यी कार्य तथा कारणका बहुमूल्य अनुभवलाई पन्छाउन शक्तैनौं।

इतिहासमा विशेषगरी त्यस अङ्गको बढ़ी महत्वहुन्छ, जब देशमा राज्यक्रान्ति वा कुनै ठूलो उथल पुथल हुन्छ। किन कि त्यस समयमा शयकडौं वर्ष देखि एकत्र भैराखेका कारणहरू र गुप्त कारणहरू उठेर माथिल्लो तहमा आएर प्रत्यक्ष देखिन लाग्दछन्। त्यस बेला राष्ट्रको सारा शक्ति केन्द्रित भैराखेको हुन्छ र जसको शान्तिका समयमा अध्यन गर्न दुर्लभ हुन्थ्यो त्यसका अङ्ग प्रत्यङ्ग त्यस बेला, छर्लङ्ग हुँन्छन्। यसै समयमा राष्ट्को मूलाधार शक्ति त्यसको गुण अवगुणको पहिचान हुन्छ। जस्तै गतमहायुद्धका घटना लेयूरोपका शक्ति र सभ्यताको अनेक गुप्तकुराहरु दुनियाका अगाडि छर्लङ् हुन आए।

राज्यक्रान्तिको मूल्य यसनिमित्त पनि अधिक मानिन्छ कि त्यस राष्ट्र को भावी इतिहासलाई पनि त्यसले बनाउदछ र अर्काराष्ट्का घटनाक्रमलाई पनि प्रभावान्वित पार्दछ। अमेरिका र फ्रान्सको राज्य क्रा न्तलेयूरोपका शासन पद्धतिको ढाँचानै बदलिदियो। त्यस्तै भारतको क्रान्ति पछि हाम्रो देशका स्वेच्छाचारी शासकले पनि शदाब्दि पुरानो प्रसाशन बाट हात धुनुपर्‍यो। यस्तै स्वेच्छाचारी शासनले गर्दा नेपालको वास्तविक इतिहास लेखिएको थिएन। लेख्न इच्छाभए पनि इच्छानुसारको इतिहास लेख्न पाउदैनथे। यो पुस्तिका आधुनिक'डायरा को जिजुबाजे जस्तोछ। यसलाई वंशावली भनिन्छ। यस्तो इतिहास प्रेमीहरुले टिपेर राख्ने चलन थियो। यो वंशावली खास इतिहासमा चाखराख्ने हरुका निमित्त मूलबाटो नभए पनि गोरेटोको काम अवश्यनै दिनेछ भन्नेलागेको छ र त्यसैका आधारमा यो क्रमशः प्रकाशित गरिदै छ।

यो वंशावली कुनै एक व्यक्तिले एकै समयमा लेखेको न हुनाले लेखकको नाम यसमा छैन। यो वंशावली को दोस्रो भाग हो। प्रथम भागमा आदिकाल देखि राजा अंशुवर्मा को राज्यकाल सम्मगएको छ। यो दोस्रो भागमा राजानन्द देवको शासनकाल देखि उठानगरी श्री ५ बडामहाराज पृथ्वीनारायणशाहदेव ले कान्तिपुर प्रवेश गरेसम्मको छ। यसमा सहयोग गर्ने पं. यज्ञानन्द गुभाजु तथा पं. टङ्कप्रसादढकाल धन्यवादका पात्र हुनुहुन्छ।

विनीत<br>
देवीप्रसाद भंसाल

संबत् २०२३ विजया दशमी

# विषय सूचि

# भाषा वंशावली

## ललितपुरका स्थापना

अस्य पुत्र श्रीराजा नन्ददेव भोगवर्ष १३ यी राजाले सिखरापुर मतिलिनगर दुइ सहरको राज्य गर्दैं थिया। यिनैं राजाले विक्रमादित्य सेनका पूर्व कथा सुनी विक्रमादित्य संवत्सर नेपाल आदि पूर्व पश्चिममा अधि वेस गरी नचल्याको विक्रमादित्य संवत्सर प्रख्यात गरी चलाइदिया। देवताहरूको सन्मान गरिरहृयाका थिया।

अस्य पुत्र श्रीवीरदेव राजा भोगवर्ष १६ यिन राजाले ब्राम्हण ज्योतिषी पण्डित बौद्धाचार्यहरूसंग संमत गरी ज्ञानी जनकन प्रजाकन बोध दी एक एक सहर बनाउनको बडो इच्छा भयो भनी ❀ उत्तर प्रयाग शंखमूल सन्धिपर्यन्त सहर बनाउंला भनी उद्योग गर्न लाग्या। ललित भन्याको एक कोही घाँसीलाई राजाले तेसको लक्षण विचारी बढिया ठहराई त्यसलाई आफ्ना घोडाको

---

❀ क' पुस्तकमा यहाँबाट पाठान्तर छ। सो यस प्रकारको छ–

बडो उद्योग गरी श्रीपरमेश्वर सर्वेश्वरको सेवा गर्दैं थिया। एक दिन राजा आफ्ना दर्बारका झयालमा बस्याका थिया र त्यहा सधैं कुष्ठरोग भयाका घाँसी एकलै घाँस काट्न आउथे। एकदिन राजाले झयालबाट नजर गर्दा सोही घाँसीका कुष्ठरोग सबै निको भै सुन्दर मूर्ति भयाको देखी राजा आश्चर्य मानी निज घाँसीसंग राजाले सोध्दा अघि ता तिमी कुष्ठरोगी थियौ। आज ता कुष्ठरोग सबै निको भैं सुन्दर रूप भयो भनी राजाबाट हुकूम हुंदा निज ललित भंन्या घाँसीले राजाका हुजुरमा बिन्ति गन्यो।

हे महाराज म हिजो वाग्मतीबाट दक्षिण दिशामा ललितारण्य भन्याका बनमा घाँस काट्न जाँदा मलाई गर्मी ज्यादा हुंदा त्यहां पानीका चवल ? पोखरी जस्तो पानी जम्याका ठाउंमा गई लुगा छोडी

चिखवादार गरी राख्या । पछि राजाका अनुग्रहले र अम्बिका रानीका प्रेमले ललित ठूलै मानिस भयाको थियो र ललित नाम वन फाँडी सहर बसाउननिमित्त आफ्ना प्रेमी ललितलाई मुख्तियार गरी सहर बसाउन लाया । तेस ललितले राजाको हुकूम पाई बढ़िया सुसाइत पारी सहर बनाउनको आरम्भ गऱ्या । यस्ता तरहसंग राजाले धेरै धन खर्च गरी सहर बसाउन लाउँदा अघिका सहर मतिलिनगर देखि जोरी बनाया । ९००० नौ हजार घर थपी अति ठूलो सहर बनाया । नगरका लक्षणले पाँच थुम्का बनिगया । ती राजाले अघि बस्याको दर्बार छाडी नयाँ दर्बारमा वास गऱ्या । ललित नाम वन फ़ाँडी बनायाको सहर हुनाले ललितपत्तन भनी शास्त्रोक्त प्रमाणले सहर बसाई नाम प्रख्यात गरिदिया । ललित नाम भयाकाले बनायाको हुनाले ललितपुर भनी भन्दछन् । यहाँपछि यिन राजाका पालामा मीननाथ लोकनाथ १२ गोटा देवताका रथ बनाई यात्रा बनाया । भैरव श्वेतनारायण हरिशङ्कर गरुडनारायण लोकनाथ मीननाथहरूका यात्रा प्रतिवर्ष खेलप्रति गराया । वैशाख शुक्ल ११ देखि पूर्णिमापर्यन्त अघिका टोल पछिका टोलहरूमा राजा प्रजाकन मंगलनिमित्त जात्रा बनाई प्रतिवर्ष चलाया ।'

यिन राजाका पालामा सुन्दर नाम बनियाँले रत्नाकर समुद्रमा जाई रत्न ली कालीनगरमा जाई रत्न विक्रय गरी सात कोटि धन कमाई नेपालमा ल्याई नेपालमा अघि नभयाको बौध्द धर्म लोप हुन लाग्यो भनी धर्म प्रकाश गर्ननिमित्त पाद प्रतिष्ठाकर्म बौध्दाचार्यहरूबाट गराई एक कोटि धन १००००००० 

---

घाँस बोक्ने नोल ताहाँ गाडी नुहाउन गया र पानीबाट माथि आउँदा कुष्ठरोगकन पनि निको भै गयो । नोल लिन जांदा नोल पनि झिक्न नहुने भै सिध्द भै गया भनी बिन्ती गर्दा राजा बहुत खुशी भै मलाई यो ठाउँ देखाऊ भनी भन्दा सो जग्गा राजालाई देखाया र राजा आफ्ना दर्बारमा आई बस्या । ललित भने परमेश्वरका कृपाले कुष्ठरोग निको भै गयाका हुनाले घाँसी भया पनि राजा–बाट आफ्ना मन्त्री गरी राख्या । नोल सिध्द भै गयाका अहिलेतक कुम्भेश्वरदेखि दक्षिण दिशामा झतापोलदो भनी नाम राखी छँदैछ । परमेश्वर सर्वेश्वरका सेवा गर्दै यी राजाले मनमा एक सहर बनाउला भन्ने मन थियो र कोही बखतमा सर्वेश्वरबाट स्वप्नमा हे राजा तिमीले सहर बनाउने भया यो ललितारण्य वन फाँडी २४ तत्त्वका प्रमाणले श्री यन्त्रका प्रमाणबाट तिम्रा मन्त्री ललितलाई अख्तियारी गरी हाम्रा ३ स्वयम्भू शिवलिंग सहरभित्र पारी बनाउनू । तिमीलाई पनि उध्दार गरुँला भनी स्वप्न हुँदा कलिगत वर्ष मा फाल्गुन शुक्ल मा शुभ साइतमा ललित भन्ने मन्त्रीले राजाका हुकूम पाई आरम्भ गऱ्या । यस्ता तरहसंग राजाले धेरै धन खर्च गरी २४ टोल २४ तत्वका प्रमाण धारा इनार पोखरीसमेत देव देवताका स्थापना गरी बड़ो सुन्दर ललितपत्तन भनी नाउ राखी मतिलिग्रामसम्म जोरी सहर बसाया ।

※ गाडी स्थूलदो चैत्यका प्रतिमा बनाई माघ शुक्ल पञ्चमी उत्तर भद्र नक्षत्र सिद्धियोग बुधवारका दिन प्रतिष्ठा गरी नवदान पादपूर्णदान संपूर्ण भोजन गराई बौद्धमार्गीहरुबाट आशीर्वाद ली धेरै धन खर्च गरी बौद्धमार्गीको धर्मवृद्धि गऱ्या। पुलचोकसन्धि पादप्रतिष्ठा गरी सवा लक्ष्य धन गाडी स्थूलदो चैत्यका प्रतिमा बनाई पुलचोक देश बनाई अघि भै गयाको धर्मकन लोप हुन लाग्याको बौद्धकर्मकन वृद्धि गरी चाहिंदो विधिपूर्वक सुन्दर नाम बनियाँ माली जातले वृद्धि गऱ्या। नाना प्रकार संग बौद्धमतको धर्म बढाई पछिबाट बौद्धमार्गमा प्रवेश गरी भिक्षुक धर्म ली नकवहिल भनी विहार बनाई बुद्धको प्रतिष्ठा गरी सोही विहारमा शान्त भै गया।

## मिथिलाका ब्राम्हणको र ल्हासाका लामाको संपर्क

फेरि मिथिला नगरका ब्राम्हण थिया। मिथिलामा दुर्भिक्ष भै उस ठाउमा नरही भाईले सहित उत्तराखण्डतिर आया। नेपालमा आइपुग्याप्रान्त भोट देशतिर गया। जब ल्हासा पुग्याथ्या। उहाँ लामाहरू तपचर्या गरी रहयाकाकन देख्या र यस ब्राम्हणले पनि उनीहरुको सामर्थ्य विचार गर्न लागिरह्याका थिया। ती लामाहरूमध्ये कोही लामाले रूखमा चाट्दा तपका बलले रूखबाट दूध प्रवाह भै सोही दूधका आहर गरी तपस्या गऱ्याको देखी तेस मिश्र ब्राम्हणले आफ्ना मार्गका मात्रको विचार गरी हेरूँ भनी मन्त्रका प्रयोगले लामाले चाट्दा दूध प्रवाह हुन्या रूखकन मन्त्रका बलले सुकाइदिया र लामाले यस्तो त हुनुपर्न्या होइन भनी

---

पूर्व बालकुमारी, दक्षिण थछे महालक्ष्मी नैऋत्य कसुतिकुमार पश्चिम यप्पा वैष्णवी पश्चिम डेखुहो रूद्रायणी वायव्य लोहगल इन्द्रायणी उत्तर धंतिलवाराही, उत्तर सिकुवही चामुंडा यस्तो रीत गरो देव देवताको प्रतिष्ठा गऱ्या। यिनै राजाले शिवरापुर दर्बार छाडी ललितपत्तन दबारमा बस्न आया। ललित भन्न्याले बनायाको हुनाले ललितपुर भनी नाम प्रख्यात भै ललितपुर भन्या सतन कुंभेश्वरदेखि दक्षिणपट्टि अद्यापि छंदैछ। यिनै राजाका पालामा ललितपत्तन सहरमा मतिलिनगरका मीननाथ श्रीजटाधारी लोकेश्वर, थालाछका लोकनाथ मतिलिनगरको बटुक भैरव स्वथ नारायण, चाथाचेका हरिशंकर, कोलिमका महेश्वर यिनै देवताका रथ बनाई, प्रतिवर्ष वैशाख शुक्ल ११ देखि पूर्णिमासम्म जात्रा गरी टोल टोलका प्रजाहरुले मान्य गन रीत चलाया।

यिनै राजाका पालामा सुन्दर नाम महाजनले रत्नाकर समुद्र भन्या ल्हासामा जाई नाना तरहका बेपार इत्यादि गरी रत्न सुवर्ण ली कलिंग देशमा गई रत्न सुवर्ण विक्रय गरी सात कोटि धन जम्मा गरी देवी प्रसन्न गराई राजासंग बक्साई दानापुर भन्या सहर बसाई कोटेश्वन ※

आश्चर्य मानी विचार गर्न लाग्या। कसले क्या गरिदिएछ भनी विचार गरी खोज्दा तेही मिश्र ब्राम्हणकन ठहराई बातचित गर्दा परस्पर आफ्ना मार्गको भेद बताई सुनाया। बहुतै प्रीतिभावले गरी भोटैमा बसिरह्याका थिया। केही वर्षपछि धेरै दौलथ सुवर्ण कमाई लामासँग बिदा भै फर्की आया। आफ्ना जन्मभूमितर्फ जानुपर्‍यो भनी मिथिलातर्फ गया। उहाँ सजाति भाई गोष्ठी गोत्रीहरूले जातमा नलिंदा फर्की नेपालमा आई शंखमूलका सन्धि ठूलो विहारगृह बनाई बुद्धको मूर्ति स्थापना गरी त्यहीं बास गर्‍या। बौद्धमार्गको धर्म सबै याद पाई सगोत्रीहरूले सजातमा नलिंदा बौद्धमार्गी भै भिक्षुकचर्या लिया। ताहाँपछि बुद्धको सेवा गरिरह्या। फेरि बुद्धको पादप्रतिष्ठा गरी द्रव्य गर्भमा राखी स्थूलदो चैत्य बनाया। भाइचाहिंले पनि विहारगृह बनाई बौद्धको स्थापना गरी बौद्धाचार्य भै रह्या। राजा वीरदेवले नगर बढाई प्रजाकन प्रतिलाप गरिरह्याका थिया।

## राजा नरेन्द्रदेवको पालामा नेपालमा अनावृष्टि

अस्य पुत्र नरेन्द्रदेव भोगवर्ष ३७ यिन राजाका पर्यायमा सिध्द गोरखनाथ नेपालमा आई भिक्षा माग्न जाँदा अतीत अभ्यागतमाथि श्रध्दा कम देख्या। ताहाँपछि नेपाल पुण्यभूमिमध्ये उत्तर मृगस्थलीविषे जलवृष्टिका कर्ता नागहरूकन खैंची नाग आसन गरी गुप्त रूपले तप गर्न लागिरह्या। यो कुरो दुनियाँलाई जाहेर थिएन। पछिबाट जलवृष्टि नभै प्रजाहरूले दुःख पाउँदा राजा नरेन्द्रदेवबाट अहो क्या आपत आइलाग्यो मेरो पालामा प्रजाले बहुतै दुःख कष्ट पाया। राजा भै प्रजाकन यदि दुःख भयो भन्या क्या राजा भनी सान्है मनमा विवाद गरीकन कसो गर्‍या दुर्भिक्ष हरण होला। कौन उपदेशो सामर्थी होला भनी जान्न्या ज्योतिषी पण्डितहरूकन तलास गर्न लाग्या। चारै तर्फका जान्न्या जान्न्या पण्डित ज्योतिषी बूढा बूढाहरू गुरु प्रोहितप्रभृति सबैकन बटुल्याई फुल्याई ठूलो कचहरी गरी सोधपुछ गर्दथ्या। शास्त्रहरू मगाई दुर्भिक्ष–हरण हुन्याको उपाय शास्त्रमा खोज्न लगाई अनेक तरहसंग विचार गराउँथ्या। आफू र रातमा हात्तीमा सवार भै सहर ग्रामका गल्ली गल्लीमा डुली गरी चर्चा दुनियाँ क्या क्या बार्ता गर्दारह्याछन् भनी बुझ्न लाग्याका थिया। क्या कारण भन्या पञ्च भन्याका परमेश्वर हुँन्। पञ्चा ईश्वरबाट बुद्धि बकाउँछन् भन्न्या निश्चय गरी रात्रिमा फिर्दथ्या।

एक कोही दिन सहरमा रात्रिविषे फिर्दा कान्तिपुर सहरमा रह्याका बन्धुदत्त नाम बौध्दाचार्य ब्राम्हण मुडियाका शिवमार्ग बौध्द मार्ग दुवै मार्गका धर्म बेवहार जान्न्या एक बौध्दाचार्य थिया। रातमा कोठाभित्र आफ्नी स्त्रीसंग बसिरहँदासमय स्त्रीले सोध्न लागी रहे स्वामी यो नेपालमा

जलवृष्टि नभै दुर्भिक्ष हुदा लोकले साह्रै अन्नबिना दुःख कष्ट पाया । राजा पनि भरसक मेहनत गरी जान्न्या मानिस खोजी बटुल्याउंछन् । कसो गन्या जलवृष्टि हुंदो हो नि भनी सोध्दा बन्धुदत्तले केही युक्ति छ भन्नुहुदैन अरु केही युक्ति गरौंकन पनि यो कामको पार लाग्यार्छैन भन्दा त स्त्रीले साह्रै ढिपी गर्न लागिन् र बन्धुदत्तले बहुतै ढिपी गरी हत्या देला भन्या जस्तै सनाउंदा क्या भन्याकि हे सुन्दरी सुन यो कुरा कसैलाई नभन्नू भनी कबूल गराई यहाँ देखि ३०० यो जनभित्र कामरूपीठमा श्री मत्स्येन्द्रनाथ राजाका पुत्र भै जन्म लिन गयाका छन् । नेपालमा भन्या गोरखनाथबाट नेपाली प्रजाहरूले अनादर गर्दा रीस गरी नाग आसन गरी गुप्तले तपस्या गर्दा जलवृष्टि नभयाका छन् ती गोरखनाथका गुरु मत्स्येन्द्रनाथकन आवाहन गरी ल्याउनु सकया गोरखनाथ तपश्चर्या-बाट उठ्नन् र नागहरू स्वस्वस्थानमा जानन् । ताहाँपछि आफै जलवृष्टि भै दुर्भिक्ष हरण होला भन्या कुरा कह्यानो गन्याको राजा नरेन्द्रदेवबाट सुनी अब उपाय पायाँ भनी खुसी भै दर्बार फर्की आया ।

भोलि बिहान सबेरै बौध्दाचार्यकन बोलाउन पठाया र तिनले स्त्रीलाई भन्या । हेर हिजो राति तैंले साह्रै ढिपी गरिस् आज दर्बारबाट बोलाहट भयो अब राजाले कसो गर्न आंट्या भनी डराई नजाई रह्या र फेरि दर्बारबाट राजाको हुकुम हुन्छ बिस्तार नगर केही कुराको डर मनमा नराख निःसन्देह संग आऊ भनी दुस्काई डाकी लग्या । राजाका हजुरमा पुग्यापछि राजाबाट पनि बहुतै सम्मानपूर्वक आदर गरी जान्न्या जान्न्या पंडितहरू ज्योतिषीहरू बटुल्याई शास्त्रको बिचार गराई राख्याका मानिसहरूकामध्ये कचहरीमा राखी सोधनी गर्दामा ती बन्धुदत्तले आफ्ना दस्तुरमाफिक ईश्वरको स्मरण गरी ओथना हेरी क्या भन्या कि हे महाराज यहाँ ठूलो कष्ट प्रश्न आयो । बिना उद्योगले मेहनत नगरी या कामना पुग्न्याछन क्या कारणले भन्नुहोला त यस नेपालमण्डलमा बडा सिध्द देवता गोरखनाथ अप्रसन्न हुंदा नागहरू आसन गरी गुप्त तप गर्नु हुंदा जलवृष्टि शून्य भै दुर्भिक्ष भयाको हो । अब क्या युक्ति गर्नुपर्दछ भन्नुहोला त यस कालमा यहाँदेखि ३०० योजनभित्र पूर्वभागमा लीला गर्ननिमित्त श्री मत्स्येन्द्रनाथ राजपुत्र भै जन्म लिन गयाका छन् । ती मत्स्येन्द्रनाथ गोरखनाथका गुरु हुन् तिनकन नेपालमा ल्याउनलक्या तसदेखि गोरखनाथ गुरुका नमस्कार गर्ननिमित्त उठनन् र नागहरू बन्धनदेखि मुक्त हुंदा जलवृष्टि हुन्याछ भनी बिन्ति गर्दा ती मत्स्येन्द्रनाथ गोरखनाथ भन्याका को हुन् यिनका आदिको उत्पत्ति कसो हो भनी सोधनी गर्दा ती बन्धुदत्त प्रभृति जान्न्या जान्न्या पण्डितहरू यसो बिचार गर्दा शास्त्रानुसार ठहराई बिन्ति गर्न लाग्या ।

## मत्स्येन्द्रनाथ तथा गोरखनाथको उत्पत्ति

हे महाराज पूर्वकालमा श्री महादेव ब्रम्हा विष्णुप्रभृति इन्द्रादि तेत्तीसकोटि देवताहरू जम्मा भै

रहँदा समय श्री महादेवबाट विष्णुतर्फ नजर गरी क्या भन्नु भयो कि हे विष्णु तिमी संपूर्ण लीलामा कुशल छौ त म एक थोक कुरो भन्दछु । क्या भनौला त आज मलाई ऐले तिम्रो मोहनी स्वरूपको चरित्र देखलाऊ भनी सोध्दाभया र विष्णुबाट हे महादेव यो कुरो नभन्नुहवस् भनी बुझाउँदा पनि बुझाउन सकेनन् बहुतै ढिपी गर्नु हुँदा विष्णुबाट उस समय यिनलाई मोहिनी मूर्त्ति नदेखाई भएन भनी आफू अलप भै मोहनी मूर्त्ति देखाउँदाभया । उस बखतमा कस्तो चरित्र देखियो कि क्षणभरमा स्वप्ना झैं सब मोहमा परिगया । तत्क्षणैमा दोश्रो संसार जस्तै देखियो । बसन्त ऋतु आई ठूलो एक बगैंचा देखिया सुगन्ध वायु बहन लाग्यो । नाना तरहका फल फूल बनचरहरू नाना पक्षिहरू सुस्वरसंग बोली विहार गर्‍याको देखिया । उस बगैंचामा एक अति सुन्दरी मोहनी मूर्ति देखिया र महादेवका नजरबाट देखी अधिको चेष्टा बदली मोहनीदेखि बहुतै आसक्त भै पछि पछि धाउदाभया । मोहिनी रूपधारीबाट हाउ भाउ कटाक्ष रूपी तीरले महादेवका मन हरी लिदाभया र मोहिनी मूर्तिकन पछि पछि धाई समात्न खोज्दा, मोहनी मूर्तिबाट छुने नदिन्या यस्तै तरहसंग धेरै बेर झुलाउँदा आसक्तताले पीड़ित भै धैर्य धार्न नसक्ता जोरसंग धाई मोहिनी मूर्तिको स्पर्श गर्नेबित्तकै मोहिनी अलप भै विष्णुमूर्त धारी शिवका उत्थान ध्वजलाई चक्रले छेदन गर्दा शिवको शुक्ल च्युत भयो र त्यो शुक्ल विष्णुबाट आफ्ना बाहुलीमा थापी लिदाभयो र उस समयमा अब शिवजीसंग विन्ति गर्‍या कि हे शिवजी तपाईको वीर्य व्यर्थ हाल्न योग्य छैन भनी उत्तिखेर वायु देवता र केशरी बानरलाई बोलाई क्या अह्राउनुभयो कि हे वायु देवता केशरी यो शिववीर्य केशरीका हातमा राखिदी ऐले जाई अंजनी गर्न लाग्याको भयाको ठाउँ जाई यो वीर्य तिनका उदरमा पारिदिनू भनी अह्राई पठाउँदाभया र तिनीहरू जाई दशेन्द्रिय निगृह गरी तप गर्न लाग्याको अंजनीका कर्णद्वारबाट शिववीर्य उदरमा प्रवेश गराउंदा गर्भाधान भै तिनदेखि हनूमान्‌को जन्म भयो । शिवका वीर्यदेखि उदय हुनाले बड़ो सामर्थवानन् भया । हरिका आज्ञाले उदय हुँदा हरिभक्त भया । केशरी बानरका हस्तबाट वीर्य कर्ण द्वारमा राख्नाले कपीतन भया । वायु देवताबाट वीर्य उदरमा प्रवेश गराउँदा वायुपुत्र भनी प्रख्यात भया ।

त्रिना प्रसंगले अंजनीको गर्भबाट जन्म पाउँदा जति भया यही शिववीर्य केशरी बानरका हात राखिदियापछि विष्णुका बाहुलीमा लाग्याको नदीमा बाहुली धुँदा पानीमा रह्याको वीर्य मत्स्यले खाँदा मत्स्योदरदेखि मत्स्येन्द्रनाथको जन्म भयो । जलले धुंदा पनि नगयाको विष्णुबाट गोबर मगाई हस्त मली फेक्याका गोमलदेखि उदय भयाको हुनाले गोरखनाथ भनी प्रख्यात भयाका हुन् भन्न्या वृत्तान्त नरेन्द्रदेवका कचहरीमा जाहेर गर्दा राजालाई बहुतै श्रद्धा लागी मनमा क्या विचार गर्‍या कि जस्न तरहसंग पूर्वकालमा रोहिणीनक्षत्रमा शनिश्चर जाँदा वर्षा शून्य हुंदा रघुवंशमा उत्पन्न भयाका राजा दशरथका पर्यायमा अब कसो गर्न्या हो भनी वशिष्ठादि मुनिहरूकन बोलाई मेरा पालामा प्रजाहरूलाई बहुतै कष्ट प्राप्त भयो । प्रजाको प्रतिपाल यदि गर्न सकिएन भन्या राजा भयाको क्या प्रयोजन भयो धिक्कार

हो भनी वशिष्ठादिका उपदेश सुनी शनिश्चर जस्तासँग युद्ध गर्नाको अङ्गीकार गरी, कि प्रजाका कारणमा प्राण नै गयो, कि प्रजाको उपकार गरिहाल्याँ भनी आँटी शनिमाथि धनुर्बाण ली रथमा चढी जाई धनु टंकार शब्द गर्दा मजस्ता बीरमाथि उपकार गर्ननिमित्त आफ्ना जीयको माया त्यागी इलाग्यो धन्यै हो भनी बहुतै प्रसन्न भया र उस रथबाट बल प्रसाद पाया । अब उप्रान्त कौनै कालमा अपनि रोहिणीका कोष्टमा न जानू भन्न्या बढी गरी ससारमा ठूलो यश नाम कमायाथ्या । त्यस्तै युग अनुसार मेरा पालामा यस्तो प्रजाको आपत आई प्राप्त भयो । अब मैले पनि दुभिक्ष्य हरण हुन्या उपायका उद्योगमा जीवको संकल्प गर्दछु । सक्या दुभिक्ष हरण गरी जस कमाउँला, सकिनं भन्या पनि प्रजाका कारणमा प्राण गया पनि मलाई बढियै छ भनी मनमा बिवेक गरी इदमित्थ ठहराई बन्धुदत्ताचार्यलाई एकान्तमा बोलाई सम्मत गन्या ।

## मत्स्येन्द्रनाथलाई लिन राजा नरेन्द्रदेवको कामरूपीठ प्रस्थान

अब हामीहरूले कसो गर्नु पर्थ्यो भनी सोध्दा बन्धुदत्ताचार्यले क्या बिन्ति गन्या कि हे महाराज अब हामीले फकीरको भेष गरी कामरू पीठमा जाई चाहियाको उपाय गर्न जानुपन्यो, उद्योग गर्दा दैवागतले जो भैपरी आउंछ । सो काममा जुक्तिसंग गर्न्या काम गरुंला भनी चाँहिदो खर्च ली गुप्तसंग मन्त्रीलाई राज्यको भारा सौंपी बढिया बेलामा साईत गरी प्रस्थान गरी बन्धुदत्त आचार्य र एक चाकरलाई साथ ली राजा नरेन्द्रदेवबाट चाहिदो सार्जाम लिन लाई नेपालका नाग कर्कोटकलाई आवाहन गरी हामीलाई संकष्ट पर्दा आवाहन गर्दा आउनू भन्या बाचा बन्देज बाँधी प्रजालाई थाहा नदी फकीरका भेष गरी देशान्तरगमन गरी गया । जाँदा जाँदा कामरू पीठमा पुगी सहरमा प्रवेश गरी बास गरी राजाका धेरै पुत्रहरूमा मत्स्येन्द्रनाथ चाँहि कुन रह्याछन् भनी तलास गर्न लाग्या । जब विचार गरी ठहराई सक्याथ्या । त्यहाँपछि अब एक जुक्ति गर्नु पन्यो भनी नागकन आवाहन गरी बिन्ति गन्या ।

हे नागराज अब तिमीले यस देशका राजाको भोजन गर्दा समय रेणुप्रमाण सूक्ष्म रूप भै राजाका उदरमा प्रवेश गरी आफ्नू सरीर बृध्दि गरी उदरमा पीडा देऊ जब मैले मन्त्रले उपकार गरूंला तब तिमीले राजाकन रोग निवारण गरी बाहिर निस्कनू भनी नागलाई पठाई राजाका उदरमा प्रवेश गरी उदर ठूलो भारं गरी पीडा दिया । हात गोडा मुख सब सुकी पेटमात्र बढी राजालाई पीडा हुँदा अनेक जान्या ज्योतिषी वैद्यकन बोलाई औषधि गराउन लाया । आराम गर्न कसैले सकेनन् । देशी परदेशी जान्या कोको आउंदा रह्याछन् भनी सहरमा तलास गर्न लाया । यस्तै समयमा ती बौध्दाचार्यले राजाकन र सेवककन सहरमा डुल्न जाऊ, तिमीहरू औषधि गर्न जान्दछौ कि ? भनी सोध्दा हामी त

जान्दौन । हाम्रा एक गुरु छन् । तिनलाई औषधिहरूको याद छ भन्नू भनी सिकाई पठाया र त्यस देशका राजाका मानिसहरूले ती राजा र सेवकलाई तिमीहरू औषधि गर्न जान्दछौ ? कि भनी सोध्दा तिनीहरूले बौध्दाचार्यले सिकायाअनुसार उत्तर दिंदा ती राजाका मानिसहरूले बौध्दाचार्यलाई बोलाई दर्बारमा ल्याया ।

## कामरूपीठबाट राजा नरेन्द्रदेवको नेपालमा प्रत्यागमन

ताहाँपछि मन्त्रीहरूले औषधि गर्ननिमित्त विचार गराया । ती बौध्दाचार्यले पनि धेरै विचार गरी नाडी हेरी प्रश्न विचारी चाहिंदो नागराजाको आज्ञा मागी पूजा गरी औषधि खुवाउंदा राजालाई वमन भयो र ती नाग सूक्ष्म रूपले गरी बाहिर निस्की अलग भै गया । ताहाँपछि फेरि केही औषधि गर्दा राजा पीडादेखि मुक्त भै जस्ताका तस्ता भै जान लाग्दासमय धन्य तिमी रहेछौ मकन जीवदान दियौ भनी बहुतै प्रार्थना गर्न्या । अब तिमी क्या माग्दछौ माग भनी भन्दा बौद्धाचार्यले म केही माग्दिन यदि बक्सनुहुन्छ त तीन बार सत्यवाचा गनुहोला तब म एक थोक माग्दछु भनं सत्यवाचा गराई क्या माग्या भन्या हे महाराज तपाईंका धेरै पुत्रहरू छन् । तिनीहरूमध्ये मैले रोजी लियाका एक पुत्र बक्सनुहवस् भनी माग्दा राजाले विचार गर्न्या । पुत्र दिनु भन्याको कठिन कुरो हो परन्तु मलाई जीवदान दी सत्यकबूल गराइसक्यापछि दिनैपर्‍यो भनी लौ दिउंला भनी कबूल गर्न्या ।

ताहाँपछि सबै पुत्रहरू बोलाई सामुन्ने राखी लौ एक पुत्र लैजाऊ भनी भन्दा ती आचार्यले जुनचाहिं अवतारी थिया । तिनैकन ठहराई ती राजपुत्रकन माग्दा ती राजाले मेरा पुत्रहरूमध्ये उत्तम भयाका मुख्य चाँहिकन यिनले माग्या वाचामा हार्न्या क्या लाग्छ भनी केही भन्न सकेनन् । ताहाँपछि रानीले थाहा पाई यस पुत्रकन त म कदाचित् दिन्याछैन भनी दिएनन् । थोरै दिन त्यहाँ बस्दा ती लक्षणवान् पुरुषकन साथ ल्याउन नपाई एक दिन ती अवतारी पुरुषकन भेटी तिमीकन हामीले नेपालमा दुर्भिक्ष हुँदा यहाँसम्म धाई आइपुग्यौ । बाबासँग पनि माग्रियौं । हामीले पायौं । अब हाम्रा मनोरथ पूर्ण गरिदिनु चाहिं छ भनी विन्ति गर्दा मत्स्येन्द्रावतार पुरुषबाट आज्ञा गर्न्या । नेपालमा सहकाल गर्ननिमित्त श्री पशुपतिनाथकन मान्नू आसाद्रान्त त्रिभुवनका देवताहरू तिनैका हुकुममा अधीन भै रहन्छन् । वैशाखमा ब्राह्मण द्वारा अमरतीर्थको जलाभिषेक गर्नू तब वर्षाफल सुफल होला भनी आज्ञा गर्न्या–ततः श्लोकेन कथयति–

> अथोवाच स मत्स्येन्द्रः नेपालवासिजन्तव
>
> मृत्युञ्जयाय त्रिगैरच वैशाखे चाभिषेचनम्
>
> मिलित्वा सुवर्णैश्च दुर्भिक्षहरणं भवेत्
>
> गृह्णन्ते तज्जलं मेघैः काले वर्षति सर्वदा

यस्ता प्रकारसँग आज्ञा गरी तिमीहरूले आवाहन गर्दा म आउँला भनी ऐले र तिमीहरूसँग आउनुहुदैन । मेरा आमाले पनि जान देबैनन् । तिमीहरू यहाँ बस्नुपर्दैन जाऊ भनी आज्ञा प्रसन्न भया । उप्रान्त कामरूबाट गमन गरी फर्की नेपाल आई चाहिदो पुरश्चरणको सार्जाम सब थोक शास्त्रानुसार जोरजम्मा गरी उत्तम भूमि ठहराई लगनखेलका मध्यमा शिलाको पद्माकार बनाई पवित्र भै पीठ पूजा कलश थापी पुरश्चरण आरम्भ गऱ्या ।

## श्रीमत्स्येन्द्रनाथको नेपालमा प्रतिष्ठा

एकदिन बन्धुदत्तले राजासँग भन्या । हे महाराज आज रात्रि मत्स्येन्द्रनाथ गमन गरी आई यस कलशमा प्रवेश गर्न्याछन् । तिमीले उस बखतमा एक पट्टवस्त्रले तत्क्षण कलसमा छोप्नू भनी अहाऱ्ई ध्यानदृष्टि लाई मन्त्रले आकर्षण गऱ्या । नेपाल भूमिमा दशदिग्विषे रक्षा विधानले दिग्बंधन गरी आवाहन गर्दा मन्त्रका बलले गरी आकर्षण हुँदा श्रीमत्स्येन्द्रनाथबाट नरस्वरूपमा आफ्ना आमा भै रह्याकीकन निन्द्रैमा छली कामरू पीठका आफ्ना गुण साथमा ली नेपाल भूमिमा प्राप्त भै पञ्चरत्नको तेजले युक्त भै रत्नाकार स्वरूप भ्रमर भै पुरश्चरण गऱ्याका स्थानमा प्राप्त भै कलशमा भित्र प्रवेश गऱ्या । राजालाई र अकस्मात् निन्द्रा लाग्न जाँदा बेहोस भै कलशमा छोप्न सकेनन् र भ्रमर स्वरूप फेरि कलशबाट निस्की फर्कदा भया र बन्धुदत्त आचार्यले कट्टुवालदहदेखि पर जान नहुन्या साधन दिग्बन्धन गरी राजालाई भन्या । हे महाराज तिमी उत्तरसाधक हौ । तिमीले अवसर चुकायौ । ईश्वर फर्की गमन गरी जाँदाभया । अब वेस गरी चेत गरी बस भनी फेरी मन्त्रले आकर्षण गर्न लाग्या । फेरि मत्स्येन्द्रनाथ गमन गरी आई कलशभित्र प्रवेश गऱ्या । राजालाई फेरि निन्द्रा भयो र फेरि उम्की गया । त्यहाँपछि फेरि राजा-लाई भन्या । तिमीले दुइ वार चुकायौं । अब फेरि एक फेरासम्म मन्त्रका बलले श्रीमत्स्येन्द्रनाथ आकर्षण गरुँला तेस्रा पालि पनि चुकायौ भन्या मनोरथ व्यर्थ भयो भनी खै गरी अब त वेस गरी चेती रहुँला भनाई आकर्षण गर्न लाग्या । फेरि मन्त्रका बलले श्रीमत्स्येन्द्रनाथकन आवाहन गर्दा गमन गरी आई कलशमा प्रवेश गर्दासमय देवताका छलले गरी राजालाई फेरि निन्द्रा लाग्न जाँदा बन्धुदत्त आचार्यले अब त अनर्थ भयो यस औसर चुक्याउप्रान्त सब मिहनत व्यर्थ भयो भनी चाँडै राजालाई गोडाले धक्का दी राजालाई उठाउँदा राजाले पनि चाँडै पट्टवस्त्रले कलश छोपिदिया । तर उस बखतमा राजाले क्या चिताया भन्या यस आचार्यले मलाई लातैले हान्या यिनका गोडा तीन टुक्रा पार्न पऱ्यो हो भनी चिताया ।

यहाँपछि विधिपूर्वक स्थिर वाचन गरी पूजा मान्य गऱ्या । कामरूपीठका पूर्णचण्डि नीलनाथ हयग्रीव आदि हरूकन पनि आवाहन गरी पूजा मान्य गऱ्या । ललितपत्तन स्थान बनाई चोभु भन्याका

स्थानमा सुद्भेश्वर नाम मिश्र ब्राम्हण बौद्धाचार्यमा पस्याका थिया।उनका विहारका सन्धि ढदरमा कलश राखी धातुका लोकेश्वर मूर्ति बनाई विधिपूर्वक प्रतिष्ठाकर्म गरी स्थापना गऱ्या। नेपालमा शुभाशुभ चिह्न हवस् भन्ना निमित्त भरणीनक्षत्र वार योग लग्न ठहऱ्याई मनुष्यका माफिक दशकर्म गरी स्त्रीलाई गर्न्या कर्म पनि गरी स्त्रीपुरुष दुवैका चाहिन्या कर्म पुऱ्याई यज्ञोपवीत दी शिवमार्ग बौद्धमार्ग दुवै मार्गले मान्नु पर्न्या प्रमाणले गरी ग्रहहरूका दान शान्तिस्वस्ति गर्नुपर्न्या रीत चलाया। यो प्रमाण गऱ्याको शुभाशुभ चिन्ह थिनै श्रीमत्स्येन्द्रनाथबाट हवस् भन्नानिमित्त हो। यस्ता प्रकार सँग सिद्ध मत्स्येन्द्रनाथकन नरस्वरूपका गतिमा ल्याई प्रतिष्ठा गऱ्या।

## श्रीमत्स्येन्द्रनाथको वर्णन

यस्तै समय गोरखनाथबाट मत्स्येन्द्रनाथ आया भनी पञ्चकुमारीका मुखबाट सुनी मेरा गुरुको दर्शन गर्न जानुपऱ्यो भनी गुप्तरूप तपचर्याबाट उठ्दा नागहरू सबै स्वस्थानमा गया। त्यस दिनदेखि वर्षा प्रशस्त भैगयो। यहाँपछि बन्धुदत्त नाम बौध्दाचार्यले श्रीमत्स्येन्द्रनाथकन स्तोत्र बनाई स्तुति गऱ्या।

नमो लोकनाथाय–स्तुत्वा प्रणम्यमभयंव रसर्वसत्वा

संपूर्णचन्द्रवदनांम्बुजपद्मनेत्रम्।

सर्वज्ञज्ञानमुकुटोज्वलमुक्तिमार्गं

तं पद्पाणिवरभूषितज्ञानरश्मिम्

अस्यार्थ–हे परमेश्वर समस्त लोकहरूकन अभय वर प्रसन्न हुन्या पूर्णमासीका चन्द्रमा जस्ता तेजिला मुखारविन्द भयाका तथागतका बौध्दज्ञान धारण गरिरहयाका फेरि यो परमेश्वरका गात्र लक्षण कस्तो छ भन्या, नासिका पनि लामो, गण्डस्थल ठूल्याको, ओठ रातो, तुषार जस्ता दन्त हँसिला मुखारविन्द भयाका विशाल कपाल भयाका भयाका सिरविन भयाका फेरि ब्रम्हाले पनि मान्याका कोमल वाणी भयाका फेरि पुष्पका मालाले आभूषण गऱ्याका सुवर्ण नाना रत्नका अलंकार भूषण गऱ्याका त्रिनयन जटा मुकुटमा बालचन्द्रले शोभायमान भयाका कृष्ण मृगका अजीन ओढ्याका सुवर्ण भयाका फेरि लोकेश्वर भनी समस्त देव दैत्यले भज्याका वासुकी नाग राजाको जनै धाऱ्याका चिन्तामणि मनकामना पुऱ्याउन्या, रत्नकुण्डल कर्णमा धाऱ्याका, फेरि संसार भन्नाले जन्म मरण वृद्ध हुनु नाना पाप दुःखरूपी समुद्रमा डुब्याका लोकहरूले नमस्कार गर्दा पूर्वकालमा परमेश्वरबाट बौध्द ज्ञान दी बोध गरी पापीहरूकन धर्म उपदेश दिन्या, फेरि यमराजका नरकमा जाई अविचिन नरकमा डुबाई राख्याका पापीहरू सबै उतारी पाप देह मोचन गरी नरक सबै

नाश गरी शीतल भूमि गरी नरक कुण्डबाट पद्म उत्पत्ति गरी पापीहरूको दुःखमोचन गरी सुख दिन्या, फेरि नरकमा जांदा यम किंकरहरूकन तर्साई पठाई विहार गर्न्या, फेरि नरक जस्ता ठाउमा जाई भक्तिजन उद्धार गर्न्या, त्रैलोक्यका नाथ भयाका, अभय दिन्या दुःख पर्दा जनले तिनको नाम स्मरण गर्दा त्यसको दुःख हर्न्या, फेरि यिनैले प्रेतलोकका भूमिमा जाई प्रेतहरूको भोक तृषा छुटाइदिन्या, कस्ता प्रेतहरू भन्या पर्वत जस्ता पेट भयाका तृषाले नरकका ज्वालाले सरीर जीर्ण भै पानी घाममा रह्याका सुक्याका काठ जस्ता आङ सियाको छेद जत्रो मुखद्वार भयाका प्रेतहरूकन आफ्नै बाहुलीले पानी पियाई उद्धार गर्न्या तृष्णाले पीडित भयाका दुःखीहरूकन आफ्ना पांचै अंगुलीबाट नदी बहाई प्रेतहरूको भूख छुटाई सरीर पुष्ट गरी आनन्द गराउन्या, फेरि चन्द्र सूर्यका किरणले नदेख्याका ठाउमा जाई चिन्तामणि कुण्डलका तेजले उज्यालो गरी यक्ष राक्षसले नमस्कार गरियाका बलि राजाकन पातालमा जाई अनुत्तर ज्ञान कही बोध दी थोरैमाथि उतारिदिन्या, दिवि कुंडल भयाका देव पुत्रथ्यै जाई अन्न मःदा देवपुत्र रोई बिन्ति गर्दा अन्न धन रत्न संपत्ति पनि दी दुःख नाश गर्न्या कामरूप अनेक राक्षसीहरूका स्थानमा जाई अर्कालाई मारी खांउ भनी चिताउन्या, राक्षसीहरूकन मोह गरी ज्ञान कही धर्मचित्त गराउन्या विष्टा मूत्रका भूमिमा जाई कोटिप्रमाण कृमि भै रह्याका नारकीकन भ्रमर भै जाई जाई शब्दले शब्द सुनाई सबै कृमिकन उद्धार गउर्न्या बाह्र वर्षसम्म पनि पानी नपरी दुर्भिक्ष भै हाहाकार हुदा पानी परी व्रीहिवृध्दि गर्न्या राक्षसीका हातबाट बनियाहरू आफ्नू वराह घोडा भै समुद्रबाट उसलाई पार गर्न्या साध्दातु केही कालमा संसार प्रलय हुदा देव दानवहरू आफ्ना रोम कूपमा हाली रक्षा गर्न्या व्याघ्रादि सबै भय नाश गर्न्या मनुष्य जस्तै रूखमा पारिजेत श्रेष्ठ त्यस्तै धान्यादिले युक्त गराई समस्त कुवेरादिले नमस्कार गरियाका यस्ताकन नमस्कार भनी जसले करुणाष्टक पाठ गर्ला । त्यसको साफल्य होला । नाम लिनाले दुःस्वप्नादि नाश होला ईश्वरले सब पदार्थमा रक्षा गरून् भंन्या आदि भावले गरी करुणाष्टक बनाई स्तोत्र गन्या । श्लोक पच्चीसको स्तोत्र बनाई ❀ "श्रीमदार्यावलोकितेश्वरभट्टारकस्य श्रीबन्धुदत्ताचार्यकृता करुणास्तव", भनी स्तुति गन्या ।

फेरि राजा नरेन्द्रदेवबाट पनि आदि सकृत् वाणीका 'रूपस्तवं' भनी स्तोत्र बनाई × स्तुति गन्या ।

नमो लोकनाथाय

❀ या स्तोत्र नेपाल राष्ट्रिय पुस्तकालयको १२८, १२६, संख्याको हस्तलिखित पुस्तकमा सुरक्षित छ ।

× योस्तोत्र नेपाल राष्ट्रिय पुस्तकालयको १२६ संख्याको हस्तलिखित पुस्तकमा सुरक्षित छ ।

सर्वभूतमनुकम्पित तुभ्यं शान्तिमेव चरितं तव तुभ्यम् ।
सर्वरूपवरदिव्यसुरूपं तं नमामि दशबलबलरूपम् ॥१॥

## मत्स्येन्द्रनाथको रथयात्रा

यस्ता प्रकारसँग श्रीराजा नरेन्द्रदेवले बन्धुदत्त आचार्यले मन्त्र आकर्षण गराई श्रीमत्स्येन्द्र नाथकन नेपालमा ल्याया । नेपालमा प्राप्त गराउँदाको वर्ष संख्या श्लोक–

अतीतकलिवर्षेषु स्वादस्वर्गरसाग्निषु
नेपाले विजयी श्रीमानार्यावलोकितेश्वरः ॥

कलिगतवर्षको ३६७६ × जाँदा श्री मत्स्येन्द्र नाथकन नेपालमा प्राप्त गराया । यहाँपछि राजा नरेन्द्रदेवले बन्धुदत्ताका सम्मतले यात्रा बनाउनाको विधिक्रिया रथको आकार भैरव कर्कोटक नागका प्रमाणले ढलमा बनाई चारै भैरवका भाँवले चार पाङ्ग्रा बनाई ३२ हात प्रमाणका रथ पाङ्ग्रा ढलैमा चाहिंदो विधि आरम्भ गरी यात्रा बनाया । मत्स्येन्द्रपुर नाम एक देश बनाई महिना ६ ललितपुरमा विराजमान गराउनुपर्न्या गरी देवालय बसाया । यही रीत वर्षप्रति सदा सर्वदा भैगयो ।

---

× यस संवत्को विषयमा पाठान्तर पाइन्छ जस्तै–

अतीतकलिवर्षेषु शून्यद्वन्द्वरसाग्निषु ।
नेपाले जयति श्रीमानार्यावलोकितेश्वरः ॥

[कलिगत वर्ष ३६०० (वि. सं. ५५६) मा नेपालमा आर्यावलोकितेश्वर (मच्छिन्द्रनाथ) पूज्य हुनुहुन्छ] (त्रिरत्नसौन्दर्य गाथाको ८२ पृष्ठको टिप्पणी)

अतीतकलिवर्षेषु शून्यद्वन्द्वरसाग्निषु
नेपाले विजयी श्रीमानार्यावलोकितेश्वरः ॥

(नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको २७६ संख्याको हस्तलिखित पुस्तकबाट)

(कलिगतवर्ष ३६२३ (वि. सं. ५७९) मा नेपालमा अर्यावलोकितेश्वर (मच्छिन्द्रनाथ) पूज्य हुनुहुन्छ)

षड्व्योमषड्वन्हिमिते कलौ वै
नेपालमागात्खलु लोकनाथ ः ॥
(योगी शङ्करनाथद्वारा प्रकाशित "मत्स्येन्द्रपद्यशतकम्" को अवतरणिकाबाट)
(कलिगतवर्ष ३६०६ ( वि. सं. ५६२) मा लोकनाथ (मच्छिन्द्रनाथ) नेपालमा आउनुभयो)

अतीतकलिवर्षेषु शून्यस्वर्गरसाग्निषु
नेपाले जयति श्रीमानार्यावलोकितेश्वरः ॥
("मत्स्येन्द्रपद्यशतकम्" को अवतरणिकाबाट )
[ कलि गतवर्ष ३६७० ( वि. सं. ६२६ ) मा नेपालमा आर्यावलोकितेश्वर (मच्छिन्द्रनाथ) पूज्य हुनुहुन्छ ]

यी पाठहरूमा अहिले यहाँ विचार गरिन्छ—

कृतयुगाम्बरवन्हिभिरुज्झितो गतकलिः किल विक्रमवत्सरः ।
शरहुताशनचन्द्रवियोजितो भवति शाक इह क्षितिमण्डले ॥
( शतानन्दले वि. सं. ११५६ मा बनाएको भास्वतीबाट )

कलिगत वर्षमा ३०४४ घटाएपछि विक्रमसंवत हुन्छ । विक्रमसंवत्मा १३५ घटाएपछि शकसंवत् हुन्छ ।

शककालं कर्मभूमौ स्थाप्य नन्दाद्रिभूरग्नि युता ३१७९ योज्यं एतत्कलियुगम्भवति
( राष्ट्रिय पुस्तकालयमा रहेको सुमतितन्त्रको फोटोबाट )
[ शकसंवत्मा ३१७९ जोडेपछि कलिगतवर्ष हुन्छ ]

—यस अनुसार कलिगतवर्ष ३६०० मा शक सं. ४२१ वि. सं. ५५६ हुन्छ । कलिगतवर्ष ३६०६ मा शक सं. ४२७ वि. सं. ५६२ हुन्छ । कलिगतवर्ष ३६२३ मा शक सं. ४४४ वि. सं. ५७९ हुन्छ । कलिगतवर्ष ३६७० मा शक सं. ४९१ वि. सं. ६२६ हुन्छ । कलिगतवर्ष ३६७६ मा शक सं. ४९७ वि सं. ६३२ हुन्छ ।

शकसं. ३८६ देखि ४२७ सम्म तदनुसार वि. सं. ५२१ देखि वि. सं. ५६२ सम्म नेपालमा राजा मानदेव शासन गरिरहेका छन् । ( हेर्नुहोस् "इतिहास-संशोधनको प्रमाण प्रमेय ( पहिलो भाग ) २६३—२६७ पृष्ठ )

शकसं. ४४४ वि. सं ५७९ मा नेपालमा राजा वसन्तदेव शासन गरिरहेका देखिन्छन् {हेर्नुहोस्–अभिलेख–सङ्ग्रह पाचौं भागमा प्रकाशित पाटन बहालुखाको र बलम्बु पासिख्यको अभिलेख}

चापालीगाउँको अभिलेखबाट शकसं. ४८९ वि. सं. ६२४ मा गणदेव राजा देखिन्छन् ।

... ... { भट्टा } रकमहाराज { श्री } गणदेवः { कुशली } ... ... ... संवत ४८९ श्रावण शुक्लदिवा-द्वादश्याम् { हेर्नुहोस्- लेखो ८ संख्या नोली २१ संख्या }

[भट्टारकमहाराज श्री गणदेव कुशल हुनुहुन्छ । संवत् ४८९ श्रावण शुक्लद्वादशीमा]

वि. सं. ६ ३३ मा नेपालमा राजा मानदेव थिए भन्ने कुरा सुमतितन्त्रबाट थाहा पाइन्छ ।

"शकराज्याब्द ४९८ मानन्देवस्य राज्याब्द ३०४"

[ राष्ट्रिय पुस्तकालयमा रहेको सुमतितन्त्रको फोटोबाट ]

[शकसंवत् ४९८ देखि मानदेव संवत् चलेको हो । त्यसको चलन ३०४ वर्षसम्म रह्यो ।]

यहाँ ४९८ शकसं देखि मानदेव संवत् चलेको भनी लेखिएको हुँदा वि. सं. ६३३ मा मानदेव राजा थिए भन्ने थाह हुन्छ ।

यसरी माथि उल्लिखित वि. सं. ५५६, वि. सं. ५६२, वि. सं. ५७१, वि. सं. ६१६, वि. सं. ६३२ तिरका कुनै समयमा पनि नेपालमा नरेन्द्रदेव राजा भएको प्रमाण पाइएको छैन ।

लिच्छविकालको इतिहासमा राजा नरेन्द्रदेव वि. सं. ७००–७३६ सम्म राजा भएका देखिन्छन् । ( हेर्नु होस्–संस्कृत-सन्देश १।२ मा प्रकाशित ऐ. शि. बाबुराम आचार्य तथा श्रीगुरुपं नयराज पन्तद्वारा र नोली ६७ संख्यामा पनि प्रकाशित तलेजुचोकको अभिलेख, तथा भगवानलाल १३ संख्या अर्थात् नोली ७१ संख्याको पशुपति वज्रघरको अभिलेख ) तल उद्धरण गरिने एक पद्यले वि सं ७६० भन्दा पछिका राजा नरेन्द्रदेव त मछिन्द्रनाथको यात्रा चलाएका हुन कि ? भन्ने शङ्का उठ्नै दिदैन । अहिले–सम्म पाइएका शिलापत्रका आधारमा वि.सं. ७६० भन्दा पहिलेका राजा नरेन्द्रदेव यिनी एकमात्र हुन् ।

यी राजा नरेन्द्रदेवको पालामा चिनियाँ राजदूत वाङ्युन्चे चीनबाट भारतमा नेपालको बाटो वि. सं. ७००–७१४ सम्म ओहोरो दोहोरो गरेका थिए । राजदूत वाङ्युन्चेले तात्कालिक नेपालका राजाको वर्णन गर्दा "राजा नरेन्द्रदेव कानमा सुनको चौगडी लाउछन् तथा मोती मुगा पन्नाहरूले सिंगारिएका हुन्छन् । उनको कमरपेटीमा बुद्धको मूर्ति कुँदिएको हुन्छ " यसरी लेखेका छन् ।

शिलापत्रमा राजा नरेन्द्रदेव आफूमा " ठूलेका वीर सिपाहीका भाला र बाणले बनिएका हात्ती घोडाले घनघोर भएको लडाई मा सारा वैरीलाई सोत्तर पारेर दुनियाँहरूलाई धर्मकर्म रुपैया पैसाको व्यवहार र सुखसयलसमेत पुर्‍याइदिने आफ्ना कीर्ति ले दिशा विदिशा उज्यालो पारेका श्रीपशुपति–नाथका पाउको अनुग्रह पाएका " यस्तो विशेषण लगाउँछन् । ( नेपालको संक्षिप्त इतिहासको आधारमा )

राजा नरेन्द्रदेव आफूमा " पशुपतिभट्टारकपादानुगृहीत " यस्तो विशेषण लगाउँछन् तापनि उनी बौद्धमार्गपट्टि पनि झुकेका रहेछन् भन्ने कुरा उनको कमरपेटीमा बुद्धको मूर्त्ति कुँदिएकोबाट थाहा पाइन्छ ।

वि. सं. ७६० मा मत्स्येन्द्रनाथ नेपालमा प्रख्यात भइसकेका छन भन्ने कुरा नरेन्द्रदेवकै नाति हुन्छ द्वितीय जयदेवका पशुपतिको शिलापत्रको एउटा पद्यबाट स्पष्ट । सो यस प्रकारको छ– ।

" पद्मं किं करुणाकरस्य करतो लोकेश्वरस्यागतम् "

[ करुणामय लोकेश्वरको हातबाट आएको कमल पो यो हो कि ? ]

यसबाट वि. सं. ७६० मा मत्स्येन्द्रनाथ प्रख्यात भइसकेका र कमरपेटीमा बुद्धको मूर्ति कुदिएबाट राजा नरेन्द्रदेवको बौद्ध धर्मपट्टि पनि झुकाव देखिनाले यिनै नरेन्द्रदेव राजाले मत्स्येन्द्र—नाथको यात्रा चलाएहोलान् ! भन्न सकिन्छ । तर तात्कालिक निश्चित प्रमाणविना टुङ्गो लगाउन चाँहि सकिन्न ।

राजा नरेन्द्रदेवले नेपालमा मत्स्येन्द्रनाथको यात्रा चलाएका हुन् भन्ने हो भने " स्वादस्वर्गरसा-गिषु " यस्ता पाठको ठाउँमा " वेदवेदाद्रिवन्हिषु " जस्ता नरेन्द्रदेवको समयसंग मिल्ने पाठ पढ्नुपर्छ । वंशावलीको यो पाठले राजा नरेन्द्रदेवले मछिन्द्रनाथको यात्रा चलाए भन्न सकिन्न ।

राजा नरेन्द्रदेव तथा उनका आचार्य बन्धुदत्तले मछिन्द्रनाथको यात्रा चलाएका हुन भन्ने तात्कालिक प्रमाण अहिलेसम्म नपाइए तापनि अनुश्रुति भने पछि पछिसम्म, " राजा नरेन्द्रदेव र बन्धुदत्त आचार्यले मत्स्येन्द्रनाथको यात्रा चलाएका हुन् " भन्ने चलेर आइरहेको पाइन्छ । जस्तै–

गोपाल वंशावलीमा यस विषयमा यस्तो लेखिएको छ—

"राजा नरेन्द्रदेव वर्ष ३५ तस्य आचार्य बन्धुदत्त द्वयेन श्रीबुग्मलोकेश्वर भट्टारकस्य जात्रा कृता भवति

(हिमवत्संस्कृति १ वर्ष १ अङ्क ११ पृष्ठबाट)

[ राजा नरेन्द्रदेव ( र ज्य भोग ) वर्ष ३५ उनका आचार्य बन्धुदत्त हुन । दुवैले मछिन्द्रनाथको जात्रा चलाएको हो ]

राजा श्रीनिवासमल्लको पालामा वि. सं. १७३४ मा कवि नीलकण्ठले बनाएको 'मत्स्येन्द्रशतकम्" नामक पुस्तकमा पनि यस विषयमा यस्तो लेखिएको छ —

अनावृष्टिरासीत् पुरा द्वादशाब्दावधि श्रेष्ठनेपालपीठे यदातु ॥
तदा पीडिताः पीनताभावहेतोः स्वकार्ये जनाः क्लिष्टचित्ताः बभूवुः ॥४१॥

तदा बान्धवाख्येन दत्तेन मन्त्रप्रभावातितेजस्विना कामरूपे ॥
महामन्त्रजाप्येन मत्स्येन्द्र गत्वा समाराधितस्त्वं स्वभक्ते दयालुः ॥४२॥

स आचाचार्यवर्यस्ततः स्वप्नलब्धं वरं प्राप्य भावत्ककारुण्यदत्तम् ॥
त्वया बिभृता मानुषं रूपमच्छं सहायात्पुरः पीठनेपालमेव ॥४३॥

नरेन्द्राय भूपालवर्याय सर्व स्वदागातवृत्तान्तमाहाप्य सवम् ॥
नरेन्द्रस्तदाचार्यवाक्यं निशम्य क्षणात्तोषयुक्तोभवद्विस्मितश्च ॥४४॥

तदभ्यन्तरे मानुषं रूपमाशु त्वया त्यक्तमन्तर्हितस्त्वं क्षणेन ।।
द्विरेफो हि भूत्वागमिष्यामि चेति त्वदाज्ञामवाप्याथ राज्ञे ब्रुवीत् सः ।।४५।।

यदा भ्रामरं रूपमाप्त.स रात्रौ त्वया दृश्यते चेत्तदा धारणीयः ।।
निशम्येति तद्वाक्यमेवं प्रचक्रे नरेन्द्रोपि तस्मन् क्षणे वृष्टिरासीत् ।।४६।।

सुवृष्टया तया तत्प्रजास्तुष्टचित्ता गतक्लेशता पीनकाया बभूवुः ।।
ततो बान्धवाद्ये न दत्ते न चेमां सुमूर्ति प्रतिष्ठाप्य तन्त्रोक्तमन्त्रः ।।४७।।

सपर्याविधि शिक्षयित्वा जनेभ्यः कृतं विघ्नशून्यं सदा पीठमेतत् ।।
नरेन्द्रावनीशः स आचार्यवर्यः सुलीनत्वमाप्तौ सुमूर्तावथास्याम् ।।४८।।

( नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको ६५५८ नं. को हस्तलिखित पुस्तक 'मत्स्येन्द्रनाथपञ्चशतक'बाट सम्पूर्ण यो 'मत्स्येन्द्रपञ्चशतक' पुस्तक योगी शङ्करनाथद्वारा प्रकाशित भएको छ । )

[ उहिले यो असल नेपाल पीठमा १२ वर्षसम्म खडेरी परेको थियो । त्यसवेला प्रजाहरू पिरिएर ज्यादै दुब्लाएका थिए ।।४१।।

हे मत्स्येन्द्रनाथ ! त्यसवेला आफ्ना भक्तमाथि दया राख्ने हजुरलाई मन्त्रका प्रभावले ज्यादै क्षैजिला भएका महामन्त्र जप्ने बान्धवदत्त (बन्धुदत्त) ले कामरूपपीठमा गएर आराधना गर्नु भयो ।।४२।।

हजुरको निगाहबाट सपनामा वर पाएपछि, बन्धुदत्त आचार्य सुन्दर मनुष्यको रूप लिनुभएको हजुरसंगसंगै नेपाल फर्कनुभयो ।।४३।।

हजुर आउनुभएको सारा वृत्तान्त बन्धुदत्त आचार्यले नरेन्द्रदेव राजालाई बताउनुभएपछि नरेन्द्रदेव राजा एकछिन जिल्ल पर्नु भयो । अनि ज्यादै खुशी हुनुभयो ।।४४।।

एकै छिनमा हजुर मनुष्य रूपलाई त्यजेर अन्तर्ध्यान हुनुभयो । ' म भमराको रूप लिएर आउनेछु, भन्ने हजुरको त्यो आदेश आचार्य बन्धुदत्तले राजालाई बताउनुभयो ।।४५।।

राति जुनवेला भमरालाई देखे पनि समातिहाल्नुपर्छ ' भन्ने बोली सुनेर राजाले त्यसै गर्नुभयो । अनि एकै छिनपछि वर्षा भयो ।।४६।।

राम्ररी वर्षा भएपछि सारा प्रजाहरू खुशी भए । पीर नहुनाले मोटाउन पनि लागे । आचार्य बन्धुदत्तले अनि पछि तन्त्र मन्त्रको अनुष्ठानद्वारा हजुरको यो असल मूर्त्तिलाई स्थापना गर्नुभयो ।।४७।।

प्रजाहरूलाई पूजाविधि सिकाएर यो नेपाल पीठलाई विघ्न नभएको पारेपछि राजा नरेन्द्रदेव तथा आचार्य बन्धुदत्त हजुरको यही असल मूर्त्तिमा लीन हुनुभयो ।।४८।। ]

" तस्मिन् विहारे श्रीनरेन्द्रदेवराजा निवृत्तिधर्मपरायणो बभूव । येन श्रीबन्धुदत्ताचार्यस्योत्तरसाधकभूतेन पोतलकाचलाच्छ्री मदार्यावलोकितेश्वरो ललितपत्तनमानीतः ।। आद्वादशाब्दमनावृष्टयुपद्रवानि दूरीकृतानि ।। "

# राजा नरेन्द्रदेव र आचार्य बन्धुदत्तको प्राणत्याग

मत्स्येन्द्रस्य समा यात्रा नास्ति ब्रम्हाण्डमण्डले,

यति भनाई महायात्रा नेपालमा प्रख्यात भै गयो । यिनै ईश्वरका वाणीप्रमाण वैशाख महीनामा शिवकन पानी चढाउनु रीत नेपालमा भै गयो । यस धर्मले वर्षा सुफल भै रह्यो । मत्स्येन्द्रनाथकन प्रथम आकार बनाउंदाको स्थान चित्रकार बिधि गराउंदाको त्यस स्थानमा अद्यापि मृत्तिकाभूमिछ तापनि केही बीजको अंकुर भूमिबाट उब्जनन् । यस्ता प्रकारसंग चाहिंदो प्रबन्ध पुर्‍याइसक्याउप्रान्त लोकमा धन्य कहाया । अघि बन्धुदत्तले श्रीमत्स्येन्द्रनाथकन आकर्षण गर्दासमय राजामाथि लात दिंदा राजाबाट यस बौद्धाचार्यका गोडा तीन टुका गर्नु पाया हुंदो हो भन्न्या घयिया कुरो चिताया‍को थियो) बन्धुदत्तले पनि राजाले यस्तो ममाथि चिताउने भनी मनमाथि राख्याको थियो र सोही बहानाले ईश्वरको भक्तिले युक्त भै सरीरत्याग गरी श्रीमत्स्येन्द्रनाथका दाहिना पाउमा रहन गया । राजाबाट पनि मैले अघि घटिया कुरो चितायाथ्यां । सो कुरो गुरुले पनि मनमा लियाको रहेछ र उस बहानामा यिनले प्राण छोड्या त मैले पनि प्राणत्याग गरी जान्या योग्य हो भनी श्रीमत्स्येन्द्र नाथका भावभक्तिले प्राणत्याग गरी बाउ पाउमा बास रह्या । सोही कारण श्रीमत्स्येन्द्रनाथका दर्शन गर्दा सोही दुइ भक्तले युक्त छन् भनी चरणको नमस्कार गर्दछन् ।

अघि ललितपत्तन सहरमा लोकनाथ मीननाथ आदि देवताहरूको यात्रा वर्षप्रति गर्दथ्या । पछि श्रीमत्स्येन्द्रनाथ ल्याया‍उप्रान्त एक मीननाथको यात्रामात्र थामी अरू यात्रा मासी

मत्स्येन्द्रस्य समा यात्रा नास्ति ब्रम्हाण्डमण्डले

भनाई महायात्रा गर्‍या । श्री राजा नरेन्द्रदेवले ठूलो यश श्रीमत्स्येन्द्रनाथकन नेपालमा स्थिति गराया । मत्स्येन्द्रनाथका यात्राका विधि प्रबन्धका स्थिति गरी धन्य कहाई देहत्याग गरी श्रीमत्स्येन्द्रनाथका चरणमा लीन भै गया ।

---

(नेपाल राष्ट्रि । पुस्तकालयमा रहेको २७६ नम्बरको हस्तलिखित पुस्तकबाट)

[ त्यो विहारमा मोक्ष मार्गमा लागेका राजा श्रीनरेन्द्रदेव हुनुभया । आचार्य बन्धुदत्तको उत्तर साधक भएर उहाँ ले (नरेन्द्रदेवले ) पोतलक पर्वतबाट आर्यावलोकितेश्वर ( मछिन्द्रनाथ ) लाई ललितपुरमा ल्याउनु भया । बान्ह बर्षसम्म बर्षा नभएर परेका विघ्नहरूलाई हटाउनु भया । ]

यसरी राजा नरेन्द्रदेवले मछिन्द्रनाथलाई ल्याए भन्ने जनश्रुति चलेर आएको छ ।

शिवदेव पुस्ता ८ के भोगवर्ष २१४ कलिगतवर्ष ३७०५ जम्मा भोगवर्ष ४५४८

अस्य पुत्र श्रीराजा वरदेव● भोगवर्ष २३ यी राजाका पालामा शंकराचार्य स्वामी पुनर्वार आई आफूले राखी गयाको हिन्दू धर्म प्रशस्त हेरी फर्की गया। यिन राजाका पालामा बाबाले स्थिति गरी गयाका श्री मत्स्येन्द्रनाथका वर्षबन्धन पुऱ्याई चाहिन्या काम पुऱ्याई प्रजा पालन गरिरह्याका थिया। अघि देखिको हरिसिद्धि त्रिशक्ति भवानीका नाच लोप हुन लाग्याको जान्या मानिसहरु सम्मत गरी विधिपूर्वक फेरि प्रकाश गराया।

## इन्द्रचोकको निर्माण

अस्य पुत्र श्रीराजा शङ्करदेव भोगवर्ष १२ यी राजाले राजधानी सहर बनाउनको इच्छा गरी जग्गा विचार गरी हेर्दा बागमतीका उत्तर विष्णुमतीका पूर्व भागमा जग्गा ठहराई सहर बनाउनको सब सार्जाम तयार गरी विधिपूर्वक वास्तुकुम देवताको पूजा गरी श्री शाके ५२७ □फाल्गुण शुदि २ उत्तर भाद्र नक्षत्र सिद्धियोग वृष लग्न वर्गोत्तमांश द्वितीय द्रेष्काण यस दिन पुण्यवती नामको पुरी बनाउन आरम्भ गरी जग खनी बनाउन लाउँदा वर्ष ३ भित्र ५००० पाँच हजार घर सिद्ध गराया।

---

●यहाँ नरेन्द्रदेवपछि शिवदेव राजा भए। शिवदेवपछि उनका छोरा वरदेव राजा भए' भनी लेखिएको छ।

तर वि. सं. ७९० को द्वितीय जयदेवको पशुपतिको शिलालेखमा जयदेवले आफ्नो वंशवर्णन यसरी दिएका छन्।

... ... ... .. इतश्च नरेन्द्रदेवः

... ... ... ... ... ततो जातः श्रीशिवदेव इत्यभिमतो लोकस्य भर्ता भुवः॥

तस्माद् भूमिभुजोऽप्यजायत जितारातिरजय्यः परैः

राजा श्रीजयदेव इत्यवगतः श्रीवत्सदेव्यात्मज॥( पशुपतिको द्वितीय जयदेवको शिलालेखबाट )

[ यहाँपछि नरेन्द्रदेव (हुनुभयो)। उहाँबाट दुनियाँका मन परेका, राजा शिवदेव हुनुभयो. । पराक्रमी उहाँ राजाबाट शत्रुहरूले जितीनसक्ना, वत्सदेवीका छोरा राजा जयदेव जन्मनुभयो। ]

यताबाट नरेन्द्रदेवका छोरा शिवदेव, शिवदेवका छोरा जयदेव हुन् भन्ने कुरा देखिन्छ।

यसरी वंशावलीको यो वंशक्रम मिलेको देखिदैन ।

□यहाँ 'शाके ५२७ वि. सं. ६६२ मा राजा शंकरदेवले पुण्यवती सहरको जग खने' भनी लेखिएको छ। तात्कालिक प्रमाणबाट त्यसबेला राजा शिवदेव तथा महासामन्त अंशुवर्मा देखिन्छन्

शिवदेव पुस्ता ८ के भोगवर्ष २१४ कलिगतवर्ष ३७०५ जम्मा भोगवर्ष ४५४८

अस्य पुत्र श्रीराजा वरदेव● भोगवर्ष २३ यी राजाका पालामा शंकराचार्य स्वामी पुनर्वार आई आफूले राखी गयाको हिन्दू धर्म प्रशस्त हेरी फर्की गया। यिन राजाका पालामा बाबाले स्थिति गरी गयाका श्री मत्स्येन्द्रनाथका वर्षबन्धन पुन्याई चाहिन्या काम पुऱ्याई प्रजा पालन गरिरह्याका थिया। अघि देखिको हरिसिद्धि त्रिशक्ति भवानीका नाच लोप हुन लाग्याको जान्या मानिससंग सम्मत गरी विधिपूर्वक फेरि प्रकाश गराया।

## इन्द्रचोकको निर्माण

अस्य पुत्र श्रीराजा शङ्करदेव भोगवर्ष १२ यी राजाले राजधानी सहर बनाउनको इच्छा गरी जग्गा विचार गरी हेर्दा बाग्मतीका उत्तर विष्णुमतीका पूर्व भागमा जग्गा ठहराई सहर बनाउनको सब सार्जाम तयार गरी विधिपूर्वक वास्तुकूम देवताको पूजा गरी श्री श के ५२७ □फाल्गुण शुदि २ उत्तर भाद्र नक्षत्र सिद्धियोग वृष लग्न वर्गोत्तमांश द्वितीय द्रेष्काण यस दिन पुण्यवती नामको पुरी बनाउन आरम्भ गरी जग खनी बनाउन लाउँदा वर्ष ३ भित्र ५००० पाँच हजार घर सिद्ध गराया।

---

●यहाँ नरेन्द्रदेवपछि शिवदेव राजा भए। शिवदेवपछि उनका छोरा वरदेव राजा भए' भनी लेखिएको छ।

नर वि. सं. ७९० को द्वितीय जयदेवको पशुपतिको शिलालेखमा जयदेवले आफ्नो वंशवर्णन यसरी दिएका छन्।

... ... ... ... इतश्च नरेन्द्रदेवः

... ... ... ... ... ततो जातः श्रीशिवदेव इत्यभिमतो लोकस्य भर्ता भुवः ॥

तस्माद् भूमिभुजोऽप्यजायत जितारातिरजय्यः परैः

राजा श्रीजयदेव इत्यवगतः श्रीवत्सदेव्यात्मजः ॥( पशुपतिको द्वितीय जयदेवको शिलालेखबाट )

[ यहाँपछि नरेन्द्रदेव (हुनुभयो)। उहाँबाट दुनियाँका मन परेका, राजा शिवदेव हुनुभयो, । पराक्रमी उहाँ राजाबाट शत्रुहरूले जित्तीनसक्ना, वत्सदेवीका छोरा राजा जयदेव जन्मनुभयो। ]

यताबाट नरेन्द्रदेवका छोरा शिवदेव, शिवदेवका छोरा जयदेव हुन् भन्ने कुरा देखिन्छ।

यसरी वंशावलीको यो वंशक्रम मिलेको देखिदैन ।

□यहाँ 'शाके ५२७ वि. सं. ६६२ मा राजा शंकरदेवले पुण्यवती सहरको जग खने' भनी लेखिएको छ। तात्कालिक प्रमाणबाट यसबेला राजा शिवदेव तथा महासामन्त अंशुवर्मा देखिन्छन्

उस समय इन्द्रचोक भन्याका टेबु दोभान भन्याको थियो । थोरै वर्षपछि संगम छाडी एक बाणसम्म टुडो सरी जाँदा बेलामा न्होंगलमा इन्द्रचोक भनी देश बसाया । पीठ श्मशान मेटीकन सहर बसाई बौद्ध मार्गका बौध्दाचार्यका सम्मतले ललितपत्तनका श्रीमत्स्येन्द्रनाथका यात्राका मतिले पूर्णावती सहरमा श्वेतरूप लोकेश्वर विधिपूर्वक स्थापना गरीकन स्वयम्भू काली पूर्ण काली कामनादायक गणेशकन प्रतिष्ठा गर्‍या । अघिदेखि चोभारका आनन्दादि लोकेश्वरको यात्रानिमित्त रथको आकार बनाई देवपत्तन सहरमा यात्रा गरी फर्काई लैजान्थ्या । यिनै आनन्दादि लोकेश्वर र पूर्णावतीपुरको श्वेतरूप लोकेश्वर दुवै साथै रथ आकार रथ बनाई चैत्र शुक्ल अष्टमीका दिन असनटोलमा राखी तीन दिनपर्यन्त यात्रा गर्दथ्या ।

# सात नगरको निर्माण

अस्य पुत्र श्री वर्द्धमानदेव राजा भोगवर्ष १६ यिन राजाले पनि फेरी थपी चार हजार घर बढाई पूर्णावती सहर बढाया ।

फेरी १५ वर्षपछि अस्य पुत्र श्रीबलिदेव राजा भोगवर्ष १२ यिन राजाले पनि सहर बढाउनको इच्छा गरी उत्तरदेखि दक्षिणतिर सहर बढाई बसाया । विशालनगर बिग्याउप्रान्त अन्यत्र जाई बस्याकाकन उज्जैनका मानिस झिकाई ज्ञानी पण्डित बुद्धिवन्त प्रभृतिसंग समत गरी नगरप्रतिष्ठा गरी देशमा प्रजाकन आनन्द दी प्रजाले यो नगरमा भुक्तमान गराया ।

---

... ... ... ... लिच्छविकुलकेतुभट्टारकमहाराजश्रीशिवदेवः कुशली ... ... ... ...श्रीमहासामन्तांशुवर्मा ... संवत् ५ २ ६ आश्वयुज शुक्ल दिवा —

(लेलेको शिलापत्रबाट । संपूर्ण यो शिलापत्र अभिलेख–संग्रह पहिलो भागमा प्रकाशित भएको छ)

[लिच्छवि कुलका झण्डा जस्ता भएका भट्टारक [गद्दीनशीन] महाराजाधिराज शिवदेव आराम हुनुहुन्छ । श्रीमहासामन्त अंशुवर्मा संवत् ५२६ [वि०स० ६६१] आश्विन शुक्ल ]

यताबाट वि. सं ६६१ मा राजा शिवदेव महासामन्त अंशुवर्मा देखिन्छन् ।

श्रीमहासामन्तांशुवर्मा कुशली ... ... ... ... संवत् ३० ज्येष्ठशुक्लषष्ठ्याम

[हाँडिगाउँको अभिलेखबाट लेवी १३ संख्या नोली ३५संख्या]

[श्रीमहासामन्त अंशुवर्मा आराम हुनुहुन्छ । संवत् ३० [वि.सं.६६३] जेठ शुक्ल षष्ठीमा ]

यताबाट वि. सं. ६६ १ मा महाराजाधिराज शिवदेव महासामन्त अंशुवर्मा देखिएकोले र वि.सं ६६३ मा महासामन्त अंशुवर्मा देखिएकोले वि.सं. ६६२ मा शङ्करदेव राजा थिए भन्ने कुरा मिल्न सक्दैन भन्ने देखिन आउँछ ।

यहाँपछि नेपाल मण्डलमा श्रीरुद्रदेव राजा आई राज्य गर्‍या भोगवर्ष २७ दिन राजाले कुभीतटपर्यन्त निष्कण्टक गरी राज्यभोग गर्‍या।

यिनको परलोक भयापछि फेरि अघिका राजाका सन्तान श्रीजयदेव राजा भया। भोगवर्ष ४२ दिन राजाले पनि ललितपत्तन पूर्ण बसी सहरको वास गरी नगर गुल्जार प्रजाप्रतिपालन गरिरह्याका थिया।

कान्छा आनन्दमल्ल वर्ष ३५ दाज्यूबाट २ सहरका भोग गराई आफू ज्ञानी पुरुषार्थी हुनाले नेपालका पूर्वभागमा आई अन्नपूर्णा देवीकन काशीदेखि आवाहना गरी ठूलो भक्तिले संयोग गरी सुनाइत पारा अघि ग्राममात्र भै रह्याको ग्रामवान् भक्तपुर नाम गरी भैरवनाथकन देशमध्य पारी १२००० बाह्र हजार का सहर कलिगत ४१३७ □जादा बनाया।

फेरि यी राजाले दाज्यूका बराबरि गरुला भनी सहर पूर्वभागमा पर्वतभित्र जाई श्रीचण्डेश्वरीका आज्ञा पाई बनेपुर (र अरु) नाम गरी देशरुक ७ गादा ठाउँ ठाउँमा बनाया। कोही ग्राम शास्त्रप्रसिद्ध नेपालका प्रयागसन्धि पनौतीग्राम नाला भगवती नाला संयुक्त कोही ग्राम नारायणसन्धि धौखेल, कोही ग्राम धनेश्वरीसन्धि खड्पु, कोही ग्राम चको ऋषिका आश्रमसन्धि चौकोट, कोही ग्राम वासीका पीठसन्धि साँगा यति सात प्रकार गरी देश बनाई भक्तपुर आई सब लक्षणले दर्बार बनाई रहँदाभया।

---

□यहाँ 'कलिगतवर्ष ४१६७ वि.सं. ११५३ मा आनन्ददेव राजाले एक ग्रामलाई भक्तपुर नाम गरी सहर बसाए' भनी लेखिएको छ। तर तलको प्रमाणबाट –

सम्वत् ४४ ।। ज्येष्ठमासे लिखितमिदमिति ॥ ॥ शुभमस्तु॥ श्रीभक्तपुराधिवासिनो भट्ट पण्डिताचार्यश्रीउदयपालसोमस्य पुस्तकमिदम् ॥

[नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको नं ८६३ को हस्तलिखित पुस्तक किरणतन्त्रबाट]

[सम्वत् ४४ [वि सं ९८१] जेठ महीनामा सारिएको हो। कल्याण होस्। भक्तपुरमा बस्ने भट्ट पण्डित उदयपाल सोमको यो पुस्तक हो]

यस बाट वि.सं ९८१ मा नै भक्तपुर नामकरण भइसकेको देखिन्छ। नेपालमा वि.सं ११५३ मा राजा हर्षदेव थिए भन्ने कुरा तलको प्रमाणबाट स्पष्ट हुन्छ।

ॐ योऽस्तु ॥ द्विशते सम्वत्चरेतीते सप्तदश सपूरतः।
फाल्गुणस्य तु शुक्लस्य उत्तमेषु त्रयोदशी
वारका पूर्वफाल्गुन्या ...श्रीनेपालस्य विजयराज्य महाराजहर्षदेवराजेषु

(राष्ट्रिय पुस्तकालयमा रहेको ४४४ संख्याको हस्तलिखित पुस्तक श्रीतत्त्वकुम्भबाट)

अस्य पुत्र श्रीबालार्जुनदेव राजा भोगवर्ष २१ यिन राजाले गाइ छोरा आफ्नी रानी सहितका नामले श्रीमत्स्येन्द्रनाथ युगलोकेश्वर भट्टारककन आफ्ना शिरको मुकुट मणि नवरत्न जड्याको मुकुट विधिपूर्वक पूजा मान्य गरी चढाया।

अस्य पुत्र श्री मानदेव १ श्री विक्रमदेव १ मानदेवले ललितपत्तनको राज्य गर्‍या। विक्रमदेवले पुर्णावतीको राज्य गर्‍या। अब ललितपत्तन सहर कान्तिपुर दुवैका मर्यादा मिलाई वृत्तान्त कहिन्छ।

श्री मानदेव भोग वर्ष ३६ यिन राजाले पनि नेपालमा दुई राजा भै आफूसमा मिली राज्य भोग गर्‍या।

# मणिगणेश आदि देवताको प्रतिष्ठा

अस्य पुत्र नरेन्द्रदेव भोग वर्ष १ यिनी राज्याभिषेक पाई चाँडै परलोक हुँदा श्रीगुणकामदेव नाम गर्‍याकाकन राज्याभिषेक दिया। अस्य भोगवर्ष ५१ यिन राजाका पालामा पंचनन्देश्वर संगम वाग्मती विष्णुमतीको संगम भै सूत सागर भन्याको थियो। यिन राजाका पालामा श्रीमन्मानेश्वरीका प्रसादले पंच कौमारी मतं देवी भनी मंगल देशका नायाटोल बनाई मूल स्थान नाम पुष्पका निमित्तले मालिन नाम गठ जात पखान गर्‍या। यिनीहरू गठ होइन। यहाँपछि ललितपत्तनका पश्चको राज कुलमा ६ चोक बनाई राख्याका श्री आदिशक्ति ईश्वरी प्रसन्न भै मानदेव राजाको भक्ति सेवादेखि प्रसन्न भै कुन्दानबाट श्रीआदिशक्ति दी पठाउँदा नेपालमा ल्याई श्री मूलछें भनी मूल आगममा स्थापना गरी शिवशक्तिले पूजन गरी मूलछें आगम भनी प्रख्यात गरी संसार प्रतिपाल गर्ना निमित्तले प्रबन्ध पुर्‍याई स्थापना गर्दाभया। यहाँपछि बौद्धमत शिवशक्ति दुवै मन्त्रका प्रमाणले रहस्य मूर्ति बनाई प्रतिष्ठा गर्‍या।

यिन राजाले फेरि खड्गयात्रा अघि नभयाको मूलछें आगम स्थापना गर्न पाउँदा दशमीका दिन निमन्त्रणा कम पूजा गराई आश्विन शुक्ल परेवाका दिन घटस्थापना गरी यवारोपण दश दिनका दशमीमा खड्गयात्रा गर्दाभया।

---

[संवत् २१७ [वि.सं. ११५३] फाल्गुन शुक्ल त्रयोदशी पूर्वफाल्गुनी नक्षत्र भएको दिन नेपालमा श्रीहर्षदेवको विजयराज्यमा]

यसबाट वि. सं ११५३ मा राजा आनन्ददेवले एक ग्रामको भक्तपुर नामकरण गरे भन्ने वंशावलीको यो कुरा नमिलेको देखिन्छ।

यहाँपछि मंकोबहाल भनी बनाई संसारमा वृष्टिका कारणले वर्षाकाललाई अनावृष्टि हुँदा कालमा पातालमार्ग बनाई लगनखेलमा महादेव वर्षेश्वर भनी स्थापना गरी शंखमूलपर्यन्त चारै दिशामा ईंट ढुङ्गाले रस्ता बनाई तीर्थ नागदह भनी बनाई चैत्यका प्रतिमा राखी मंकोबहाल भनी नाम राखी अनावृष्टि कालमा यसको विधि पुऱ्याई साधक जन ज्ञान पाउन्या गरी वर्षा शून्य भयामा वर्षा होला भनी साधक गुणी जनलाई भनी राख्या। यो कार्य सिद्धि गर्न निमित्त मणिगणेश भनी स्थापना गरी त्रिशक्ति गुप्त आगम स्थापना प्रतिष्ठा गऱ्या । यहाँपछि राजधानी माणिग्लभट्ट भनी मणिकुमार भनी नारायण स्थापना प्रतिष्ठा गरी एक कर्ष क्षेत्र तुषवर्ग गरी चोक बनाई राजस्थान बनाया। ठूलो कोटगृह भण्डारनिमित्त बनाया। पोखरी पनि बनाया । यस चोक र देवतालाई आसय जग्गा राखी पूजा पाठ पुऱ्याई सुखमा ऐश्वर्य पाउनुनिमित्त गऱ्या।

जुन मानिसले परन्तु चित्त राखी भक्ति गर्ला। उस मानिसलाई वैकुण्ठधाम प्राप्त होला। ईश्वरीमा लीन भै मोक्षपदवी पाउला। त्रिवेणी शंखमूल नक्सागर प्रभावती संगम ललितपत्तन सहर सन्मुख प्रवाह भै विराजमान भयाका छन्। जुन मानिसले अन्तकालमा यी तीर्थमा प्राण त्याग गर्ला। त्यसलाई विष्णुलोक प्राप्त होला। अथवा गरीब इत्यादि जनले यी तीर्थमा लैजान नसकी गृहमा प्राण छोड्ला सोकन पनि वैकुण्ठवास पाउला। यो तन्त्रका मतले बनाई राख्याको नगर छ डामर तन्त्रका प्रमाणले यो ललितपत्तन सहर बनाई चौबीस हजार अधिका गृहहरूसमेत चौबीस हजार भनी प्रख्यात गरी बनाया। यिन राजाले यस्ता प्रकारसँग कृति बनाई धन्य कहाया।

## कान्तिपुरनगरनिर्माण

अब पूर्णावती भन्न्या सहर पछि कान्तिपुर भनी प्रख्यात हुन्या सहरमा राजा हुन्याका वृत्तान्त कहिन्छ । बालार्जुनदेव राजाका पुत्र २ मध्ये मानदेव ललितपत्तनका राजा भया। भाइ कान्तिपुरका राजा भया । राजा श्रीविक्रमदेव भोगवर्ष ८ ६ यिन राजाले पनि नेपालमा दुइ राजा भै देव देवताको सन्मान गरी आफुसमा मिली राज्य भोग गऱ्या।

अस्य पुत्र राजा श्रीनरेन्द्रदेव भोगवर्ष १ यिन राजाले राज्याभिषेक पाई चाँडै परलोक हुँदा भाई श्रीगुणकाम नाम गऱ्याका राजा भया। अस्य भोगवर्ष ५१ यिन राजाका पालामा अघि पंच-नन्देश्वर संगम बागमती विष्णुमतीको संगम भै मूलसागर भयाको थियो। यिन राजाले महालक्ष्मीका व्रत सेवा गरिरहँदासमय राजाकन सपनामा लक्ष्मीबाट आज्ञा प्रसन्न भइन्। हे राजन् तिमीले एक

पुरी बनाऊ कहाँ भन्या परापूर्वमा नैमुनि ऋषिले तपस्या गर्‍याको स्थान वाग्मती र विष्णुमतीको संगममध्ये विषयकान्तेश्वर विराजमान भयाका स्थानमा इन्द्रादि देवताहरू गुप्तरूपले आई लोकेश्वरका (दर्शन गर्ने) स्थान हो त्यसैं स्थान कान्तिपुरी नाम गरी देवीका खड्गाकारले पुरी बनाऊ। त्यस सहर मा नित्य लाख रुँयाको कारोबार हुन्याछ। यति भयासम्म म पनि त्यसैं सहरमा वास गरी रहुँला भनी स्वप्नविषे आज्ञा दिनुभइन् र गुणकामदेव बहुतै खुसी भै आज्ञा प्रमाण जग्गा ठहराई सहर पुरी बनाउना निमित्त अंगीकार गर्‍या। १८००० घर सहर कलिगत ३८२५ ☐जाँदा तयारी भयो। कर्णदीप समीप श्मशान पनि यथाक्रमले बसाया।

---

☐ यहाँ "कलिगत वर्ष ३८२५ (वि. सं. ७८१) मा राजा गुणकामदेवले सहर बनाए' भनी लेखिएको छ। तात्कालिक प्रमाणद्वारा वि. सं. ७८१ मा नेपालमा राजा गुणकामदेव थिएनन् भन्ने देखिन्छ।

दूतकश्चात्र युवराज श्रीविजयदेव। संवत् १४५ पौष शुक्ल दिवा तृतीयस्याम्।

(पाटन मीननाथको शिलापत्रबाट, भगवानलाल १४ संख्या नोली ८० संख्या)

[यहाँका मार्फत युवराज श्रीविजयदेव हुन्। संवत् १४५ (वि. सं. ७७८) पौष शुक्ल तृतीया]

यस शिलापत्रमा राजा जयदेवको नाम मेटिएर गएको छ। जयदेवका पिताशिवदेव को भृङ्गारेश्वरको शिलापत्रमा दूतक राजपुत्र जयदेव छन्। यस शिलापत्रमा दूतक युवराज विजयदेव छन्। विजयदेव जयदेवका छोरा हुन्। यसकारण यो शिलापत्र राजा जयदेवकै हो भन्ने देखिन्छ।

जयदेवको पशुपतिको शिलापत्र वि. सं. ७९० को हो।

यसरी वि सं. ७८१ मा नेपालमा द्वितीय जयदेव राज्य गरिरहेका देखिन्छन्।

गुणकामदेव राजा त अहिलेसम्म नेपालको इतिहासमा दुइवटा देखिएका छन्। ती हुन् वि. सं. १०४३ ताकाका पहिला, वि. सं. १२४२ ताकाका दोस्रा।

प्रथम राजा गुणकामदेवको पालाको वि सं. १०४३ को शिलापत्र, तथा वि. सं. १०४७ को ताडपत्राभिलेख पाइएका छन्। ती दुबै अभिलेख—संग्रह ६ भागमा प्रकाशित भएका छन्।

फेरी पूर्वदिशाका चण्डेश्वरी ल्याई देशमध्ये रक्षाकार गरी बसाया । फेरि देश पूर्वपट्टि नीलपीठ काली जगाई लुमडी नाम देशरक्षाकार गरी बसाया । तेही क्रमले देश पश्चिमपट्टि विष्णुमतीतिरमा रक्तकालीकन कंकेश्वरी जगाई देशका बाह्याभ्यन्तर गरी नवदुर्गा २ गण जगाई देश दक्षिणका मूल क्षेत्रपाल पचली भैरवकन जगाया । देश उत्तरपट्टि रक्षाकारी इन्द्रायणी युग्म २ लुनिपीठ नाम जय-जुपीठ बीजेश्वरी आसवालि सहित गरी जगाई बीजेश्वरी आकाशचारी देवी पुरापूर्वमा बृम्हपुत्री उडी जाई देवी तारा योगिनीमा मिलन गयाको हो । फेरि लोकेश्वरका यात्रा गरी चलाया ।

फेरि सहर उत्तर भागमा गोल गरी टवहिल नाम ग्राम बनाया । ७०० देवता छन् । बनियाँमा एक बनियाँ आयाको हो । यी राजाले चारै दिशा लडाइँ गरी धन दौलथ थरी ल्याई श्रीपशुपतिमा चढाया ।

# नेपाली संवत्को प्रारम्भ

अब फेरि ललितपत्तनतर्फ-राजा मानदेवका पुत्र ललितपत्तनका राजा भया । श्रीराजा राघवदेव भोगवर्ष ६ ३ यिन राजाले नीतिले प्रजाकन पालन गरिरह्याका थिया । यिन राजाका पालामा भक्तपुर ग्राममा एक सामुद्री शास्त्र जान्या थिया र सुवर्णआकर्षणका योग बार साइत

---

राजा द्वितीय गुणकामदेवको पालाको वि. स. १२४२ को लेख नेपाल राष्ट्रिय पुस्तकालयमा छ। सो यस प्रकारको छ।

सम्वत् ३०५ प्रथमाषाढशुक्लतृतीयायां आदित्यवासरे पुष्यनक्षत्रे राजा [धिराज प्र] मेश्वरपरमभट्टारकश्रीमद्‌गुणकामदेवस्य राज्ये लिखितमिति ।

(नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको ७०१ संख्याको "भट्टोत्पलकृता बृहज्जातकस्य संक्षेपटीका भन्ने ताडपत्रको पुस्तकबाट)

[संवत् ३०५ (वि. सं १२४२) अधिक आषाढ शुक्ल तृतीया आदित्यवार पुष्यनक्षत्रमा गद्दीनशीन महाराजाधिराज गुणकामदेवको राज्यकालमा लेखियो ]

यताबाट "वि. स. ७८१ मा गुणकामदेव राजा थिएनन् । वि. सं. ७८१मा राजा जयदेव थिए । प्रथम गुणकामदेव राजा वि. सं. १०४३ तिर द्वितीय गुणकामदेव राजा वि. स. १२४२ तिर नेपालमा राज्य गरिरहेका थिए भन्ने स्पष्ट देखिन्छ ।

ठहराई आफूले जान्याको शास्त्रप्रमाण स्थानसमेत जानी थोरै मानिसहरूकन गुप्तसंग विष्णुमतीको र भद्रमतीको संगम लखुतीर्थमा जाई बालुवा उठाई बोकी सरासर आऊ भनी पठाया। ती भरिया-हरूले ती जान्या जनले अन्हाई पठायाबमोजिम बालुवा बोकी आउँदा बेला बाटामा कोही एक चतुर मानिस कान्तिपुर सहर हजार घर नपुग्दा अघिका कान्तिपुरवासी साखवा नाम गन्याको शूद्र जातले भक्तग्रामवासी भरियाहरू विष्णुमतीसम्म आई बालुवा बोकी भक्तग्राम लैजान किन लिन आया, मनमा केही कारण निश्चय होला, भनी ठहराई भरियाहरूकन बहुतै सन्मान गरी बुझाई घरमा लगी ती भरियाहरूकन तृप्त गरी खुवाई मलाई पनि बालुवा चाहिन्या थियो। भरियाबिना ल्याउन सक्याको छैन। तसर्थ यस बालुवा मेरा घरमा खन्याई फेरो विष्णुमती जाई बालुवा बोकी लैजाऊ भनी ज्यालासमेत दी अनेक तरहसंग बुझाउँदा ती विवेक नभयाका भरियाहरूले बढ़िया भन्यो क्या होला भनी बालुवा साखवाका घरमा खन्याई फेरि विष्णुमती जाई बालुवा उठाई बोकी भक्तग्राम लग्या।

यो भेद साखवाले बाहेक अरूले जान्याको थिएन। ती भरियाहरू दोस्राफेर लिन जाँदा सुवर्ण सिद्धिको साइत टरी गयाको हुनाले भक्तपुर राजधानी सहर लग्याको बालुवाको भारी जस्ताको तस्तै रह्यो र त्यो शास्त्रीका मनमा यस्तो आयो कि मैले धेरै वर्षसम्म मिहिनत गरी निश्चय मानी ठहराई पठायाको यस शास्त्रले मलाई बहुतै शरम पान्यो। झूट रहेछ भनी दिक्क भै सुवर्ण आकर्षणका पुस्तकलाई आगामा जलाइदियो। यस कुराको अर्थ साखवाले बाहेक भक्तपुरका भरियाहरू उसका घरमा आउन्या जान्या मानिस कसैले पनि बुझ्न सकेनन्। साखवाका घरको बालुवा चौथा दिनमा सबै सुवर्णसिद्ध भै गयो।

ताहाँ उप्रान्त साखवा बहुतै ज्ञानी हुनाले मनमा यस्तो विचार गन्यो कि भक्तपुरवासी जनले शास्त्रका प्रमाण विचार गरी सुवर्णसिद्ध को साइत योग ठहराई लिन पठायाको धनकन मैले भरियाहरूलाई सन्मान गरी बुझाइ आफ्नू गन्याँ। अब यो धनलाई राखी छोड्नको केही प्रयोजन छैन चाँडै यश धर्म कीर्तिमा ल्याउन्या हो भनी यस्ता तरहसंग विचार गरी सबै धन सुवर्ण खर्च गरी यो नेपालका मानिस प्रजाहरूको ऋण कसै शेष नराखी तिरी नेपाल संवत् नाम गरी संवत् फरायो [*] साखवा जातमा शूद्र थियो तापनि बुद्धि बडो हुनाले नेपाल पुरीमा ठूलो जस प्रख्यात गरी श्री पशुपतिनाथका दक्षिण दर्वाजासन्मुख आफ्नू शिलामूर्त्ति बनाई स्थापना गरी अन्तमा उद्धार भै गयो।

---

[*] यहाँ राजा राघवदेवको पालामा साखवाले नेपाल संवत् चलाए भनी लेखिएको छ। राजा राघवदेवको पालामा नेपाल संवत् चल्यो भन्ने तात्कालिक प्रमाण अहिलेसम्म पाइएको छैन। अनुश्रुति भने 'राजा राघवदेवको पालामा नेपाल संवत् चल्यो' भन्ने पाईन्छ —

# नान्यदेवले नेपाल उपत्यकामा राज्य गरे भन्ने अनुश्रुति

इन्दुश्च सोमवसुसंमितशाकवर्षे
तच्छ्रावणस्य धवले मुनितिथ्यधस्तात्
स्वातौ शनिश्चरदिने रिपुमर्दलग्ने
श्रीनान्यदेवनृपतिर्विदधीत राज्यम्

शाके संवत्को ८११ वर्ष जाँदा नेपाली संवत्को १०(९) वर्ष जाँदा यिनै जयदेव मल्ल आनन्द मल्लका पालामा दक्षिण कर्णाटक देशदेखि नान्यदेव राजा आई यो नेपालमा प्रवेश गरी हिमाचु देवी स्वेष्टदेवतासहित गरी आई नेपालका राजाहरूसित लडाइं गरी जिती ती राजाहरूकन भगाया। ती मल्ल राजाहरू भागी तिर्हुतमा बस्न गया। यी कर्णाटकका राजाका सैन्यमा धेरै जातका मानिस साथ थिया। नायर देशका बासिन्दा नेवारहरू ब्रम्हपुत्र क्षत्रीजातिदेखि उत्पन्न भयाका जात आचारहरू आदि अनेक जातका मानिस थिया। यी राजाले राजधानी सहर भक्तपुर गरी बास गरी तीनै सहरका राजा भै रह्या॥ राजाका नाम नान्यदेव भोगवर्ष ५० यिनै राजले नेपालमा शाके-संवत् ल्याई चलाइदिया। अस्य पुत्र गांगदेव वर्ष ४१ अस्य पुत्र नरसिंहदेव वर्ष ३१ अस्य पुत्र शक्तिसिंहदेव ३९

… … … … नेपालमा राघवदेव हुँदा शाक्

आठसौ दुवै ८०२ वर्षपछि फिराया।

[नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको २७९३ संख्याको नेपाली भाषामा श्लोकबद्ध ग्रहगौरव भन्ने अप्रकाशित पुस्तकबाट ]

वंशावलीकारले यहाँ शाके संवत् ८११ वि.सं. ९४६ मा नान्यदेव तीनै सहरका राजा भए भनी लेखेका छन्, तथा नान्यदेवपछि उनका सन्तान रामसिंहदेव सम्मको राज्यभोगवर्ष जम्मा २१९ वर्ष भनी लेखेका छन्। यहाँ वंशावलीको भनाईअनुसार नान्यदेवका सन्तान रामसिंहदेवसम्म जम्मा ९४६ + २१९ = वि. सं. ११६५ तिर हुनुपर्नेमा वंशावलीकारले 'रामसिंहदेवको पालामा ४३५९ कलिवर्ष (वि. सं. १३१५ ) मा मुकुन्दसेन राजाले युद्ध गर्‍या' भनी लेखेका छन्।

यसरी यहाँ डेढ सय वर्षको फरक परेको छ।

यस विषयमा वंशावलीमा लेखिएको "इन्दुश्च सोमशशिसम्मितशाकवर्षे" यो पाठ मिल्दैन, नन्देन्दुशून्यशशिसम्मितशाकवर्षे" यो पाठ मिल्छ भनी सूर्यविक्रम ज्ञवालीले लेख्नुभएको छ

( हेर्नुहोस् नेपाल उपत्यकाको मध्यकालीन इतिहास २८ – ३३ पृष्ठ )

# नेपालमा मुकुन्दसेनले आक्रमण गरे भन्ने अनुश्रुति

अस्य पुत्र रामसिंहदेव वर्ष ५८ यिन राजाका पालामा पश्चिम पाल्पा देशदेखि कलि ४३५९ मा मुकुन्दसेन नाम गन्याका बडो बीर राजा सवा लाख लस्कर साथ गरी यस नेपाल पुरीमा प्रवेश गरी नेपालका राजाहरूसित ठूलो अति कठोर युद्ध गन्या । दुबै तर्फका सैन्य धेरै मन्या । परन्तु सेन राजाले नेपालको राजाको लस्कर घेरैकन मारी जिती भगाया । सबै सहरमा बेनीतिसित प्रजाहरूकन दलमल गरी लुटपीट गरी मूला उखेली खाडल खनी राखी थान सबै काटी कुटी कुनियो [कुनिउ] लाई ठाउँ ठाउँका देवताहरू भंग गरी नाडी पाँचो मछिन्द्रनाथका जात्रामा निकासिराख्न्या भैरवका मूर्ति उखाली [1] आफ्ना स्वदेश पाल्पा नाम बुटौलो देश पठाइदिया अद्यापि पाल्पामा छँदैछन्।

---

[1] वंशावलीकारले यहाँ ' वि.स' १३१५ मा पाल्पाका राजा मुकुन्दसेनले नेपालमा आक्रमण गरी उत्पात मचाए " भनी लेखेका छन् । पाल्पाका प्रसिद्ध राजा मुकुन्दसेन वि. सं. १६०० ताकाका हुन् ।

वि सं १३१५ मा मुकुन्दसेनले नेपालमा आक्रमण गरे भन्ने कुराको प्रमाण नेपालको इतिहासमा अहिलेसम्म पाइएको छैन ।

वि. सं. १३४४, १३४५, १३४६ मा पश्चिमबाट जितारिमल्लले नेपाल उपत्यकामा लगातार तीनवर्ष सम्म आक्रमण गरेका थिए । गाउँहरूमा आगो लगाइदिई हाहाकार मचाई जितारिमल्ल स्वदेश फर्केका थिए ।

( यस विषयमा विशेष कुरा इतिहास संशोधनको प्रमाण प्रमेय १४८ पृष्ठ हेर्नुहोस् )

वि. सं. १४०६ मा बङ्गालका सुल्तान शमसुद्दीनले ठूलो फौजसाथ नेपाल उपत्यकामा भयङ्कर आक्रमण गरेका थिए, त्यसबेला उनको फौजले शहरहरूमा आगो लाइदियो। पशुपतिनाथलाई तीन टुक्रा पारिदियो । स्वयम्भू चैत्य भत्काई त्यहाँ भएको धन लिई त्यहाँ आगो लाइदियो ।
उपत्यकाका शासक र दुनियाँहरूले शमसुद्दीनको फौजसंग सोझै मुकाबिला गर्न नसकी आफ्नो संरक्षण गर्नतिर लागेका हुँदा मुसलमानी सैन्यले नेपाल उपत्यकाका तीनै शहर उजाड पार्ने अवसर पायो ।

[यस विषयमा विशेष कुरा इतिहास-संशोधनको प्रमाणप्रमेयको ९२-९६ पृष्ठ पढ्नुहोस् ।

यसरी प्रमाणद्वारा सिद्ध भइसकेको नेपाल उपत्यकामा जितारिमल्लको आक्रमण, सुल्तान शमसुद्दीनको आक्रमणको कुरालाई वंशावलीकारले यहाँ लेख्न सकेका छैनन् ।

यहाँ लेखिएको " मुकुन्दसेनले नेपाल उपत्यकामा आक्रमण गरी उत्पात मचाए " भन्ने कुराले जितारिमल्ल अथाशमसुद्दीनको आक्रमणलाई लक्ष गरेको हुनुपर्छ ।

यी मुकुन्दसेन राजाले नेपालका प्रजा वशमा राखी राज्यभोग गर्नाको बन्दोबस्त नगरी प्रजाहरूकन मार पीट गरी अङ्गादि काटी देवताको स्थान बिगारी मनग्य गऱ्या । यी सेन राजाका सैन्यमा खस मगर आदि पर्वतवासी थिया । यिनीहरूका मनमा दया धर्म नहुनाले नेपाल पुरीमा धेरै अकीर्ति गऱ्या र श्रीपशुपतिनाथ आदि सबै देवता कोप भै पशुपतिका अघोर मुखले विकरदन्त निकासीकन महामारी भन्याको संहारकारी देवी प्रकट गरी सबै लस्करमा प्रवेश गराई श्रीपशुपतिनाथबाट एक पलभित्रमा सबै लस्कर भस्म गराई सेन राजाका सब सेनालाई यमलोक पठाया । राजामात्र पूर्व दिशामा जाई पुग्या ।

यी मुकुन्दसेन राजाले नेपालमा प्रवेश गरी लडाइँ गर्दा मछिन्द्रनाथ लगनखेलका स्नान मण्डलमा थिया । धेरै सेनासाथ वैरी आयो भन्या सोहरा सुन्दैमा सबै यात्रा देखनकन गयाका मानिस भागी गया । मछिन्द्रनाथका साथ कोही मानिस थियानन् । उसतै बखतमा आफ्ना सैन्यलाई सहरतिर येन लाई मुकुन्दसेन राजा मछिन्द्रनाथ भयाका ठाउँमा पुगी आफ्ना घोडाको गलाको सिक्री माला झिकी उरालिदिदा मछिन्द्रनाथले सिर झुकाई आफ्ना गलामा पारी लिंदाभया । यसै कारण मुकुन्दसेन राजाले मछिन्द्रनाथको बडो प्रत्यक्ष मानी उनमाथि केही विघ्न सेन राज बाट हुन पाएन । त्यो सिक्री माला मछिन्द्रनाथका गलामा अद्यापि छँदैछ ।

यही समयदेखि नेपालमा खस मगरहरूको प्रवेश भयो । सिन्की हकुवा चावल पनि यही समय देखि बन्न गयाको हो ।

# भीमसेनको स्थापना

कर्णाटकको राजाहरूले पाँच पुस्तासम्म नेपालका भोग गरिरहँदा मुकुन्दसेन राजा आई अधिका राजकुल निर्मूल गऱ्याउप्रान्त नेपालमा कर्णाटकी राजाका वंश शून्य भै अरू कोही भयाका छैनन् भनी सुन्या र नुवाकोटवासी वैश्यहरू धेरै जम्मा भै आई सहरहरूमा राजा बहलाई धेरै जनाले भोग गऱ्या । कान्तिपुरमा त वैश्यहरू १२ ठकुरी कहलाइ टोल टोलमा एक एक राजा भया यिनै वर्ष श्रीभीमसेनले कान्तिपुरमा विराजमान गर्नाको इच्छाले दोलखादेखि आई × काठबहालको वैश्य ठकुरीका घरमा आई मनुष्यरूप धरी वैश्यका घरको कामकाज गरिरहँदा वैश्यकन देह प्रत्यक्ष देखाया र वैश्यले यी त केवल भीमसेन हुन् ममाथि बहुतै अनुग्रह गरी आयाका रह्याछन् भनी निश्चय

× वंशावलीकारले " दोलखाबाट आई पशुपतिनिर भीमसेनको प्रतिष्ठा भयो भन्ने कुरा माथि नै बताइसकेका छन् । त्यही कुरालाई यहाँ उनले फेरि दोहऱ्याएका छन् ।

( हेर्नुहोस् भाषावंशावली ( पहिलो भाग ) ( पृष्ठ ८२ )

ठहराई तोयूक्बा भन्न्या ठकुजुले नेपाली संवत् २९० मा बडो देवालय बनाई बडो मूर्त्ति बनाई चित्रकार भरी भीमसेनकन प्रवेश गराई विराजमान गराया ।

## इन्द्रजात्रामा देखिने मंजिपात राक्षस

फेरि यिनै समयमा कान्तिपुरका पश्चिमतिर कोही एक मञ्जिपात नाम जग्गा थियो । त्यहाँदेखि कोही एक राक्षस नित्य आई कान्तिपुरका दक्षिणपट्टि सहरका छेउ एक रञ्जितकार छिपानीसंग क्रीडा गरी जान्छ भन्न्या कुरा वैश्य ठकुरीहरूले सुन्या र बान्ह ठकुरीहरूले युक्ति गरी त्यस मनुष्यरूप धरी आउन्या राक्षसकन भेटी बुझाई सत्य कबुल्याई इन्द्रजात्रामा लाख्याको स्वरूपले मकुडो लगाई ठूलो यात्रा प्रतिवर्ष गराया । घर पनि बनाई मञ्जिपात नाम गरी राखी दिया । त्यस राक्षस त्यसै जग्गामा गुप्त रूपले प्रवेश गरी रह्याको छ । अद्यापि इन्द्रजात्रामा त्यस मञ्जिपात राक्षसका नामले यात्रा प्रतिवर्ष गर्दछन् ।

यही समयदेखि २२५ वर्षसम्म तीनै सहरका भोग वैश्य ठकुरीले गर्न्या । धेरै राजा हुना ले नाम लेखिएन । नेपालमा प्रतापी राजा छन्ज्याल नुवाकोटका पर्वतमा बसी देवी तैनाथी जस्ता भै रहन्या जब नेपालका राजालाई परचक्र आई मदत नदिन्या राजा दुर्बल हुंदा नेपालमा राजा शून्य हुंदा मौका हेरी अघि सरी नेपालको राज्य भोग गर्न्या कोही प्रतापी राजा आई जिरदा फेरि नुवाकोट जाई दबी रहन्या सबै वैश्य ठकुरीहरू लुवापनसंग राज्य भोग गर्न्या हुन् ।

## हरसिंहदेवले नेपाल उपत्यकामा राज्य गरे भन्ने अनुश्रुति

यहाँ उप्रान्त हरिसिंहदेव नाम राजा श्रीरामचन्द्रका कुलमा उत्पन्न भयाका सूर्यवंशी, यिनका पुर्खामा अयोध्या नगरीको राज्य भोग छुट्न गयापछि अन्यत्र जाई बस्या । उहाँबाट पनि नान्यदेव नाम भन्याका सूर्यवंशीले श्रीतुलजा भवानीकन पाई सिमरौन जङ्गलमा आई ठूलो मिहिनतगरी लंकाको राक्षसले रात्रिमा यथाक्रम गरी बनायाका गढलाई सिमरौन गढ नाम गरी राज्य गरिरह्याका राजाका पांचवा पुस्ताका राजा हरिसिंहदेव राजाकन श्रीतुलजा भवानीबाट मकन नेपालपुरीमा लैजाऊ भनी आज्ञा प्रसन्न हुंदा भवानीका आज्ञाप्रमाण नेपालमा प्रवेश गराया ।

बाणाब्धियुग्मशशिशाकवर्षे
पौषस्य शुक्लनवमीरविसूनुवारे ।
त्यक्त्वा स्वपट्टनपुरीं हरिसिंहदेवो
दुर्दैवदेवविपरीतगिरिं प्रवेश (विवेश) ॥

शाके संवत् १२४५ नेपाल संवत् ४४४ साल पौष मासका शुक्ल पक्ष नवमी तिथि शनिश्चर-वारका दिन आरम्भ गरी हरिसिंहदेव राजाले तुलजा भवानी सहित गरी नेपालपुरीमा प्रवेश गरे राजधानी सहर भक्तपुरमा गन्या । यिन राजाका साथ ब्राम्हण अचार नेवार वैद्य खड्गी तेली रजिक यी ७ जात र सुवार ज्यापूहरू संग थिया । तुलजा भवानीका कृपाले भक्तपुरवासी वैश्य राजाले आफ्ना गादीकन सौंपी राज्याभिषेक दिया ।× फेरि तुलजा भवानीकन दर्बारभित्र पारी देवालय बनाई विराजमान गराया । यही समय तुलजा देवीकन हेर्नाको इच्छाले बडो दल जम्मा गरी भोट्याहरू आउँदा बडो दल थुम नाम गरी थुंको बसाया । परन्तु केही सीप नलाग्दा फर्की गया । थुंको अद्यापि छँदैछ ।

यिन राजासित सिमरौनगढ छाडी आउँदा संकष्ट कालमा आफूले कपडा धुन पर्दा रजिक नाम जात कोही देवपत्तन आई बस्या । यिनै राजाका वैद्यमा एक वैद्यलाई कर्कोटक नागले लैजाई नागिनीको

---

× यहाँ वंशावलीकारले ' हरसिंहदेवले वि. सं. १३८० मा नेपाल उपत्यकामा आई राजधानी सहर भक्तपुरमा बनाए " भनी लेखेका छन् । परन्तु त्यो कुरो तात्कालिक प्रमाणबाट पुष्टि हुन सक्दैन ।

विक्रमको चौधौं शताब्दीको उत्तरार्धमा सिम्रौनगढमा राजा हरसिंहदेव शासन गर्दै थिए । वि. सं. १३८१ मा दिल्लीका सुल्तान गयासुद्दीन तुगलक बङ्गालमा आक्रमण गरी दिल्ली फर्कंदा तिरहुतको बाटो गरी फर्केका थिए । त्यस बेला गयासुद्दीनले सिम्रौनगढमा आक्रमण गर्न लाग्यो भन्ने सुनी हरसिंह देव प्रजा उठाई लड्न तयार भई निस्के । यसैले तिरहुतका राजा हरसिंहदेवसंग गयासुद्दीन तुगलकको लडाइ पन्यो । गयासुद्दीनको फौजले सिमरौनगढ ध्वस्त पारिदियो । यति भएपछि हरसिंह-देवले भागी ज्यान जोगाए । केही कालपछि उनी नेपालको पहाडी भागमा पसे । दोलखातिर आउँदा तिंपाट ( तीन पाटन ) भन्ने ठाउँमा हरसिंहदेवको मृत्यु भयो ।

हरसिंहदेव पहाडतिर आउँदा नेपाल उपत्यकामा आरमल्ल र रुद्रमल्लको संयुक्त शासन चलिरहेको थियो । हरसिंहदेव यस बेला नेपाल उपत्यका नपुग्दै तीन पाटनमैं मरेका हुँदा उनको यस आगमनले नेपाल उपत्यकाको राजकाजमा तत्काल केही परिवर्तन ल्याएन ।

( यस विषयको प्रमाणपङ्क्तिको विशेष कुरा इतिहास-संशोधनको प्रमाण प्रमेय २३२-२३६ पृष्ठमा पढ्नुहोस् )

नेत्र रोगको औषधि गराया। त्यस वैद्यको औषधिले नागिनीको नेत्ररोग आराम गर्दा नाग खुशी भै गुण्डी जन हो भनी ठहराई वैद्यकन खुशी गराई शेष नारायणसन्धिमा बसाया।

यी राजा बाटोमा सिमरौनगढ छाडी चाँडै आउनुपर्दा नित्य बलि दिनकन अड्कन जाँदा तुलजा देवीका आज्ञाप्रमाण खोज्न जाँदा जङ्गलमा महिष भेट भयो र समाती ल्याई बाँधी पूर्व दिशाकन द्वार पारी दिशा फेर्न्या ज्यापूनाई ल्याई उसका हातले देवीकन रक्त चढाउन लाया र खड्गी जात हुन गयो।

यहाँदेखि तुलजा भवानीकन प्रतिवर्ष महिषमांस प्रशस्त गरी चढाई प्रसाद गरी मांसभोग गरी चलाया। नेपालवासी नेवारहरूले महिषमांस जाहेरसंग भोग गर्दासमय एक कोही शिवदत्त मैथिल महापुरुष आई महिषमांस भोग गर्न्याले जनै धारण गर्न्याका कहीं देख्याको छैन भनी राजाकन सुनाउदा महिषमांस छाड कि जनै छाड भनी कर लाई रोजाउंदा ईश्वरीबाट प्रसाद गरी बक्स्याको मांसभोग त्याग गर्न नसकी जनैकन धारणा गर्न सब नेवारले छाड्या। नेवरवासी नेवारहरूको जनै अद्यापि छैंदैछ।

# श्रीतुलजा माईको उत्पत्ति

अघि हरिसिंहदेवका पुर्खा नान्यदेव नाम गर्न्याकाले श्रीतुलजाभवानीकन पाउँदाको विस्तार कहिन्छ। सूर्यवंशी राजाहरूका अयोध्या नगरीको राज्यभोग छुट्न गयापछि सूर्यवंशी राजाहरू कोही कोंकण देश मै बस्या नेवारहरूको आदिस्थान पनि त्यही देश हो। त्यहांबाट आई बान्ह मल्लारका अमलमा चन्द्रभागा नदीका किनारामा बस्या। जात सूर्यवंशी चन्द्रवंशी चौहान वैश्य कच्छर शूद्र ज्यापु, उहाँ यिनीहरूले तीन चार पुस्तासम्म बिताया। नेयार भन्याको देश अझसम्म चन्द्रभागा नदीका किनारामा छँदैछ।

यिनीहरूमध्ये सूर्यवंशी राजपूत नान्यदेव भन्याका २० वर्षका उमेर हुँदा दिल्लीमा आमा बाबु परिवार समेतलाई लीं गै आफूले दिल्लीका बादशाहको नोकरी गर्न्या। ५ ७ वर्षसम्म बादशाहका नोकर भै बस्या। आमा बाबु स्वास्नी सबै दिल्लीमा मर्दा आमा बाबु स्त्रीहरूकन पालन पोषणनिमित्त नोकरी गर्न्याको हो। यिनीहरू यदि मरी गयापछि नोकरी गर्नको क्या प्रयोजन छ भनी चित्त उदास भै फकरी चालसंग रमंता भै अयोध्यामा आइपुग्या। सरयुका किनारामा फकिरी चालसंग बस्दथ्या।

एकदिन नान्यदेवलाई अधरात्रिमा यस्तो स्वप्न भयो कि एक अति सुन्दरी स्त्री आई म तेरा पुर्खाका ईष्टदेवता हुं। म सरयुमा जलभित्र छु। ऐले तं उठेर मलाई जलबाट झिक्। म बस्याका ठाउँमा भ्रमरहरूले ढाँपी राख्याको देख्लास् भनी यस्ता तरहसंग तुलजा भवानीबाट अनुग्रह गरी

स्वप्नविषे आज्ञा प्रसन्न हुंदा नान्यदेव जागी उसै घडी उठी सरयुका किनारामा जाई हेर्दा धेरै भमराहरूले एकत्र गरी छोपी राख्याको देख्दा उस ठाउमा गोता मार्दा हेर्दा सुनको डब्बाभित्र तुलजा भवानीको यन्त्र र बाहिरपट्टि पूजा पद्धतिको पुस्तकसमेत ताँबाकोपेटाराभित्र हालिराख्याको पाया। डब्बाका माथिबाट लेख्याको श्लोक–

रामो वेत्ति नलो वेत्ति वेत्ति राजा पुरोरवा
अलर्कस्य धनं प्राप्य नान्यदेवो भविष्यति'

यसको इतिहास यस्ता प्रकारसंग भै गयाको हो

अघि देवराज इन्द्रले महादेवसंग तपस्या गरी महादेवकन प्रसन्न गराउंदा तुलजा माईको मन्त्र-तन्त्र पद्धति इन्द्रकन दिया। रावणको पुत्र इन्द्रजित्‌ले इन्द्रकन जिती ती यन्त्र पद्धतिसमेत लङ्कामा ल्याई पूजा गरी नरबलिसमेत दी मानी राख्यो। रामचन्द्रले लङ्काको रावणलाई संहार गर्‍यापछि ती यन्त्र पद्धतिकन अयोध्यामा ल्याई पूजा गरी राख्यापछि रामचन्द्र स्वर्गारोहण हुँदा सरयुमा राखी गया।

त्यहाँ उप्रान्त नल राजाले ती यन्त्र पद्धति पाई पूजा गर्दा देवता प्रसन्न थिया। उनको प्राणत्याग हुन्या बखतमा रामचन्द्रले पनि सरयुमा राखी जानुभयो, म पनि त्यहीं राख्दछु' भनी राखी परलोक भै गया। फेरि पुरोरवा नाम राजाले थाहा पाई सरयुबाट झिकी पूजा मान्य गरी राख्या। उनले पनि अन्तकालमा 'अघि रामचन्द्रले नल राजाले सरयुमा राखी गया, अब मैले पनि त्यहीं राखीं जान्या हो' भनी सरयुमा राखी परलोक भै गया।

त्यहाँ उप्रान्त फेरि अलर्कले झिकीकन पूजा गर्‍या। अलर्क ब्रह्मज्ञानी थिया र निष्कामनासंग भक्तिभाव गर्दथ्या। बलिदान पनि दिदैनथ्या। यसैकारण देवताको प्रसन्नता भयाको नदेखी उनले पनि सरयुमा अघि लियाकै ठाउंमा राखिदिया। त्यो डब्बामाथि लेखियाको श्लोक अलर्कका पालामा लेखियाको हो। नान्यदेवले तुलजा भवानीका अनुग्रहले यन्त्र मन्त्र पूजा विधानको पद्धति पाई पद्धति माफिक देवीको पूजा गर्न लाग्या। अलिक दिनपछि पूजा गरिरहंदा आकाशवाणी भयो।

हे नान्यदेव, जनकपुरका निकट एक ठूलो जङ्गल छ। तैंले उहाँ मलाई लैजा। मेरो मन्दिर पनि उहीं बन्ला। तेरा भाग्यको प्रकाश पनि उहीं होला। यस्तो आकाशवाणी नान्यदेवले सुनी आश्चर्य मानी उसैघडी गमन गरी सरासर जनकपुरतिर आया त्यहाँ ठूलो जङ्गल थियो। जो त्यहाँ जान्थ्या, ठूलो कालसर्पले डसी मार्थ्यो। त्यसै कालसर्पका डरले त्यस जङ्गलमा कोही मानिस पस्न सक्दैनथ्या। नान्यदेवले आकाशवाणीको प्रतीत मानी आँटो सबैले मनाई गर्दा गर्दै उस जङ्गलका बीचमा आई पुग्या। त्यहाँ पत्थरको ठूलो चट्टान देख्या। रात पर्दा उसै पत्थरमाथि ईश्वरीकन पुकारी सुत्दा अर्ध—

रात्रिमा स्वप्न भया ।

अयोध्यामा सरयुका किनारमा स्वप्न हुँदा देख्याकी सुन्दरी स्त्री आई यो पत्थरमनि एक खड्ग छ । त्यो खड्ग झिकी हातले धारी जागी बस् , एक मणिधर सर्प आई मणि भूँमा राखी त्यो सर्प चर्न जाला । त्यो मणिनेरा गोबर होला । गोबरले मणि छोपिदियास् , जसै तँमाथि सर्प आइलाग्ला । तेरा पाला त्यसै बेला त्यस खड्गले प्रहार गरी त्यो सर्पको शरीर छेदन गर्न्यास् । यस ढुंगा मणितिर वरिपरि र इनार माझको समेत ७ इनारमा द्रव्यले भरिराख्याका छन् ; ती सब धन झिकी ली यहाँ मेरा मन्दिर बनाई बाह्र मल्लारबाट तेरा जात र स्वदेशीहरूकन झिकाई यहाँ सहर बनाई राज्य गर भनी ईश्वरीबाट स्वप्नविषे यस्ता तरहका बचनले आज्ञा प्रसन्न हुँदा नान्यदेवले भवानीका वचनप्रमाण काम गरी देवीका अनुग्रहले खड्गदान पाई धनको रखवारीनिमित्त रह्याको अति भयानक बलवान् सर्पकन सहजै मारिसकी हेर्दा त अयोध्यामा सरयुबाट निस्क्याको ढुंगामाथि लेखियाको श्लोक सर्पका शिरमा सुनका अक्षरले लेखियाको देख्या । त्यहाँ पछि निर्भयसँग ढुंगामनि खनी हेर्दा ७ इनारभरि द्रव्य राख्याको देखी मनमा बहुतै हर्ष भयो ।

# सिमरौन गढको निर्माण

त्यहाँपछि माथि भन्याका रजपूतहरू स्वदेशीहरूकन झिकाई धेरै द्रव्य खर्च गरी सहर बसाउनको आरम्भ गर्दा समय एक कोही राक्षस नान्यदेवका सेवक भयाकी एक स्त्रीसँग नररूप धारी आई नित्य शयन गरी त्यस स्त्रीसंग संभोग गरी जान्थ्यो । एकदिन त्यस नररूपधारी राक्षसको र त्यस स्त्रीको बातचीत हुँदा हाम्रा साहेबले बाह्र मल्लारबाट स्वदेशी हामीहरूकन झिकाई राजा कहलाई यस ठाउँमा सहर बसाउननिमित्त सब सर्जाम तयार गरिसक्या । कहिलेख्याल तयारी होला भनी त्यस स्त्रीले भन्दा त्यस राक्षस नररूपधारीले हामीले बनाउन पाया चाँडै एकै रातमा तयार गरिदिन्याथियौं भन्यो र त्यस स्त्रीले धेरै मानिसलाई धेरै दिनसम्म धेरै दुःख दिन्या काम छ निमी तयार गर्न सक्दछौ भन्या तयार गरिदेऊ भनी ढिपी गरी भन्दा लौ फलाना दिनका रात्रीमा बनाउँला । मानिसहरूमात्र रात्रिमा सबेरै सुत्नु कोही मानिसले थाहा नपावस् भनी प्रातकाल भयापछि उठी गयो । यसै माफिक त्यस स्त्रीले राजासग बिन्ति गरी । आजका रात्रीमा मानिसहरू सबैले सबेरै सुत्नु कोही उठी नफिर्नु भनी खबर सबलाई दिया । आज्ञाबमोजिम सब मानिस सबेरै सुत्या । यसै रात्रि त्यस राक्षसले लंकाका आफ्ना भाइ बन्धु हित चित्तका राक्षसहरू आफ्ना दाइभाइकन डाकी संगल्याई सहर बसाया । तयार हुन लाग्दा प्रातःकाल हुन गयो र चाँडै सिध्याई राक्षहरू आफ्ना आफ्न. स्थानमा गयाँ ।

# श्रीतुलजादेवीका नेपालमा प्रतिष्ठा

भोलिपल्ट नान्यदेवप्रभृति सब मानिस जागी हेर्दा अति सुन्दर जब्बर गढ तयार भयाको देखी सब मानिस आश्चर्य मानी और बहुतै खुशी भया । त्यहाँपछि त्यस शहरको नाम सिमरौनगढ भनी राखी नान्यदेव राजाले राज्य गऱ्या । यिनका वंशमा सिमरौनगढका राज्यभोग गऱ्याको पाचौं पुस्ताका राजा हरिसिंहदेवका पालामा ठूलो खर्च खजानाको सोहरा उठ्दा दिल्लीका बादशाहले त्यहाँ अम्बल गर्न खोज्दा हरिसिंहदेवलाई स्वप्न भयो ।

हे हरिसिंहदेव यहाँ म्लेच्छको उपद्रव होला । अब तँ मलाई नेपाल पुरीमा लैजा । अब उप्रान्त म त्यही बसूँला भनी तुलजा भवानीबाट यस्ता प्रकारको स्वप्न दिदा जऱ्या होकि नजान्या हो भनी दोचित्त भैं बस्या पछि नित्य पूजा यथाक्रमले गर्दाखेरी मलाई स्वप्नमा भयाको वचन सत्य हो मलाई चाँडै आजै ली नेपालतिरको गमन गर भनी यन्त्रबाट शब्द प्रकाश भयो र उसै बखत राजाले प्रस्थान गरी तत्तयारी गरी नेपालतिर चाँडो गरी आया । सिमरौनगढमा रहन्ज्याल बन्दोबस्तसित उही बेलामा नित्यपूजा बलिदान विधानप्रमाण गर्दथ्या । ईश्वरीका आज्ञाप्रमाण मानिसमात्र साथ ली धन दौलथ दर्बार त्यागी चाँडै आउँदा जङ्गलका रस्तामा नित्य बलि अड्कन जाँदा कस्ता नरहसंग पूजा गर्यौं हो भनी शंका सन्देह गरी बस्दा निद्रावस्था प्राप्त भै प्रातः कालमा जो जन्तु भेटछ, उसैलाइ समाती बलि दिनु भनी स्वप्न भयो जागी साथमा मानिसहरूकन उठाई बाटामा जाँदा प्रातः कालका बखत अर्ना भेटियो र त्यही अर्नालाई समाती बलिदान दिया । दुइ चार ज्यापूलाई बलि दिन लाया ।

त्यहाँ उप्रान्त ती ज्यापूहरू कसाईका जातमा दरया । बाटामा हडबडी पर्दामा ईश्वरीलाई भोग लाउनलाइ गाह्रो भयो र ईश्वरीबाट ती ज्यापूहरूमध्येमा कोही ज्यापूलाई चोख्याई नेम गराई भोग पकाउन ला भनी आज्ञा पाउदा ज्यापूलाई भोग पकाउन लाया । खालि देवतालाई मात्र चढिथ्यो । त्यही सुवार मध्यका ज्यापूहरूको थर भयो ।

# तुलजामन्दिर अगाडिका गणेशको उत्पत्ति

जसै हरसिंहदेव नेपालमा आइपुग्या । नेपालमा जयभीम भन्याका वैश्य कुलका राजा थिया । जयभीम राजाले हरिसिंहदेवलाई बहुतै आदर सम्मान गरी ईश्वरीको इच्छा प्रसन्न हुन्छ त्यहाँ मन्दिर बनाऊ भनी हुकुम दियापछि भादगाउमा एक दक्षिणी ब्राम्हण अग्निहोत्री थिया । तिनै ब्राम्हण बस्याको जग्गलाइ प्रसन्न गरी स्वप्न दिये ईश्वरीबाट त्या अग्निहोत्री ब्राम्हण बस्याको ठाउँ पवित्र भूमि छ मेरो मन्दिर त्यहि बनाउ भनी आज्ञा हुँदा जयभीम राजाले तिम्रा घरको साटा अर्कै ठाउं दिउँला द्रव्य पनि दिउँला, भनी त्यस दक्षिणी ब्राम्हणलाई अनेक संझाई बुझाया ।

हरिसिंहदेवले पनि धेरै द्रव्य दिउला भनी अनेक तरहसँग प्रार्थना गऱ्या । तैपनि ब्राह्मणले नमान्दा जय-भीम राजाले यस ब्राह्मणलाई हामीले यस्ता तरहसंग बुझाउँदा पनि मानेन त जाउ भित्र भनी जवर दस्तीसंग हरिसिहदेवलाई ब्राह्मणका घरभित्र हुल्दा त्यस दक्षिणी ब्राह्मणले गला सेरी आत्महत्या गरी मऱ्या र हरिसिहदेव राजाले मलाई ब्रह्महत्या लाग्यो । ब्राह्मणको रक्त पऱ्याको ठाउ देवताको मन्दिर कसो गरी बनाउं भनी फिक्री अपशोच गरी अन्न जलको त्याग गरी सात दिनसम्म देवतामाथि धर्ना दिदा त्यो ब्राह्मण त गणेश हो । त्यसको शिर अघि नै काटियाको छ । तसर्थ तलाई हत्या लाग्दैन, मेरो मन्दिर त्यही बना । ढोकामा त्यो ब्राह्मणलाई गाडी उसको समाधिमाँथि गणेशको मूर्ति स्थापना गरी अघि उसको पूजा गर्नु, पछि मेरो पूजा गर्नु भनी ईश्वरीको आज्ञा हुदा राजाले उसैमाफिक गरी मन्दिर बनाया । भादगाउका तुलजा भवानीको ढोकाका गणेश तिनै हुन् ।

## तुलजादेवीबाट वरदान

फेरि राजा हरिसिवदेवले ईश्वरीसंग प्रार्थना गरी मेरो कुलको राज्य कहाँसम्म रहला भनी विन्ति गर्दा २७ पुस्तासम्म तेरा सन्तानको राज्य रहला २८ पुस्ता पुग्यापछि पश्चिम दिसाबाट वैरी आई राज्य गर्ला भनी ईश्वरीको आज्ञा भयो । यही वचन आज्ञा भयाका भादगाउँ का दर्वारमा लेखियाको छदैछ । रणजित्मल्लसम्म २८ पुस्ता भएथ्यो । रणजितमल्लका राजकुमार जन्म हुँदा २९ पुस्ता लाग्यो । राज्य पनि गयो । हरिसिहदेव राजाकन केही दिन भयापछि द्विमाजु देवीबाट नान्यदेव नाम कर्णाटकी र जाका पालादेखिको धेरै धन सौंपिदिया र राजाले द्विमाजु देविकन इष्टदेवता भनी प्रतिवर्ष देवाली पूजा गरी चलाया ।

## नेपालमा भूकम्प

यी हरिसिहदेवका भोगवर्ष २८ अस्य पुत्र मतिसिहदेव वर्ष १५ वर्ष अस्य पुत्र शक्तिसिहदेव वर्ष २७ अस्य पुत्र श्यामसिहदेव वर्ष १५ यी राजाका पालामा नेपाल भरमा बडो उग्र दिन आई अधिक भाद्र शुक्ल १२ उत्तराषाढ़ा नक्षत्र सोमबारका दिन बडो उत्पात संकष्ट भूमिकम्प भयो र मछिन्द्र नाथका देवालय भत्की द्वार बन्द भै भयो । देश देशमा देवालय घर भत्की धेरै बिग्री मैदान भै गयो ललितपत्तन मा मतिकोभैरव तर लगनखेलको सहर युगल, त्यागल भन्याको जगा सबै मैदान भै गयो । कान्तिपुर मा पञ्चपुर भक्तपुरमा धर्मपुर खड्गपुर भन्याको जगा भत्को मैदान भै गयो धेरै दिनसम्म भूमिकम्प भूमि फाटी गाड भैमी धेरै खसि मऱ्या । जीव जन्तु असंख्य नाश नेपाल सवत् ५२८ ★ सालमा भैगया ।

★ वंशावलीकारले यहाँ "ने सं. ५२८ वि सं १४६५ मा नेपाल उपत्यकामा राजा श्यामसिहदेव

# धानको राशको थुम्को

उप्रान्त यी श्यामसिंहदेवका सन्तानमा पुत्र भएन र पुत्री नरेन्द्रलक्ष्मी, नृपेन्द्रलक्ष्मी यी मुनीन्द्रलक्ष्मी तीनमध्ये ज्येष्ठपुत्री नरेन्द्रलक्ष्मीकन अघि कर्णाटकी राजा नान्यदेवले तिरहुँतिर भयाका मल्ल क्षत्रीका सन्तानलाई झिकाई पुत्रीकन कन्यादान दी जुवाईकन राज्याभिषेक दी आफू थापाथली गै परलोक भै गया।

राजाका नाम जय भद्र मल्ल वर्ष १५ यी मल्ल राजा हुँदा नवदुर्गागण प्रसन्न भै अधिदेवि भक्तपुरका राजपदवी मल्लहरू हुन्, तिनै मल्लको सन्तान फेरि भक्तपुरको राजा हुन आया भनी देवीगण खुशी भै देश आग्नेय दिशामा धान झाँट्दा ठूलो राश अन्नको भैगयो। मानिसहरूले धेरै ओसार्दा पनि अन्नपूर्ण भै पछि थुम्को बनिगयो। अद्यापि थुम्को छदैछ।

---

थिए' भनी लेखेका छन्। तर तत्कालिक प्रमाणबाट यो कुरो मिल्दैन।

वि. सं. १४५२ मा स्थिति मल्लको मृत्यु भएपछि उनका तीन जना छोरा धर्म मल्ल ज्योतिर्मल्ल कीर्ति मल्लले मिली राज्य गरे। वि. सं. १४५९ मा नेपाल उपत्यकामा धर्म मल्ल ज्योतिमल्ल कीर्ति मल्लहरूको संयुक्त शासन चलिरहेको थियो।

(इतिहास-संशोधनको प्रमाण प्रमेयको १३४ पृष्ठ हेर्नुहोस्)

ने. सं. ५३१ वि. सं. १४६८ मा ज्योतिमल्ल राज्य गरिरहेका थिए भन्ने कुरा नेपाल राष्ट्रिय पुस्कालयमा रहेको एक पुस्तकालयबाट यहा पाइन्छ। सो यस प्रकारको छ।

श्रेयोस्तु संवत् ५३१ चैत्रकृष्णप्रतीपद्यान्तिथौ स्वातिनक्षत्रे शुद्धियोगे यथाकरर्णमुहूर्ते बृहस्पति वासरे मेषराशिगते चन्द्रमसि राजाधिराजपरमेश्वरपरमभट्टारकश्रीश्रीजयजोतिमल्लदेवस्य विजयराज्ये अमात्यजयब्रह्मकस्य पुस्तकोयम् कर्माचार्यतेजरामेण लिखितमिदं ॥ ॥

(ने.सं. ५३१ वि सं. १४६८ चैत्रकृष्ण प्रतिपदा तिथि स्वाति नक्षत्र शुद्धि योगमा पर्नु पर्ने करण मुहूर्त परेको बेलामा बृहस्पति बार मेषराशिमा सूर्य तुला राशिमा बसेको बेलामा राजाधिराज परमेश्वर परम भट्टारक श्रीजयज्योतिमल्लको विजयराज्यमा अमात्य जयब्रह्मको यो पुस्तक कर्माचार्य तेजरामले सारेको हो)

यसरी वि. स. १४६५ मा नेपाल उपत्यका श्यामसिंह राजा थिएनन्। स्थिति मल्ल छोराहरू राजा थिए भन्ने देखिन्छ

## स्थिति मल्लका पुर्खा

अस्य पुत्र नागमल्ल वर्ष १५ अस्य पुत्र जयजगत्मल्ल वर्ष ११ अस्य पुत्र नागेन्द्रमल्ल वर्ष १० अस्य पुत्र उग्रमल्ल वर्ष ११ अस्य पुत्र अशोकमल्ल वर्ष १९ यी राजाले ललितपत्तनका काथदेका कौमारी देवीको सेवा गरी देवीकन प्रसन्न गराई ललितपत्तनका वेश्य राजाहरू सबै जिती भोग गऱ्या। ललितपत्तनका वेश्य राजाले धेरै बहाल बनाई राख्याका छन्। देवपत्तनमा पनि वैश्य रानी [illegible] दुइ बहाल बनाई च्यासलटोल ललितपुरमा पनि बनाई देवप्रीति गरी धेरै गुठी पनि राखिदिया।

फेरि यी अशोक मल्लले यी कुमारी ठूली हुन् भनी सेवा गरिरहँदा कौमारीसन्धि बट्याकी वाग्मती मनमतीसंगम धार ली जग्गा फरक गरी छाडी उत्तरपट्टि जाई बस्दाभया। यिन राजादेखि गंगा बालकुमारी प्रसन्न हुँदा यी राजाकन बडो ज्ञानी पुत्र जन्म गराइदिया।

## राजा स्थिति मल्ल र उनको स्थिति

पुत्रका नाम जयस्थिति मल्ल वर्ष ४३यिन राजाले धेरै स्थिति बाँधिदिया। आफ्नू स्वक्षेत्र घर [illegible] नाम राखी किन्नु बेच्नु हुन्या रीत चलाया। फेरि चार वर्णभित्र छत्तीस जातका निर्णय गरी × जातअनुसार कर्मकाण्ड चलाउन लाया।

फेरि अघिका राजाहरूका पालामा हस्तप्रहार धिग्वचन यति दुइ दण्डमात्रै थियो अब उप्रान्त यस्ता नरहका दण्डले हुन्याछैन हस्तप्रहार धिग्वचनदेखि शरम मानी नरम हुन्याछैन भनी विचारमा ठहराई रुपैया लिन्या दण्डका मर्यादा गरी चलाया। फेरि राजाहरू परलोक हुँदा बेलामा छत्तीस जात जम्मा गरी जातअनुसार क्रमैसित राखी पलङ्ग बनाई राजाका मृतक शरीरकन राखी बोकी श्मशानमा लैजाँदा दीपक नाम रागले बाजा बजाई मृतकलाई अग्निसंस्कार गर्ने गरी रीत चलाया।

---

× "स्थितिमल्लले चार वर्ण छत्तीस जातका निर्णय गरे" भनी वंशावलीकारले यहाँ लेखेका छन्। परन्तु "यो कुरा होइन, स्थितिमल्लभन्दा धेरै अघिदेखि नै नेपालमा जातपात थियो" भन्ने कुरा श्रीगुरु पं. नयराज पन्तले सप्रमाण सिद्ध गरिसक्नु भएको छ।

(पूर्णिमा वर्ष १ अङ्क २ को १–१० पृष्ठ हेर्नुहोस्)

फेरि प्रजाहरू मरण हुँदा छत्तीस जातमध्ये कतिलाई काहाल बाजा बजाई जलाउनु भनी रीत चलाइदिया। फेरि आफ्ना आफ्ना जात विशेषका कार्यबिना अर्का जातको कार्य गर्न्यालाई दण्ड गर्नु फेरि साना जातहरूलाई पहिरन, गहना, घर यस्ता तरहको बनाई लाई बस्नु–

कसाईले बाहुाकट्या लुगा लाउनु। पोड्याले टोपी, लबेदा, जुत्ता, सुनका गहना नलाउनु, कसाई पोड्या चर्मकारले भिगटी छाना नछाउनु। आफू भन्दा ठूला जातलाई मान्न भन्या स्थिति बाँधी चलाया।

यस्ता तरहसंग अनेक रीति थिति नीति राखी जस कीर्ति चलाया। यिन राजाले थिति बाँधेको विस्तार कहिन्छ।

यिन राजाले स्थिति बाँधेको विस्तार कहिन्छ। यिन राजा जयस्थितिमल्लले बकनिह्म कुलका कीर्तिनाथोपाध्याय कान्यकुब्ज रघुनाथ झा, मैथिल श्रीनाथ भट्ट, महीनाथ भट्ट, रामनाथ झा यति ५ शास्त्रज्ञ बुद्धिमान् ब्राह्मणका बुद्धि मत सुनी लोप भै गयाको मत प्रख्यात गरी स्थिति बाँधिदिया। घरका बन्देज प्रमाण बूढी अंगुठा २४ अंगुलको एक हात आफ्ना हातको प्रमाण गरी बनाया। गल्ली घरको प्रमाण खा १ घरको चारैतर्फ नापी हात ९५ गल्लीभित्रका घरको प्रमाण खा १ को १०१ हात सहर पट्टिका घरको प्रमाण ८५ हात घरको यति ३ प्रकार गरिदिया।

ब्राह्मण क्षत्रिय वैश्य शूद्र यति चार जातलाई बास्तु प्रकरणका विचार अष्टवर्गका विचारले घर बनाउनु भनी चलाइदिया। वैश्य शूद्रलाई दैवज्ञका द्वारा जातकपद्धति दिन विचार गराउनु। ब्राह्मण क्षत्रियलाई ब्राह्मणका द्वारा गर्नयाउन्या रीत चलाया। खेतको प्रमाण अव्वल द्वयम् सिम चाहार यति ४ प्रकारको गर्न्या। चाहार खेत कर्ष १ को चारैतर्फ नापी १२५ हात, सिम नाम खेत कर्ष १ को प्रमाण ११२ हात, द्वयम् खेत कर्ष १ को प्रमाण १०९ हात अव्वल खेत कर्ष १ को प्रमाण ९५ हात बूढी औंठा २४ अंगुलका १ हातको प्रमाणले खेत नाप्न्या डाँगाको हात ७॥ गरी अघिको प्रमाण १०॥ हात भै रह्याको मेटी आफ्ना हातको प्रमाण गरी खेत नाप्न्या हंगुल क्षेत्रकारक नाम जात बनाया।

यहाँपछि तक्षकार भनी काँडाहरूमध्ये पिछु नाम घर नाप्न्या जात बनाया। फेरि नेवारलाई ३६ जात बनाई श्रेष्ठ भनी जातक नाम प्रख्यात गराया। जैसीका जात ८ आचारको जात ८ वैद्यको जात ४ श्रेष्ठका जात ३६ मध्ये नागाधारी १३ जात चन्दैरी सुवेरी भण्डारी आचार दैवज्ञ आदि १३ जात नागाधारी हुन्। ब्राह्मणका जात जति भयाका पञ्च गौड पञ्च द्राविड यति १० मूल जात हुन्। यसै मूलबाट ब्राह्मणका जातका नाम धेरै हुन गया। जैसी ब्राह्मणलाई अपूज्य गराया। ज्यापु जात ३२ कुम्हालका जात ८ कसाएले नङ काट्न्या जात ७२ समका जात ६४ बाडाका जात

ठहऱ्या । कुसुल्याका जात ४ पोड्याका जात ४ चर्मकार कुलु यति सब गरी जम्मा जात ७२५ ठहऱ्या । साना जातका हातबाट कुलनाश आयुर्दा क्षय होला । ठूला जातका छोरी नीच जातसँग जान्या साना जातका मानिस उत्तम जातका स्त्री संसर्ग गर्न्याहरूको स्थिति बाँधिदिया ।

त्यहाँपछि यिन राजाले जातनिर्णय क्षेत्रनिर्णय गृहनिर्णय जातमाला स्थिति बाँधी हिन्दू धर्म नेपालमा सच्याई आफ्नू जस नाम प्रख्यात गऱ्या । नेपाली संवत् ५१५ साल माघ शुक्ल १० रोहिणी-नक्षत्र वृद्धियोग बेहानका १३ घडी चढ्दा कलशस्थापनादि कोट्याहुति यज्ञ गरी ब्राह्मणलाई रोजगार बनाई जात विशेष जातअनुसार कर्मविधि रोजगार स्थिति बाँधी सुनाबिर्ता भनी बनाई दिया । साहू ऋणीलाई दिक भोग किल भन्न्या नाम गरी चलाइदिया । यति विधिपूर्वक पुऱ्याई नरकावली श्लोक लेखी ब्राह्मणका वाक्य सुनी प्रजा प्रतिपालन गरी गरीब निर्धो अनाथ दुःखी दरिद्रलाई दुःखमोचन गरी जातकर्मअनुसार घर खेत दी प्रजालाई सुख-भोग दिदाभया । श्लोक

आदित्यचन्द्रौ वलिनो नलश्च
द्यौर्भूमिरापो हृदयं यमश्च
अहश्च रात्रिश्च उभे च सन्ध्ये
धर्मश्च जानाति नरस्य वृत्तिम्

सत्यं हन्ति सुतं हन्ति हन्ति स्वर्गं पुराकृतम्
स्वर्गस्थापितरं हन्ति ये चरिष्यन्ति चान्यथा ।
स्वदत्तां परदत्तां च यो हरेत वसुन्धराम्
षष्टिवर्षसहस्राणि विष्ठायां जायते कृमिः ॥

यति श्लोक बनाई स्थिति बन्देजको परिपाठ यो नेपालभूमिमा चलाइदिया । यो स्थिति जसले हरण गर्ला । उसैलाई यही श्लोकका पदवी पाउनन् जाल्लाः स्थिति थाम्न्यालाई उत्तरोत्तर वृद्धि होला ।

फेरि यिन राजाले अधिकार राजाका पालामा हस्तप्रहार छिन्नवचन दुइ दण्ड गरथ्या । अब उप्रान्त यस्ता प्रकारका दण्डले हुन्याछैन भनी खतअनुसार दण्डा लिन्या मर्यादा चलाया । फेरि राजाहरू परलोक हुँदा बेलामा ३६ जात जम्मा गरी जातअनुसार कौसित राखी लैजादाका क्रमले उत्तम मध्यम अधम चिह्निन्छ ।

श्रीअशोकमल्ल राजाका छोरा श्रीजय मल्ल राजा बालक छँदा भिन्यानीतिरका छोरा ३ ले दुःख दिदा भागी पनौतीमा लुकिरहन गयाका थिया । राजचलन तीन भाइले गन्या । एक भाइका मनसुवा ठूलो पोखरी बनाउनु । एक भाइका मनसुवा सहरमा परखालले घुमाउनु । एक भाइका मनसुवा दर्बारचोक बढाउनु यति रकम चलाई पर्जा भारा बोलाउँदा भला २ आदमीले बोल्या । बाबु छोडी साना बाबुका वचनमा चल्नुपर्‍यो भनी प्रजालाई सामल दिन तयार पनि भया । तिनपछि प्रजा छुट्याउन पनि लाग्या । त्यस बीचमा भला आदमी सब बटोली हातमा १।१ तेगा ली छुरा उठी सबै प्रजा संग ली पनौतीमा राजा लिन गया । पछि राजा बोकी ल्याई दर्बारमा चलाया । श्रीजयस्थितिमल्लकन राजा थाप्या । भिन्यानीका छोरालाई तेगाले टाउको फोरी मान्या । त्यस बीचमा प्रजा सबै भै राजाछेउ भला २।४ आदमीले बिन्ति गन्या । हे महाराज हजुरका प्रजा हजुरका देशमा घर गरी बसी रह्याछौं बेच्नु, बाधा राख्नु, देव देवतालाई चढाउनु हुन्या गरी सुनाघर, सुनाखेत गरी प्रजालाई बक्सनुहवस् भनी बिन्ति गर्दा राजा प्रसन्न भै चलनमा काटा ढक पाथी कुरुवाले नाप जोख गरी किन्नु बेच्नु आफ्ना रकम नछोड्नु जात नछोड्नु सुनाघर सुनाखेत सुनाबारी गरी बक्स्यौं । ब्राम्हणले पूजा पाठ जजमानी चलाउनु । ब्राम्हणले बिराया भन्या तुह १००० अचारले (बिराया) ५०० गुभालले (बिराया) ५०० ज्यापूले (बिराया) २५ सुद्ध्यानीले (बिराया) २५ छिपानीले (बिराया) १२ नाउले (बिराया) १२ भाटले (बिराया) १२ काहालले (बिराया) १२ कुम्हालले (बिराया) १२ चित्रकारीले (बिराया) १२ कसाइले (बिराया) १२ पोड्याले (बिराया) १२दण्ड गर्नु, जजमानले बिरायो भन्या तुह १००० दण्ड गर्नु राजाले ब्राम्हणादि पोड्यापर्यन्त परापूर्वका रीतसंग मिलाइदिनु भनी स्थिति बाँधिदिया ।

सो स्थिति बाध्नालाई दिल्ली बादशाहलाई सौगात पठाई स्थिति गर भन्या हुकुम र सुनसिद्धि रुपैयाँ बनाऊ भन्न्या हुकुम औ खिल्लतसमेत पठाया । नेपालेश्वर जयस्थितिमल्ल नाउ गरी पठाया । त्यस दिनदेखि जयमल्ल नेपालेश्वर जयस्थितिमल्ल भनी नाउँ प्रख्यात भै गयो ।

नेपाली संवत् ५३६ □माघ कृष्ण २ रोजका दिन श्री ३ जयस्थितिमल्ल ठाकुरबाट स्थिति बाँधी

---

□ यहाँ वंशावलीकारले ने. सं. ५३६ वि. सं. १४७५ मा स्थिति मल्लले स्थिति बाँधे भनी लेखेका छन् , तर तात्कालिक प्रमाणबाट या कुरो मिल्दैन । ने. सं. ५१५ वि. सं. १४५२ मा नै स्थिति मल्लको मृत्यु भइसकेको थियो भन्ने कुरा नेपाल राष्ट्रिय पुस्तकालयमा रहेको एक पुस्तकबाट थाहा पाइन्छ । सो यस प्रकारको छ —

यातै कामशरैकभूनसंहते नेपालिके हायने
षष्ठ्यां भाद्रपदे ऽसिते रविदिने ऋक्षे तथा स्वट्टरि ।
मध्याह्ने स्थितराजमल्लनृपतिः स्वर्गाधिरोहं गतो
हाहाकाररवः सशोकवचनव्याप्तं प्रजानान्मुखम् ॥

बक्सनु भयामा अघिकोथिति रहदाके रि थितिबाधि बक्स्याको ब्राह्मणले यजमानीकाम क्षत्रियको र शुद्रभारोको जजमानकामगर्नु क्षत्रियले र शूद्र भारोले अरु बाट काम गराऊनु छैन शूद्र भारोले बेपार गर्नु चित्रकारले चित्रकार कामगर्नु सात्मीले तेलपेलनु छिपाले कपडारंगलाउनु भाटले नंबुरंगाउनु गठले र मालीले फुल बेचनु खुनलले डोलिबोक्नु जोगी दर्शन धारोले मागीखानु लोहकर्मिले ढुङ्गाको कामगर्नु दैवज्ञ जोशिले हेर्नु बानु लेखनु कुमालले भाडागर्नु टटिले धारबंनु कसाहिले रागोमार्नु मासुबेचनु नाउले कपाल खौरनु नंकाटनु भडेलले पाकगर्नु कसटले कासाको कामगर्नु तमोट्ले तामाको कामगर्नु बेन्याकबाडाले सुना चाँदिको कामगर्नु बज्राचार्य गुभाजुले देवप्रतिमाकोपूजा आजा गर्नु चित्रकारो साल्मी छिपा भाट गठ लोहकर्मि कुमाल नाइ-नौ यी नौजानको जजमानी गर्नु ॥ ॥

राजाले पञ्चप्रजाकन बाधिदियाको थिति सिपाहि लाई ढाल तरवार दिया प्रजालाई डोकोत्रोको गर्नु आफ्ना कर्ममा रहनु ब्राह्मणलाई सिपाहिले पाऊलागी गर्नु कल्याण स्वस्ति दीर्घायु ब्राह्मणले भंनु सिपाहि र नेवारले रामराम गर्नु यस्तै थिति बाधियाको हो।

नेपालमा ४ वर्ण छतिसजातलाई बाधिदियाको थिति पैल्हे मानिस जन्मदा सुढ्यानिलाई दिन्या दस्तुर च्यूरा कुर्वा १० चावल कुर्वा १० जन्मदा देखिनुवारन सम्ममा बालखलाई दियाको दाम सुढ्यानीको सुढ्यानी डाक्दा आयेन भन्या तुरु १२ दंड अरु सुढ्यानी डाकन जांन्यालाई आउन्यालाई ति दुबैलाई तुरु २४।२४ दंड जन्म भयाका दिन अजिमा आदिलाई सिन्दूर सुपारीको पोका चढाउनु नाता लाग्याकार इष्टमित्र लाइ पनि सिंदूरको पोकामा देबनालाई दक्षिणा समेत गुरु पुरोहित लाइ पनि अजिमाआदि लाई सिचुपालु चन्हाउनु दिनु दिन १।२ बिचार गरी बढिया दिनमा पीछिनीलाई डाकि नाल कटाउनु त्यसलाइ दस्तुर च्यूरा कुर्वा ५ चावल कुर्वा ५ पिछिनी डाकन जाँदा आयेन भन्या तुरु १२ दंड।

बालखजन्मदा चौथादिनमा गर्न्या अजिमा आदि लाई सिचुपालु चढाऊनु क्वाथ चढाउनु दिनु खुवाउनु हाँसमुगु चढाऊनु।

छैटका दिन फुपुले दीपमालालाउनु दीपमालामा गाजल थापी बालखका आँखामा गाजल लाइ दिनु सेतो भोटो पहेलो रुमाल मिमिचा अगुठि १ कुरुवा चासन्न एकपाथि तेल राखी लाइ दिनु पुरोहितले स्वहा स्वधा कर्म गर्नु दक्षिणा भेटि दाम ६। २४ पुरोहित डाकन जादा आयेन भन्या तुरु २॥ दंड अरु पुरोहित डाकि काम चलाउन्या आउन्यालाई तुरु ५।५ दंड हर्ष बढाई गाउन बजाउन दिनु चिपालु समेत अरु सबैको दामदी पठाउनु फुपुले पुत्र परिवार आउने लाई खुवाई पठाउनु फुफुलालाइ चोलादी बिदागरी पठाऊनु प्रोहितलाई सिधा दक्षिणा दिनु।

दसौं दिनमा नाउलाईडाकी कपालखौराउनु, नङकटाउनु जतीजति काममालाग्याका नाउनाउनी–लाई पेटभरिखुवाउनु, बर्षदिनको ठेक्वाली अड्क्यो भन्या नाउले आफ्नु बाली ली काम चलाउनु दिनुपर्न्यां ठेक नअड्कँदै चाहिन्या दिन, डाक्न जाँदा आएन भन्या तुरु १२ दण्ड गर्नु; आफ्ना नाउ छोडी अरु डाकी काम चलायो भन्या डाक्न्या आउन्यालाई तुरु १२ दण्ड गर्नु बर्षदिन सम्मको काम चलाउन्या काममा लाग्न्या नाउलाई काम सिध्याई चिउरा दिनु,

साँघटलाई लुगाधुन दिदा दस्तुर पाथो १ चिउरा दाम १४ नघर डाक्नजाँदा आएनभन्या तुरु ३ दण्ड गर्नु, आफ्नो छोडी अरु डाकीकामचलायो भन्या डाक्न्या आउन्या २ लाई तुरु ३।३ दण्ड गर्नु,सूतकभित्र बढ़िया दिन हेरी ज्योतिषीलाईडाकी चिन्हा लेखाउनु, दस्तुर दाम १२ चावल कुरुवा १ ज्योतिषीलाई दिनु, लेख्याका चिटा चिन्हा ज्योतिषीले सौंपदा दाम २ दस्तुर दिनु, ब्राम्हण रजपूत-को १२ दिनमा न्वारान्, अरु जातको दसौं दिनमा न्वारान् प्रोहितले कलशार्चन गराउनु, नाउँ ठहराई पञ्च सुगन्धले जन्मपत्रिका लेखाउनु, सुनाउनु, सुड्यानीले बालखलाई स्नान गराउनु, घृतप्राशन-गराउनु, मिमिचा लुअंगु मिमिचाजं माबालं बुकुवा तेल लगाइदिनु, रुमाल दिनु, कलश दि अजिमा र काममा लाग्न्या मानिसलाई सिन्चु पालु चढाउन दिनु, माइतीबाट आयाको टीकाको सराजाम सौंपनु माइतीबाट आउन्या मानिसलाई सिन्चु पालु र पेटभरि खुवाई दाम २ दी बिदा गराउनु, दोबाटोमा अजिमाकन ली फाल्नु, त्यस दिनदेखि बालखलाइ मह घोटी औषधी चल्यो ।

तेस्रा मैन्हा लाग्यापछि बढ़िया दिनमा कलशार्चन गरी सुलग्नमा बालखलाइनरिवलकोबरी कपूर गुलियो फल उखु जेठाले (थकालिले) खुवाउनु, सुड्यानीले बलि फाल्नु, ब्राम्हणलाइ सिधा दक्षिणा दी बिदा गराउनु, माइतबाट आउन्यालाई खुवाइ दाम २।२ दस्तुर दी बिदा गराउनु, त्यस दिनदेखि बालखलाइ फल मात्रचल्यो ।

छ मैन्हा लाग्यापछि बढिया दिन देखाई बढ़िया लग्नमा ब्राम्हणले कलशार्चन गराउनु । चौरासी जातका व्यञ्जन शाली धानका चावल कुरुवा १ का भात बडा थालमा निगोटीसमेत राखी पस्काउनु, टक्रचाउनु, त्यतिकै व्यञ्जन अजिमालाई आगम पर सारी सुबेलामा जेठोले (थकालीले) पञ्चग्रास खुवाउनु, बडा ग्रास गरी ३ गाँस खुवाउनु, देव देवतालाई भाग ६ र भेटी ब्राम्हणलाई सिधा दक्षिणा दी बिदा गराउनु, माइतबाट आयाकोटीका लाइदिनु बोकी ल्याउन्यालाइ पेटभरी खुवाई दाम २।२ दस्तुर दी बिदा गराउनु, त्यस दिनदेखि बालखलाई अन्न चल्यो ।

अथ चूडाकरण कर्मभेद -- अघिल्ला जेठो (थकाली) आदिको कपाल खौराउनु नङ काटाउनु,ख नी पीनाले नुहाउनु, शुद्ध वस्त्र लगाई श्रीगणेशपूजनादि श्राद्धपीठ पूजा आचार्यले गरा गुरु नागपूजा गराउनु, कुमारी मूलले बालकको आपादमस्तकान्त अग्रान्त सत्वावर्त अधिवासनसूत्र पवित्रिलाई एक सुगन्धि स्वस्ति चिन्हित हातमा राखी अग्निनोह रक्षासगुनादिकन जामिकेक दिनु, नवरत्न मुद्रिकाले मध्ये केशविषे बाँध्नु, देवताको भेटी चढाउनु, ब्राम्हण पूजा गरी जोसी आचारलाई सिधा दक्षिणा दी बिदा गराउनु कुमारी पूजनु, त्रिगोडिससेतक। बडाथालमा कुरुवा १ को शाली धानका चावलको भात पस्की चौरासी व्यञ्जन समेतका पञ्चग्रासपूर्वक भोजन गराउनु । उच्छिष्ट बालक फाल्न, दानकाल भद्रागरि यज्ञमण्डपमा ब्रह्मादि कलशादि सराञाम तयार गरेर गणेश आवाहन आदि कलश-स्थापना गरी ब्रम्हावर्त गरी होम गर्न सुनरका बेलामा मन्तुनश्चुर शुचि चन्द्रमण्डलथालि पूजा-गरी सौखण्डमोदकलयाइ कपाल भिजाउन, बालकका केशमा पञ्चपल्लव बाँध्नु, पूर्णादिक्रम गरी नावलीले छेदन गर्नु, फुपूले चन्द्रमण्डलमा थाप्नु, कानमा मामाले सुगन्ध चन्दनले सुवर्ण सुचिले छिद्र-लाइदिनु, नाउले कपाल खौराउन, कान छेड्नु, स्नान गराउनु, कपालमा श्रीखण्डले सेतो तिल लाइदिनु, स्वस्तिक लेख्नु, सगुणाशीर्वाद गरी वस्त्र दिनु, ठाडो चन्दन लाइदिनु, देव देवतालाई भेटी ब्राम्हणलाई सिधा दक्षिणा दिन, यज्ञ विसर्जन गरी अभिषेक पाती दी सूर्य गणेशादि दर्शन गराउ मामाको घरबाट आयाको टीका लगाइदिनु, ल्याउन्यालाई खुबाई दाम २ दस्तुर दिनु, फुपूलाई चन्द्रमण्डलको थाल र चोलो १ दिनु, नाउलाई १२।४ दी कपाल खौराउदामा लायाको वस्त्र नानको खान्या भाग दी पठाउन, यति काममा लाग्न्या मानिस छाडी अर्कालाई डाकी काम चलायो भने यजमानलाई सुरु २४।२४ दण्ड यजमान ल्याउन्यालाई तुरु २४।२४ दण्ड, यी मानिस डाक्दा आएन भन्या प्रोहितलाई तुरु १२ दण्ड, जैसी आचारलाई तुरु ६।६ दण्ड, फुपूलाई तुरु ८ दण्ड, मामालाइ तुरु ८ दण्ड, चित्रकारीलाई तुरु १२ दण्ड, कुम्हाललाई तुरु १७, नाउलाई ३६, यति ब्राम्हण क्षत्रियको अरु, जातको कलशार्चन गरी पुन्याउनु दण्ड ऐजं

अथ व्रतबन्धन, अथ व्रतबन्धन अधिवासन ऐजं गणेशावाहनादि ऐं जं ब्राम्हण कलशादि स्थापन ऐजं पूजासमेत गुरुले होम गरी यथाक्रममा गुरुमण्डल पूजन दण्डादिग्रहण भूषण बेलामा मौंजि ब्राम्हणको क्षत्रियको गायत्रीप्रदान माघादि आषाढा बधि प्रारम्भ ब्राम्हणको साइत बढिया क्षत्रियको ब्राम्हणको भाद्र शुक्ल बढिया दिन समावर्तन क्षत्रियको प्रारम्भका अष्टम दिन समावर्तन, कुलदेवतापूजा आमीसभोजन ।

त्यसपछिका जातले कलशार्चन मात्रैले विधिपुन्याऊनु त्यस दिनदेखि स्वजातिधर्मलिनु खुसल आदि कुलु पर्यन्तका हातको पानी नखानु कदाचित् भुलिखायो भन्या प्राजापत्य चान्द्रायण गोदान गरी

ब्राह्मणलाई सिधा दक्षिणा दी सरकारमा तुरु १२० दण्डतिरि आफ्ना जात खुवाई पञ्चगव्य गंगाजल खाइ आफ्ना जातलाई तुरु १२ दस्तुर दिनु जातलाई भोजनखुवाइ तारा हेरि जातसंग भातमीली खानु ।

बाबु ब्राह्मण आमाविधवा रजपुत निवार भयाको जैसी लाई जनै दिनु शिखा गायत्री दिनु त्यसले संकल्प आदि बोलनु श्रेष्ठ संग विहागर्नु जोतिस शास्त्र पढ़िगुनु पात्रो ग्रहण योग स्नानादि जोग कहनु चिटा लेखनु ग्रहणलेखनु ताहादेखी ब्राह्मणकर्मभा चल्या तुरु १२ दंण्ड ।

बाबु ब्राह्मण आमा सवर्ग क्षेत्रीनीबाट हुन्या कर्माचार्य तस्ले शिखा गायत्री पाइ तलेजुमा टहल–गर्नु कदाचित् काम अडकयो भने देवताकोपुजा नअडकाउनु अर्काले छुन नहुन्या देवता बोकि ठाउमा ल्याउनु बलमिचि आफ्नुपुर्खाले नलायाको जनैलायो भन्या जनैछिनाजिदिनु तसलाइ सासना फला–म्मा तार लालगरी पोलि जनइलाइ दिनु ऐं ।

जैसिले स्वकर्म लेरव्याको बलमिच्यो भन्या जनैछिनालि श्रेष्ठमा मिलाई दिनु तुरु ६४ दंड गर्नु ।

ब्राह्मण खुसलनि सित गयो भन्या तुरु १२० दंड प्राजापत्य चान्द्रायण जातलाइ तुरु ६४ दस्तुर दिन पञ्चगव्य गंगाजल शालग्रामोदक तुलसीदल खाइ भात खुवाइ ताराहेरि खानु ।

डेंयेनि मोसलनि सालिमनी चित्रकारिनी भठियानी कोनालनिहरु संग गया ऐंसदर ।

नाउनि सघटनी सित गया तुरु १४० दंड अरु सदर ।

लोहकारनी पुनपुलनी माहुल्यानी छिपिनी मालिनी चित्रकारिनी बलिनी कसाइनी गठ्श्रेष्ठि–नीं छत्रकारिनी सवलिनि सोढ्यानी कुसल्यानी बलामिनी मझिनी यति संग गया तुरु दंड ४८० चान्द्रा–यण दोवर अरु ऐं ।

पोढ्यानी कुलुनी संग जानी जानी गयो भन्याचान्द्रायण नास्ति त्यसै जातको भयो ।

नजानी भूलपर्‍यो भन्या तुरु २४० दंड २ प्राजापत्य चान्द्रयण अरु ऐंजं ।

ई सबैमा पोइ भएका संगगया सुनसिगिको मोहर रुपैया ६० दंड ।

ल्हासा जान्याका स्वास्नीसंग गया तेस्को दोवर दंड ।

क्षत्रीय जाति गयो भन्या तेस्को आधा दंड चान्द्रायण अरु सबै सदर ।

चान्द्रायण नपर्‍या पोइ हुन्या स्वास्नीसित स्वजाति सबैगयो भन्या सुन शिहि मोरु ६० दंड ।

सुजातिसित कुजातिगयो भन्या जात पङ्गति बढाई स्वास्निका गर्भभयाको छैन भन्या भुलि गयाकि भया चौथाइ दंड चान्द्रायण प्राजापत्य । नीच नित जाति जानि गया भन्या दंड चान्द्रायण दोवर अरुऐं ।

ब्राह्मणिमा पोइहुन्या छेउ ब्राह्मण गयोभन्या ब्राह्मणीको स्वजाति हुनु नास्ति ब्राह्मणलाई लिङ्ग शासनागरि देश देखी बाहिर धपाउनु चान्द्रायण नास्ति ।

ब्राम्हणले विधवाब्राह्मणी बिरायो भन्या सुनसिहि रुपैया ३० दंड ब्राह्मणी स्वजातिमा जाननास्ति ।

पोइ हुन्या ब्राह्मणीमा क्षेत्री गयो भन्या खोलापार लैजाई चाण्डालका हातले एकचोटमा मर्न्यागरीकन हानी मार्नु विधवा ब्राह्मणीसंग क्षत्री गयो भन्या लिंगशासना गरी सुनसिही रुपैंया ३० दंड जातमा जानपर्‍यो भन्या प्राजापत्य चान्द्रायण ऐजं पोइ हुन्या ब्राह्मणीमा वैश्य गयो भन्या लिंग काटिदिनु सुन-सिही रु १२० दंड दुइलाई चान्द्रायण नास्ति विधवा ब्राम्हणीसंग वैश्यगयो भन्या लिंगे शासन गरी सुनसिही रुपैया ६० दंड ब्राम्हणीलाई चान्द्रायण नास्ति । वैश्यलाई आफ्ना जातमा जानुपर्‍यो भन्या १० प्राजापत्य चान्द्रायण, पोई हुन्या ब्राह्मणीसंग शूद्रगयो भन्या लिंग काटी खुवाई चाण्डलका हातले कटाउनु ब्राह्मणीलाई चान्द्रयण नास्ति विधवा ब्राह्मणिमा शूद्र' गयो भन्या लिंग काटी चाण्डालले मार्नु ब्राम्हणीलाई चान्द्रायण नास्ति ।

जातको व्यवस्था–कुलु जातले मर्न्या कपाल खौरनु नङ्काट्नु आफूलाई आफैले दिन दिनमा बृद्धि सुतक शुद्ध मृतक सुतक दिन १० लाग्या मानिस पिण्ड गराउन्या आपदा नाइक्याका बचनले आपना जातमा जान्याले पिण्ड गराउनु रकम छालाका कुपा बनाउनु छालाका थैली बनाउनु औ बाजा पेटा-रामा गोलामा छाला लाईदिनु, आपना रकम छालाको रकम छोडी अरु रकममा गयो भन्या तुरु १२० दंड आपना जातमा विवाह गर्न पाएन भन्या स्वास्नी बुझाई आपनु जात नदबाई श्रेष्ठ देखि कुसुल्यानी-सम्म ल्याउनु खत नास्ति ।

पोड्याको कपाल खौराउनु, नङ्काट्नु आफैले सूतक पिंड ऐजं पोसाक जोराजोरी नलाउनु सुनका गहना नलाउनु, बिनाकामले घाम अस्त भयापछि सहरभित्र नपस्नु, पीठ देवताका पीवाला बलि देवताका गहना सह्यारी नैवेद्य मागी खानु, माछा मारी भंगेरा समाती बेची खानु, बडो जात नछुनु, गाइ नखानु, सुंगुर खानु मुर्दाका पोशाक लिंपी लिनु, दाम एक दस्तुर लिनु सती जान लागिन् भन्या भिख्यारी लाई जोर पोसाक पोड्यानीले लिनु सतो जान्या स्वास्नी पोइसंग सुती मर्न नसकी चिताबाट खसी ठहरियो भन्या सोही पोड्यानीसंग जात मिली पोड्यानीका जातमा जाई बस्नु ।

डोम जातिको—कुसल्यासंगभै ढोलक बजाउनु स्वास्नी नचाई कमाइगरी खानु, सुतक २ लाग्या ऐजनु ।

टटिजातको दुनियाँलाई काचो परिबुनु; मोल टका १ सतिको दरि बनाउनु पऱ्यो भन्या मोल टका २ ली बेच्नु सुतक छ जुठो १० पुरोहित गुभाल ।

कुसल्या जातको–बाजा कुकी बजाइ दस्तुर सुमंगलको दाम १२ बिबाहको रु ॥ पास्नी व्रतबन्ध चूडाकर्म्मको दस्तुर दाम ६ काममा लाग्न्या छ ।

त्यसलाइ पेट भरी खुवाउनु डाक्न आउदा काम अड्काइ दियो भन्या तुरु १२ दंड आफ्ना छोडि अरुलाई काम चलायो भन्या तुरु १२ दंड टोलमा काम काजमा मागी खानु दुनियाको चोक बढारी खानु कापालिभेषभै डमरु बजाइ मागी खानु सुतक ६ मुर्दा पालनु जुठो दिन ७ लद्यामानु पुरोहित आफ्नै जात बारि कमाउनु खेत कमाउनु ।

कसाईको– नङ्काट्नु कपाल खौराउनु आफ्नै जातले दुनिञाका मुर्दा लैजादा बाजा बजाउन काममा लाग्न्या कसाई जतिछ सबैले तिन तिन दाम दस्तुर लिनु । सतिको बाजा बजाउनु पऱ्यो भन्या दस्तुर टका १ खलकिलाई ३।३ दाम दुनियाका काम काजमा राँगो काट्नु पऱ्यो भन्या दस्तुर एकपैसा कि दामली राँगा काटि दिनु टिकावाल राँगा नदिवार नकाट्नु । भला २ आदमिलाई त्यो मासु नबेचनु चौरमा दुनिञाको रागो काट्नु पऱ्यो राजाको दस्तुर रु १ नदिउन्ज्याल रागो न काट्नु । मासुको व्यपार गर्नु पर्न्यलि काट्नु पऱ्यो भन्या राजाका दस्तुर दोबर । दुनीञाको बदेल काट्नु पऱ्यो भन्या सरकारमा टाउको चढाइ आफुले दस्तुर रुपैया आठाना खानु मासु छुस्याइ दिनु आफु भन्दा बडा जातलाई दुध दहि नबेचनु घ्यू समेत नदिनु । सुतक ६ जुठो लाख्य ऐजन् खेत कमाउनु पुरोहित नाइगुभाल ।

नरिजातको–भित्तामा चित्रकार लेखनु फर्फरमायासि लेखनु नङ् कटाउनु कसाईले च्यूरा कुट्न्या मुशल नसमाट्नु सुतक ६ जुठो १० लख्या मानु प्रोहित गुबाहाल ।

सबलको-मानिसलाई जुकोलाई कमाई खानु, खेत कमाउनु, सुतक ६ जुठो १० लख्या मान्नु, प्रोहित गुभाल । ॥

गठको—बनको फूल टिपी ल्याउनु, बेची साटी खानु, खेत कमाउन, सुतक जुठो लख्या, पुरोहित ऐजन् । ॥

मालीको—फूलबारी बनाउनु, फूल बेच्नु साट्नु गरी खान; सुतक जुठो लख्या । मान्नु प्रोहित ऐजन् । ॥

छिपाको–नीर आदि गरी पाँचै रंग धागा कपडा रंगाउन् कसाईले नङ कटाउन, सुतक

६ जुठो लह्या पुरोहित ऐंजन् खेत कमाउनु । ॥

पुलुपुलुको–दुनियाँको मुर्दा अघिबाट आरती मजिरा बजाई आफ्नु दस्तुर लिनु, दाँम ४ चावल कुरुवा १ नाउ कसाही सुतक जुठो लह्या पुरोहित ऐंजन् । ॥

नकर्मीको–फलामको काम गर्नु, सुतक ६ नाउ कसाही जुठो लह्या पुरोहित ऐंजन् खेत कमाउनु,

पिछिनीको–बढिया दिनमा दुनियाँको बालख जन्मदा नाल काटिदिनु दोबाटामा फाल्नु सुत्यानीको आधा दस्तुर लिनु, सुतक ६ जुठो १० लह्या मान्नु, पुरोहित ऐंजन् नाउ कसाही, खेत कमाउनु, । ॥

मघटको–दुनियाँको लुगा धोइ बर्षदिनको कबोलमाफिक बाली खानु, सुतकमा जुठोमा ६।६ कुरुवा चिउरा दाम १६।१६ लिनु खेत कमाउनु, सुतक जुठो पुरोहित ऐंजन् । ॥

नाउको–ब्राह्मणदेखि ज्यापूपर्यन्तको कपाल खौरनु, नङ्काटनु, दस्तुर सुतकको कुरुवा ६ जुठोमा कुरुवा ६ लिनु, सुतक जुठो १० लह्या मान्नु पुरोहित ऐंजन् माहुर लाउनु बेचिखानु काठ कुन्दु सुतक जुठो गैह्र ऐजन ।

महाब्राह्मण भाट्को–पाखि पटुका रँगाउनु एकादशाह खानु खेत कमाउनु पराल नराखनु सुतक ऐजन् जुठो १० लह्या मानु पुरोहित ऐजन् ।

चित्रकारीको– देबता चित्रकार लेखनु, गुभाजुसंग दिक्षासुनु रगसी जाड बनाउनु बेचनु सुतक जुठो लह्या प्रोहित ऐजन् खेत कमाउनु नाउ कसाहि ।

सालमिको व्यस्था—तेल पेलि बेचि खानु बावियाले खट बाधनु सुतक जुठो लह्या प्रोहित ऐजन् ।

मोसटको व्यवस्था—कसाहिले मासु बेचन्या पसलमा मासु पोकापारि दिनु आफ्नु दस्तुर खानु सुतक जुठो लह्याप्रोहित ऐजन् ।

टेपोचको—पालुंगाको साग रोपि व्यवस्थासित बेचनु बेचदामा श्री ५ सर्कारमा दस्तुर दिनु काहाल बाजा बजाउनु खेति गर्नु सुतक गैह्र ऐजन् ।

खुसलको व्यवस्था—काहाल बाजा बजाउनु खट् बाधदा सालमिले न पुग्याको गुहार दिनु खेति गर्नु सुतक गैह्र ऐजन् ।

लुकर्मिको-सुना चादिको गहना बनाउनु सुतक ६ जुठो ७ लट्या मांनु प्रोहित ऐजन् ।
सिकर्मिको-काठको काम गर्नु सुतक ६ जुठो १० लट्या प्रोहित ऐजन् ।

ग्वालको व्यवस्था-गाइपालनु दुद दहि घ्यू कोटल वेंचनु श्री ५ सर्कार दुनिआलाई चाहियाका गर्नाई तयार गर्नु सुतक १० जुठो १२ लट्या प्रोहित ब्राह्मण ।

कुमालको व्यवस्था- माटाका भाडा पार्नु सर्कारलाई दस्तुर दि वेचनु सुतक १० जुठो १२ लट्या प्रोहित गुवाहाल अचार ।

उदासको—ल्हासाको ब्यापार गर्नु कोठिराखनु सुतक ६ जुठो १० लट्या मांनु प्रोहित गुभाल ।

टटि-परिवत्त् जनै बनाउनु वेचनु सुतक १० जुठो १२ लट्या मांनु पुरोहित ब्राह्मण ।

टमोट्को—तावा कांसादि धातुको भाडा बनाउनु सुना चाँदिको जलप लानु सुतक १० जुठो १२ लट्या उप्रा न्त ब्राह्मण जैसि अचार बौद्धमार्गि भया गुभाल ।

सुल्मी श्रेष्ट्को-रानीका माइति नभया माइतिले गर्न्या काम गर्नु वनीज व्यापार गर्नु सुतक जुठो लट्या प्रोहित ऐ ।

किसानिको-देवदेवताका पुजा सामा वोकनु बलि फालनु प्रोहित गुभाल खेत कमाउनु सुतक जुठो लट्या ऐजन् ।

वैद्यको—दुनियाका नारी हेरी व्यथा वाहालाई औषधी गर्नु लोकान्तर हुन्या ठहऱ्या वैतर्णी दिलाउनु वखत्‌मा विधिगरी लवंगादि दिनु दस्तुर टका १ लिनु नीर्थ बुन्याउनु अरु ऐजन् प्रोहित ब्राह्मण ।

लोहकर्मिको-प्रमाणले देव देवता बनाउनु सुमेरु कोलि ढुंगा फोर्न्या रकम् सोमर्नु सुतक १० जुठो १२ प्रोहित गुभाल ।

बड़ैको-काठको फर्मापनि कानानु चर्खाइटा धुप बनाउ सुतक जुठो ऐजन् प्रोहित बौद्धमार्गिको गुभाल शिव मार्गिको ब्राह्मण ।

हलवाईको-रोटि बनाउनु गुवाहाल संग मन्त्र सुंनु सुतक १० जुठो १२ प्रोहित ऐजन ।

गुवाल विपुधाडाको मूर्त बनाइ वेचनु पंचपात्रादि अदवाल बनाइ वेचनु शिखा मुण्डन गर्नु गुवाल संग मन्त्र सुनु सुतक ६ जुठो लट्यामांनु प्रोहित गुवाल ।

भाडाको- सुनाचाँदिको गहना बनाउनु , ढलवट् धातु भाडा कमाउनु धातुका बुट्टा का

काटनु सुना चादिका जलप् सानु कासा कचौरा बनाउनु सुतक गैह्र ऐजन् ।

बज्राचार्यको–गुभालले श्रेष्ठ ज्यापु हलवाइ बराहि सिकर्मि लोहर्कर्मि चित्रकारी सम्म दी आया-लाइ मंत्र दिनु सुतक ६ जुठो७ लठ्या मांनु प्रोहित गुबाहाल् ।

कसालको–कासो कुटि पिटि भाडा कमाउनु सुतक १२ जुठो १२ लठ्या मांनु प्रोहित ऐं ।

पीठाचार्यको –पीठ पीठमा देवता २ को पूजा गर्नु आफ्ना अधिकारसम्मको महावलि आदि वलि विधान गर्नु ब्राह्मणबाट मंत्र सुन्नु र जनैपाउनु विधि आफ्ना थकालिले गर्नु सुतक १० जुठो १२ लठ्या मांनु प्रोहित ब्राह्मण विवाहमा झा श्रेष्ठ दुनियाको घर शुद्धि गर्नु ।

शिवाचार्यको – शिवलिङ्गको पूजा गर्नु आफ्ना अधिकारसम्म जजमानी गर्नु घरशुद्धि जजमानी चलाउनु यज्ञ गर्नु ब्राह्मणबाट मंत्र सुन्नु जनै पाउनु आफ्ना ज्याविधि हो थकालिले गर्नु सुतक १० जुठो १२ प्रोहित ब्राह्मण सामान्य श्रेष्ठ सित विवाह चलाउनु ।

कर्माचार्यको—श्रीतलेजुको टहल चौकि बसनु ब्राह्मण बाट मंत्र सुन्नु जनैपाउनु विधि आफैले गर्नु आफ्ना अधिकारसंम जजमानी चलाउनु सुतक १० जुठो १२ लठ्या मांनु प्रोहित ब्राह्मण जैसी आचार ।

गुर्वाचार्यको–श्रेष्ठलाइ दीक्षा सुनाउनु ब्राह्मणबाट मंत्र सुंनु आफ्ना अधिकारसंमका जजमानी चलाउनु सुतक १० जुठो १२ लठ्या मान्नु प्रोहित ब्राह्मण सुकार्यमा होम गर्नु ।

देवाचार्यको–आफ्ना थकालिबाट मंत्र सुंनु आफ्ना सुकार्यमा होमगर्नु जजमानी चलाउनु सुतक जुठो लठ्या प्रोहित ऐजन् ।

पात्रवंशठकुलवट् ब्राह्मणबाट मंत्र सुंनु ढाल तर्वार भीर्नु सुतक १० जुठा लठ्या प्रोहित ऐ ।

राज लवट्को व्यवस्था-ब्राह्मणबाट मंत्र सुंनु ढाल तर्वार भीरनु राजसेवामा रहनु सुतक १०जुठो १२ लठ्या मांनु प्रोहित ऐ ।

कायस्थ भनिके— सत्को मोहर लेखनु दानपत्र सुक्रिविक्रि पत्र तमसुक भाषापत्र गैह्र लेखोट् लेखनु दस्तुर लिनु ब्राह्मणसंग मंत्र सुंनु सुतकदेखि प्रोहितसम्म ऐं ।

भागी श्रेष्ठको व्यवस्था – शिवमार्गीले ब्राह्मणसंग मंत्रसुन्नु बौद्धमार्गीले गुभालसंग मंत्र सुंनु वनिज व्यापार गर्नु सुतक १० जुठो लठ्या मांनु प्रोहित ब्राह्मण प्रोहित गुभाल ।

अमात्य माहात्को –ब्राह्मणसंग मंत्र सुनु उतम श्रेष्ठ संग विवाह गर्नु राज काज पनि गर्नु सुतक १० जुठो १२ दिन मांनु प्रोहित ब्राह्मण गुबाहाल ।

जोसिको –व्यवस्था ब्राह्मणबाट मंत्र सुंनु जनै शिखा गायत्री पाउनु त्यसले उपल्लो संकल्प अ-

त्यादि बोलनु श्रेष्ठ संग विवाह गर्नु जोतिष शास्त्र पढ्नु पात्रो ग्रहण ग्रह योगादि स्नान दान मेला २को योग कहनु चिठ्ठा लेखनु सायेत लेखनु यति देखि उपर ब्राह्मणकर्ममा नचलाउनु आफ्ना अधिकार संमको जजमानी गर्नु सुतक १० जुठो १२ लव्यामांनु प्रोहित ब्राह्मण।

ठकुरको— ब्राह्मणसंग मन्त्रसुंनु जनैपाउनु शिव बुध्दमार्ग मांनु ढाल तरवार भिर्नु राजकाज गर्नु सुतक १२ जुठो १५ लव्या मांनु प्रोहित ब्राह्मण।

ठाकुरको-ब्राह्मणबाट दशकर्म गराउनु, जनै मंत्र पाउनु ढाल् तर्वार भिरी राजकाजमा रहनु, बनिज ब्यपार गर्नु सुतक १२ जुठो १२ लव्या मान्नु प्रोहित ब्राह्मण।

श्री ५ राजाको–ब्राह्मण बाट दशकर्मादि गायत्री जनै पाउनु ढाल तर्वार भिर्नु आफ्ना नीतिमा चलनु चलाऊनु सुतक १२ जुठो १२ लव्या मान्नु प्रोहित ब्राह्मण

देवब्राम्हणको–स्वजातिलाई मंत्र दिनु राजालाई मंत्र सुनाउनु श्रेष्ठसम्म जजमानी चलाउनुवेद मंत्र स्मृति पुराणादि कर्ममा चलनु चलाउनु राज गुरु घरले पुराण नबाचनु राजगुरु हुन्याले अर्कालाई मन्त्र नसुनाउनु सुतक १२ जुठो २ लव्या मान्नु प्रोहित १२ अघुना मर्दा ब्राह्मणो स्वधर्ममा छउन्ज्याल ब्राह्मणको अपुतालि दाज्यू भाइ लाई जांदैन क्रियाकर्म पनि अरुले पाउदैन, सूर्यवंशमा उत्पन्न भयाका श्रीनान्यदेव नाम राजा बाट श्रीतुलजाका यन्त्र मन्त्र पद्धतिपाइ सिमंगढमा श्रीतुलजाकन विराजमान गराया इनैका वंश हरिसिंहदेव बाट श्रीतुलजाकन नेपाल भक्तपुरमा ल्याई स्थापना गर्‍यापछि हरि-सिंहदेवका वंशमा उत्पन्न भयाका जयस्थितिमल्ल बाट सब स्मृतिशास्त्रको विचार गरी नेपालका प्रजामा जात भात जात अनुसार धर्म कर्म गर्नु भन्या बंदेज बांधि नेपाल राज्यमा चलाया। यी राजा बहुतै ज्ञानवान् धर्मज्ञ थिया जस्तै पूर्वकालमा मनु बाट स्मृति धर्मशास्त्र बनाई चलाया तस्तै।

यस कलिकालमा नेपालविषे जयस्थितिमल्लबाट जान्या जान्या ब्राह्मण पण्डितहरुकन आफ्ना हजुरमा बोलाई धर्मशास्त्रको कारण बुझि प्रजाको स्थिति गर्नाकन राजा भनी स्थापना गर्‍याको हो। जौन राजा बाट थिति बाँधी थिति थाम्न सक्तैनन्। उन राजाको राज्यमा बन्दोबस्त रहोइन। जहाँ बन्दोबस्त रहदैन, त्यहाँ जथाभावि हुन जाँदा नितिको अनीति हुन जान्छ। अनीतिले सुख पनि होइसक्दैनन्। धर्म पनि नष्ट हुन जाला। धर्म को स्थिर भयापछि सुभिक्ष सुभिक्षा राजालाई हवस् भन्नानिमित्त थिति बाँधी पछिसम्म जस नाम रहन्या काम गरी थिति बाँधी चल उँदा भया। धन्य भन्नु यस्ता राजालाई भन्नु बहुत ज्ञानी बडा सामर्थी धर्म चित थिर भयाका यस्ता राजा जयस्थितिमल्ले प्रजा प्राणीहरूलाई दुख छुटाई सुख हवस् भन्नार्थले र युग युग किताप जस नाम गर्नाकन देव देनाक्रया! धन्य धन्य कहाई सब बात ब्यवस्थाको स्थिति बनाई धन्य कहाया। जयस्थितिमल्ल धन्यछन्। अस्ना पुत्र यक्षमल्ल[*]

---

[*] वंशावलीकारले यहाँ यक्षमल्ललाई स्थिति मल्लका छोरा हुन भनी लेखेका छन्। परन्तु यो कुरो हैन यक्षमल्ल स्थिति मल्लका नाति हुन। स्थिति मल्को मृत्यु भएको १३ वर्ष पछिमात्र यक्ष मल्को जन्म

भोगवर्ष २० यिन राजाले शंकराचार्यदेखि चलायाका दक्षिणे भट्ट ब्राह्मण पशुपतिनाथका पूजाहारि-कन सुसाम्ध्यार पशुपतिका भंगन्या देवपत्तनका नेवारलाई राखिदिया ।

अस्य पुत्र ३ ज्येष्ठ रायमल्ल माहिला रणमल्ल कान्छा रत्नमल्ल जेठु रायमल्ल भक्तपुरका राजा भया । भोगवर्ष १५ माहिला रणमल्लले बनेपुरजाई सातग्रामका राजा हुँन गया । भोगवर्ष २१॥ यिन राजाका पालामा बनेपुरको नेवार एक कोढी तैलकार मोहनसिलाई कुमारीकुण्ड देवीले स्वर्णमहिकुण्ड दिर । दिइन् र श्रीपशुपतिनाथकन अघि नभयाको चाँदिका कवच बनाई अनेक हिरा आदि जवाहर पत्थर जडी एक ।

मुखी रुद्राक्षसहित गरी कंकणसहित कवच चढाया ? नेपालसंवत् ६२२ मा मोहनसिंहले कवच चढाउंदा नेचका साल एक चढायाको कान्तिपुरमा छंदैछ । यस तैलकारलाई धर्म गर्नकन धन दिन्या कौमारीकु-ण्डका देवी हुन्। यी रणमल्ल का सन्तान भएनन् रबनेपुरका राजधानी यतिकै हो। कान्छा रत्नमल्लले जेठा दाज्यू रायमल्लसित विरोध भाव परस्पर गर्न लाग्या । किन भन्या यिनका कुलमा तुलजा जगा उन्या मन्त्र प्राणत्याग हुन्यासमय विना अरु कालमा लिन हुन्या रीत थिएन र रत्नमल्लले आफ्ना बा-बाका प्राणत्याग का बेलामा दाज्यूकन छलकाम गरी बाबुदेखि कुलदुर्गा तुलजा जगाउन्या मन्त्र पायाको थियो र ज्येष्ठक्रमले हुन्या हो तैंले मलाई छलिस् भनी रीस गर्दा दुवै भाइको परस्पर चित्तमा विरोध भावहुन गयाको थियो । यस्तै वखतमा कान्छा रत्नमल्लकन तिनै मन्त्रका प्रभावले श्रीनीलतारादेवी प्रसन्न भै स्वप्नविषे देवीबाट हे राजन् ! तिमी कान्तिपुर जाई १२ ठकुरीहरू जिती राजा हुन पाउन्या भनी आज्ञा प्रसन्न हुंदा रत्नमल्लले देवीवाणी हो भनी निश्चयठहराई प्रातकालैमा उठी नीलतारा देवीका स्थानमा जाई दर्शन गरी सरासर कान्तिपुरमा आई बाह्र ठकुरीका एक मुख्य काजीका घर पुगी एकान्त पाई तिनलाई देवीले आज्ञा भयाको वचन भन्दा देवीका अनुग्रहका प्रभावले ती काजी रत्नमल्लका वसमा आई काजीले हवस् म जुक्तिगरुंला भनी राजपुत्रकन गुप्त गरी राखी बाह्र ठकुरीहरुकन यसकाजीले खान्या वस्तु मा विष राखी भोजन गराई चाडै ठकुरीहरुकन मारी रत्नमल्लकन राजागराया । यी र-त्नमल्लले आफ्नु हुकुम वेस गरी चलाईरहंदा एकदिन मनमा यस्तोसंभया कि मेरानिमित्त यस काजीले आफ्ना स्वामी वैश्यठकुरीहरुन विष खुवाई मार्‍या । अनविश्वासी पापी काजी रहेछ, यसको मन नपर्‍या मलाई पनि राख्न्या छैन भनी ठानो स्यस वैश्य काजीकन राजा रत्नमल्लले यमलोक पठाया ।

सर्पो व्याघ्रस्तथा राजा अनविश्वासमात्यः येषां विश्वासतो मन्ये शीघ्रं नश्यन्ति जन्तवः ।

---

भएको हो ।

(प्रमाण-प्रमेय ३९-४२ पृष्ठ हेर्नु होस्

यहाँ पछि यिन राजा रत्नमल्लले प्रजाहरू हातमा ली तामाखानीबाट तामा मगाई छाप बनाई अघिका सिहछाप मनाही गरी पैसाका चलन नेपाल भरमा चलाया । यी रत्नमल्लले राज्य गर्दा-समय कुकुनाम भोटया देवान आदि भोट्याहरू धेरै आई दुख दिया र तिह्लौंतिया ब्राह्मण चार जनाले पाल्पा जाई आफ्ना शिष्य सेनराजासंग मागी उनका लस्करलाई ल्याई भोट्याहरूकन माऱ्या यिनदिनदेखि खसहरू चारथरिकन खेत बिर्ता दीकन जग्गा जग्गामा राख्या । फेरि रत्नमल्ल राजाले तिह्लौंतिया ब्राह्मणहरू चार जनालाई खिल्लत दी आफ्ना स्वस्थानमा पठाया । कुकु नाम भोट्यालाई माऱ्यापछि उस ठाउँको नाम कुकुरथानामजोल भनी नाम रहि गयो । यिनै वर्षमा यवन भन्याका मुसलमानहरूको नेपाल विषये प्रवेश भयो ।

फेरि यिन राजाका पाला मध्यदेशदेखि सोमेश्वरानन्द नाम दौडान्यासी एक स्वामी आयार तिनकन श्रीपशुपतिनाथका पूजक योग्य ठहराई पुजाहारि गरिदिया । शंकराचार्य स्वामीले रीत चलाई गयाका पूजाहारि दक्षिणी भट्ट ब्राह्मण मात्र हुन् । यिन राजाका पालामा स्वामी पुजाहारि भया । यी स्वामी सुकुमार हुँनाले यिनकन टहलुवा बिना ज्यादा कष्ट होला भनी बनेपुरका खिर रजात ल्याई भण्डाऱ्या गरी राखिदिया पहिलेका भण्डाऱ्या सित पालोगरी टहल गराया। फेरी देवताका वस्तुरक्षक निमित्तकात्निपुरका नेवार र बरलाइ विशेष नाम गरी राखि दिया । यी विशेषहरू भंडाऱ्याहरूमाथि डिट्ठा गरी राखिदिया । फेरि यिनै स्वामी कन गुरुपदवी गरी देशरक्षानिमित्त दक्षिणकाली आवाहन गरी पशुपतिनाथका नैऋत्य कोणमा पारी नवग्रह सन्धि मातृका गण सहित गरी स्थापना गराया । फेरी स्वामीका आज्ञाले भंडाऱ्याहरूकन पैले बौद्ध सन्धिमा देवीकन देखाई त्यहो स्थानमा । प्रतिवर्ष इष्ट देवता गरी देवाली पूजा गऱ्या । फेरी यिनै स्वामीका आज्ञाले विशेषहरूकन पञ्चलिंग भैरवसन्धि मतिलिस्थानमा मन्त्रेश्वरी देवीकन प्रतिबर्ष इष्टदेवता गरी देवाली पुजा गरी मनाया । यीस्वामीलेधेरै वर्षश्रीपशुपतिनाथकननित्य पुजागरी मातृकासन्धि समाधि राखी प्राणायाम गरी ब्रह्मद्वारा खोली शून्यमा गया । यी रत्नमल्ल राजासित तुलजा जगाउन्या मन्त्रसिध्दि हुनाले नानादेवतासन्धि सूक्ष्म मन्दिर बनाई तुलजास्थापना गऱ्या । यिन राजाका पालामा नुवाकोटवासी वैश्य ठकुरीहरू स्वाधीन गरी राजराजेश्वरी देवीका चित्रकारि कर्म गराया । नेपाल संवत् ६११ सालमावैश्य ठकुरीहरूले हुल गर्न आया र ती वैश्य ठकुरीहरूमाथि धेरै सिपाही पठाइ लडाइ गरि जितीनुवाकोटका फल फफु आदि ल्याई श्रीपशुपतिनाथकन चढ़ाया । राजा रत्नमल्लले वर्ष ११ रजाई गरी शान्त भै गया ।

अस्य पुत्र अमरमल्ल वर्ष ११ यिन राजाका पालामा बनेपुरका कुम्हालहरूले अनन्तनारायणका मूर्ति पशुपतिनाथका मन्दिरभित्र स्थापनागरौं भनी विन्ति गर्दा ठाउँ दिएनन् र रात्रिमा आई एकै रातकाबीचमा वत्सलादेवीसन्धिमा स्थापना गरी बनेपुर फर्कि गया । यिनै राजाले भुवनेश्वरीका पूजाहारि

मुनी आचार्य मन्त्र शास्त्रमा बडो प्रबल हुनाले तिनसित संमत गरी मंगलेश्वरी भुवनेश्वरी जय-बागेश्वरी वत्सलेश्वरी, पशुपतिनाथखुसी निमित्त बडो असंभावगरी लोकमा धन्य कहाई नौ प्रकारका रथ बनाई मुसन शृङ्खला त्रिशूल खड्ग बलि ३ छुरीपाश इत्यादि संयुक्त गरी कुमार कुमारीहरू नौ जनालाई रथमा चढाई शरीर छिन्न भिन्न गरी आषाढकृष्ण अष्टमीका दिन ईशानेश्वर प्रदक्षिणा गराई देवमध्ये प्रतिवर्ष यात्रा गराया । नेपाल संवत् ६२७ यी मुनिआचार्य अति गुणी जन तन्त्र–शास्त्रमा प्रबल हुनाले मृतसञ्जीवनि लिन जाँदामा लोप भैगया । फेरि यिन राजाले दुर्गासित संग आउन्या राजवै-द्यका सन्तान फर्पिङ्देखि ललितपत्तनमा आई बस्याकालाई मगाई देवपत्तनमा नवग्रह सन्धि मूलस्थान-को यिनीहरूका कुलदेवताकन जगावनलाई बसाया । यिन राजाले देवताहरूका नित्य सेवा गरी यात्रा प्रतिवर्ष गरी खुशीसँग गुणी जन खोज गरी कान्तिपुर ललितपत्तन दुवै सहर भोग गरीबस्या ।

## भक्तपुर

अथ भक्तपुरको महिमा रायमल्लकस्य पुत्र सुवर्णमल्ल भोगवर्ष १५ यिन राजाका पालामा अनि-काल आई ६३३ साल नेपालसंवत्मा यस्तो दुर्भिक्ष हुँदा भक्तपुरका प्रजाहरू चारै दिशा फिँजी गया । यिनराजले भाइसित विभाग गरी भक्तपुर बनेपुर २ देशको भोगगरी बस्यामा कान्तिपुरका रा-जाले अनेक देवी गणका यात्रा नाच बनाई । वर्ष प्रति गर्न्या रीत चलाया भन्या मुनी गुणी जन द्वारा नव दुर्गा गणमा अनेक विधान प्रमाण गरी नाच प्रारंभ गराया । फेरि बोडेमा पनि महाल-क्ष्मीदेवीको बडो नेम गरी नाच प्रारम्भ गराया । फेरि आफना लगापातमा भै रह्याका देसका टोलग्राम समभाग गरी भोगगर्‍या । ग्रामहरूका नाम ठीमी नकदेश बोडे साँखु चाँगु इत्यादिले गरीबनेपुर आदि लाहग्राम भक्तपुर राज धानी सहरसम्म तीन भाग क्रम गरी भोग गरी शान्तभै गया ।

अस्य पुत्रप्राणमल्ल वर्ष २१ अस्य पुत्र विश्वमल्ल वर्ष १५ यिन राजाका पालामा देवपत्तन आई कान्तिपुरका राजाकन बुझाई नारायण हरू चारै दिशाका यथाक्रमले आवाहन गरी देवताहरूका प्रभाव प्रमाण गरी पशुपतिनाथका चारै दिशामा यथा क्रमले बसाया जलनारायणका साटो बासुकीकन मान्या यिनै राजाका पालामा पशुपतिमा चाँगुनारायणप्रभृति चारै नारायण आवाहन गरीमूर्ति स्था-पना गर्‍याका सालमा ठूलो वर्षा भै पर्वत पहिरो आई इचंगुनारायणका स्थानकन ढाकिदा यसै समय सहस्र शिवानन्द ब्राह्मणले विष्णु मतीमा बगाई ल्यायाका नारायणमूर्तिकन पायार यिनै मूर्ती इचंगुमा स्थापना गर्छु भनी पहिरो भत्की छोपियाको पत्ता ई हेर्दाअघिकै नाराणायणमूर्तिका आसनपाई अग्रभागमा नारायण मूर्तिकन विधानपूर्वक स्थापना गरिदिया ।

अस्य पुत्र त्रैलोक्य मल्ल वर्ष १५ अस्य पुत्र जगज्ज्योतिमल्ल वर्ष १५।। यिन राजाका पालामा पूर्वबाट एक गेडा मकै दर्बारभित्र ल्यायाको माससित मिसी आयो र कोही गुणी जनकन देखाउँदा गुणी-जनले यो मकै दुर्भिक्ष गर्न्या वस्तु हो भनी पूर्वैतिर पठाई शान्तिनिमित्त ब्राह्मण भोजन गराउन लाया ।

फेरी यिन राजाकन तुलजा भ.ानीबाट बारंबार सुन्दरी स्त्रीका स्वरूपले दर्शन दिदै रहन्थिन् । कोही दिन राजाले पाप मति चिताया र देवी अदर्श भै गइन् । त्यहाँपछि यिन राजाले भक्तपुर सहरमा आदिभैरवकन रथारोहण गराई पुजा मान्य गरी जात्रा गराया । ठूलो लिंगाकार बनाई शत्रु हन्ता कामले लिङ्ग ढाली टोलप्रति गणेशहरू दुर्गाहरूकन रथारोहण गराई मेष-क्रान्तिका दिन गरी विश्वकाट् नाम गरी प्रतीवर्ष यात्रा गराया ।

फेरि यिनै राजाले आफ्ना लगा ठिमी आदि ग्रामहरूमा पनि अनेक देवताका रथारोहण गरी यात्रा गराया । भक्तपुरमा काली देवीकन रथारोहण गराई भैरवनाथकन अन्यशक्तिविषये गमन इच्छा गरिलीयाका लीलाभावले कालीका रथ र भैरवको रथ परस्पर प्रहार गराया । श्री भैरवनाथका रथ बनाउँदा पाँग्रा बनाउनलाई कान्तिपुरका राजासँग बक्साई श्लेष्मान्तक बनका रूखको बनाउनु भनी पशुपतिनाथकन मानी देवपत्तनका कर्मीकन र बाजा दी जीर्णभै पांग्रा फेर्नु पर्दा लिन्या रीत चलाया ।

अस्य पुत्र नरेशमल्ल वर्ष २१॥ अस्य पुत्र जगत्प्रकाशमल्ल वर्ष २१॥ यिन राजाले देश पूर्वपट्टी हनुमती नदीविषय हनुमान् स.धना गरी ठूलो घाट बनाई धेरै कीर्ति गरी मूर्तिहरू स्थापना गरी शान्त भै गया । अस्य पुत्र जितामित्रमल्ल अस्य पुत्र भूपतीन्द्रमल्ल यिन राजाले पाँच तल्या देवालय उच्चा गरी बनाई ईश्वरीकन विधानपूर्वक स्थापना गऱ्या त्यहाँपछि श्रीभैरवनाथका देवालय बनाइदिया । श्रीतलेजुका स्थापनामा सुनको छाना बनाई सुनका एघार गजुर बनाई मूलचोक सुन्दर गऱ्या । विश्व जात्राका रथ अघिका भन्दा ठूलो गरी बनाईदिया । फेरि आफ्ना मूर्ति बनाई खम्बामाथि स्थापना गरी श्रीतुलजा प्रीति गरी राखिदिया यस खम्बालाई कालीगडहरूले खडागर्दा खम्बा भाचिन गयो र राजा बहुतै मनमा फिका गरी पछिबाट कान्तिपुरका राजासँग तैलकार मागी ल्याई काम लाउंदा कान्तिपुरका तैलकारहरूले जोडी खडा गरिदिदा बहुतै खुशी भै तैलकारहरूलाई खिलत दी पठाया । फेरि ठूलो घण्टा बनाई दरबार अगाडि राखी श्रीतुलजा भवानी प्रीति गरिदिया । तिनफेरा कोटयाहुति यज्ञ गरी शान्त भै गया ।

अस्य पुत्र रणजितमल्ल वर्ष ३३ यिन राजाका पालामा गोर्खाका राजा पृथ्वीनारायणशाह आई चाकरी गर्न आया । भक्तपुरका राजाले उनका शुच्याई और बुद्धि देखी खुशी भै आफ्ना पुत्र वीरनृसिंहमल्लसंग मित्रता गराई पुत्र भनी प्रीतिगरी राख्या । यस्तै समय दशैंमा कौमारीकन पूजा गरी भोजन गराई कौमारीका हातबाट एक नीलकमलका फूल राजाकन दिनुपर्न्या रीत अघिदेखि चल्याको थियो । सोहि पुस्प भक्तपुरका राजाकन नदी उनका आस पास रह्याका पृथ्वीनारायणशाहकन दिइन त्यहाँ पछि भक्तपुरका राजा प्रजा सबैले नेपाल यिनिका सौंप्या भनी भन्न लाग्या । पृथ्वीनारयणशाहले ३ वर्षसम्म रहदा भक्तपुरका राजाबाहेक अरूलाई गम्य नभयाको फूल प्रसाद कौमारीका हातबाट पाई

नेपालका चाल चलन सब बुझी विदा भै आफ्ना स्वस्थानमा गया। भक्तपुरका राजा रणजितमल्लले भैरवका देवालयमा सुनका छाना बनाइ दिया । दर्वारमा पनि आवरणसहित देवताका मूर्ति प्रकाश गरी सुनका सुन्दर दर्वाजा बनाया । फेरि दर्वारभित्र घेरै चोकहरू बनाई दर्वार बढाया । दर्वारबाहिर नगरा २ बनाइ ईश्वरी प्रीति गरी नित्य बजाउन लाया । यस्ता तरहसँग कीर्ति बढ़ाई प्रजाकन खुशी राजी राखी अनेक शास्त्रका ग्रन्थहरू चिकित्साप्रमाणका औषधीहरूधन इत्यादि अनेक जात जातका वस्तुको संग्रह गरी कोट्याहुति यज्ञ गरी अन्तमा गोर्खाका राजकन प्रवेश गराई आफु काशीवास जान्छु भनी जाई काशी क्षेत्रमा प्राणत्याग गऱ्या ।

रणजितमल्लका पुत्र बीरनृसिंहमल्लले राज्य भोग गर्न नपाई बस्या । यिनदेखि सूर्य्यवंशी राजा नेपाल पुरीमा शून्य भै गया । तुलजा भवानीकन नेपाल पुरीमा प्रवेश गराउन्या राजा हरिसिंहदेव देखि रणजितमल्लका छोरा बीरनृसिंहमल्लसम्म २३ पुस्ता । हरिसिंहदेवका पुर्खा नान्यदेव राजादेखी पाँच ५ पुस्ता थप्दा जम्मा पुस्ता २७ राजा भै अट्ठाइसौं २८ पुस्तामा राजा शून्य भै गयाका हुन् । सूर्यवंशका कुलमा अयोध्या नगरीका राजपदबी छुट्न गयापछि सूर्यवंशी राजपूत स्थानदेखि पतित भै अन्यत्र देशान्तर जाई बस्या । यिनिहरूमध्ये एक नान्यदेव भन्याका सूर्यवंशी राजपूतले श्रीतुलजा भवानीका अनुग्रहले तुलजा भवानीकन पूजा भक्ति भाव गर्न पाउँदा राजा भया । केवल यिनै श्रीतुलजा भवानीका अनुग्रहले सूर्यवंशी नान्यदेवका वंशमा २७ पुस्तासम्म राजा भै राज्यभोग गर्न पायाका हुन । अठाइसौं पुस्ता लाग्दा नेपालमा सूर्य्यवंशी शून्य भै गया ।

## कान्तिपुर

अथ कान्तिपुरको महिमा रत्नमल्लका छोरा अमरमल्ल वर्ष ४७ यिन राजाले प्रथम हरिसिद्धि परापूर्वदेखिका त्रिशक्तिदेवी प्रमुख सूत्रधारले नागेन्द्रलाई वध गऱ्याको शास्त्रोक्त प्रमाणका नाचकन ठूलो संमान गरी जगाई कान्तिपुरमा नचाई नृत्यलीला गराया । हरिसिद्धि नाचका (हात्तीका) दोषले अन्न घटाया भनी सहकालनिमित्त खोकनाका रुद्रायणी देवीका नृत्यलीला बनाई नृत्य गराया । फेरि जमाचय पर्वतवासी हरि चोक देवीका नृत्य बनाई चलाया । फेरि मनमयजु इन्द्रायणीका नृत्यमा त्रिशक्तिसहित गरी नृत्यलीला बनाई चलाया । फेरि पञ्चलिङ्ग भैरवका नृत्य दुर्गागणसहित गरी नृत्य चलाया। फेरि कंकेश्वरी कालीदेवीका नृत्य मातृकागणसहित गरी चलाया । फेरि लुमुडीमाई महाकालीका नृत्य आवरण गणसहित गरी बनाई चलाया । फेरि कान्तिपुर सहरभित्रका नटेश्वरीका नाचमा श्वेतकाली वाराही भैरव चण्डेश्वरीप्रमुख गरीचण्डासुर दैत्य वधका लीला गरी गणावरणसहित गरी नृत्य बनाई चलाया । यस नाचमा कीर्तिपुरका बाघभैरव आवाहन गरी धुंचा व्याघ्रीत्रि बनायाको हुनाले कीर्ति

पुरमा नचाउन जानुपर्न्या रीत चलाया । यिन राजाले गुणी जनहरूकन नजीक नजीक राखी अनेक स्थानका पीठ जगाई पूजा मान्य गरी देवी गणहरूका नृत्यलीला बनाई प्रतिवर्ष नृत्य चलाई आनन्दसित राज्यभोग गरिरहंदा कोहि समय एक दुर्जन मानिसले कंकेश्वरीका नृत्य प्रकाश हुन्या बेलामा मनुष्य पशुरूप गरी सन्मुखमा रहंदा देवी कोप भै नरबलि भक्षण गन्या र यहाँ उप्रान्त यस्ता तरहसंग नृत्य कठिन होला भनी ठानी कंकेश्वरी कालीकन पूजा मान्य गरी शान्ति गराई नाचमनाही गरिदिया । नरबलि नभै यस नाच प्रकाश नहुन्या भै गयो । अरु देवीगणका नृत्य लीला कोही प्रतिवर्ष कोही बाह्र वर्षमा हुन्या गरी रीत चलाया । अद्यापि पर्यन्त यही रीत छंदैछ ।

यिनै राजाले फेरि लुमडी यी कंकेश्वरी काली लुंभुलु देवी आदि देवताहरूकन रथारोहण गरी चैत्र मासका प्रेत चतुर्दशीका दिन यथाक्रमले गरी रथारोहण गराई सहरमा यात्रा प्रतिवर्ष चलाया । यिन राजाले राज्य गर्दा अम्बल गन्याका सहर गामहरूका नाम कान्तिपुर राजधानी सहर ललितपत्तन सहर बाडा ग्राम हारसिद्ध ग्राम लुभु ग्राम गानागाउ ठेमो सुनगुठी चंगाग्राम फर्पिङ् मच्छिन्द्रपुर कीर्तिपुर खोकना पांगा थानकोट बनमु नवकोट हरिचोक फुटग्राम धर्मथली टोखा चपलीग्राम ननग्राम वलग्राम धुलुग्राम गोकर्ण देवपत्तन नान्दग्राम नन्दिसार सालीग्राम यतिग्राम नेपाल खाल्टाभित्रका भोग गरी राजधानी सहरमा रहंदा राजाले गुणी पण्डित जनहरूसित सोध्न लाग्या । यि ग्रामहरू कैले देखि बन्याका हुन भनी सोध्दा गुणी पण्डित जनहरूले चढाया । हे राजन् यी ग्रामहरू अघि अगिका राजाहरूले बनायाका हुन । यी ग्रामहरूमध्ये कोही ग्रामहरू ब्राह्मणपुत्री जामातृहरूकन दान गन्याका हुन् । कोही देवताका आज्ञाले बनायाका कोही देश र अघिक डूबा देश उब्री शेष रह्यामा बनेका नन्दिग्राम मालीग्राम यी तीन ग्राम परा पूर्वदेखिका मुख्य सहर विशालनगरका शेषमा बनेकाहुँन । यही मध्ये मालीग्राम यिनै राजाका पालोमा आगो लागी डढिगयो र नन्दिग्रामसन्धि बनाया । चांगुनारायणका आज्ञाले स्वस्था पर्वत शीलागिरिविषये सात सय घर बनाई प्रजाकन राखिदिया ।

अघिका राजा शंकरदेवले वज्रयोगिनी देवीकन शंखका आकारले देश बनाई देवीकन प्रीतिगरी चढायाको देश हो भनी सुजन पण्डितहरूले यस्ता तरहसंग राजाकन बनाया । यहाँ उप्रान्त यी अमरमल्ल राजाले सुखपूर्वकसित राज्यभोग गरी शान्त भै गया । अस्य पुत्र सूर्यमल्ल वर्ष ५१ यिन राजाले भक्तपुरका राजाले अम्बल गरी राख्याको देश चांगु शंखपुर यी दुइ देश बलात्कार गरी भिची आफ्ना राज्यसंग मिलाई भोग गन्या । केही वर्ष शंखपुरमा बसी वज्रयोगिनी गोलेश्वर महाकालभैरव सिंहिनी व्याघ्रिणीकन रथारोहण गराई स्थानदेखि चार दीन अघी शंखपुरमाल्यार्इ पूर्णिमा दीन मूलयात्रा गरी बडो उत्सव गरी देश घुमाई चौथा दीनका दीन स्वस्थानमा लैजान्या रीत गरी प्रतीवर्षयात्रा गराया । यी राजाले वज्रयोगीनी देवीका यात्रा बनाई वर्ष ६ सम्म शंखपुरमा बास गरी राजधानी सहर का-

न्तीपुरमा आयाका समय बाला नाम एक कोही शूद्र जाती राक्षस नररूप भै जन्म लीन आयाको हुनाले मृतक जलाउँदा नरमांस चोरी खायो र बिकट दन्त नीस्की भयंकर दैत्यस्वरूप भै आयो प्रजाहरू मरण हुँदा बेलामा संस्कार गर्ननिमित्त लैजादा बाटामा श्मसानमा मुर्दा खोसी बलजफत् गरी मृतकमांस आ-हार गरी बहुतै दुःख कष्ट त्रास प्रजाहरूकन दिदा बालादैत्य भनी सब मानिसले भन्न लाग्या । राजा सूर्य-मल्लले आपना पालामा यस्ता तरहको राक्षसरूप भै प्रजाहरूकन दुःख दी उपद्रब गर्‍याको देखी क्या युक्तीसँग यस राक्षसलाई मार्‍याँ हो भनी विचार गर्दा त्यस बालदैत्यको अघि नररूप छँदाको मित्र एक कोही तैलकार थियो । उसलाई बुझाई मनवेशी लोहका शस्त्र बनाई युक्तिसँग पठाई बालदैत्यलाई वध गराया । त्यहाँ पछि राजाले त्यस बालादैत्यलाई मारिदियो भनी खुशी भै तैलकारहरूकन अघि नभयाको मृत बाद्य मरणकालमा बाद्य बजाईलैजानु भनी बाजा सिरोपाउ दिया । बाजा अद्यापि तैलकारहरूलाई छँदैछ ।

अस्य पुत्र नरेन्द्रमल्ल वर्ष ५ यी राजाकापालामा देवपत्तनवासी नेवार कोलोखा नाम गर्‍याको थियो । त्यसले धेरै दिनसम्म नित्य चाँगु जाई नारायणका दर्शन गरिरहंदा एक दिन मनमती ठूलो बाढ़ी आयो र तरी जान नसकी मनमा बहुतै फिक्रा गरी मैले धेरै वर्षदेखि सेवा नित्य गरिरह्याको आज मैले दर्शन गर्न पाइन भनिरहंदा ईश्वर नारायणका अनुग्रहले आकाशवाणी भयो । हे कोलोखा अब तैंले नित्य चाँगु पुग्न पर्दैन । यो मेरा मूर्ति बगाई ल्यायाको तैंले लैजाई देवपत्तनमा बक्रकुण्ड स्वयम्भू ब्रह्ममूर्तिसन्धि स्थापना गर भनी यस्ता तरहका आकाशवाणी सुनी त्यस भक्तजनले मनमतीमा हेर्दा जलबिषये श्रीलक्ष्मी-सरस्वतीसहित श्रीभगवान् नारायण शिलामूर्ति देख्यो र उठाई ल्याई ईश्वरका आकासवाणीप्रमाण ब्रह्ममूर्तिसन्धि स्थापना गरी कृष्णाष्टमी जागरण पूजा अनेक गूठीराखि दियो । नारायण अद्यापि छँदै-छन् । यीन राजाका पालामा अघिका त्रिशूल यात्रा रक्षाका निमित्त गुठ राखिदिया । भुवनेश्वरीका देवालय जीर्णोद्धार गरी अघिको भन्दा बढ़ाई देवालय बनाई दिया ।

अस्य पुत्र महेन्द्रमल्ल वर्ष ४३ यिन राजाले आपना दर्बार उत्तरपट्टि श्रीपशुपतिनाथका आज्ञा पाई पशुपतिका उपमाले देबालय बनाई शिव स्थापना गर्नालि शिवका नाम महेन्द्रेश्वरहुन । पशुपतिना-थका आज्ञाले बनायाको हुनाले पशुपति भनी नाम प्रख्यात गर्‍या । फेरि दर्बारका समीपमा कोटिलिंगे-श्वर महादेव स्थापना गरी सिङ्गै देबालयमा सुनले छाप्या । त्यस देवालयको नाम कोटिलिंग भनी भन्छन् । फेरि श्वेतहंसबाज डिल्लीका बादशाह अकबरशाहकन सौगात पठाया ।

तो बादशाह कस्ता हुन भन्या विक्रमसंवत् १५८६ माघ शुक्ल १२ का दिन तपसी मुकुन्द नाम ब्रह्मचारील सुखभोगका निमित्त तीर्थराज प्रयागमा फालहाली प्राणत्यागगरी दिल्लीका बादशाह तैमुरका कुलमा हुमायुका पुत्र भै बेगम सुलतानेहामिदेका गर्भबाट बिक्रम संवत् १५९० साल आदित्यबारका दिन पैदा भया । अनि यिनका बाबा बादशाह हुमायुलाई दिल्लीका तख्तबाट सेरसाहले निकाल्दा भाइहरूका

दुष्ट बुद्धि हुँनाले र सरदारहरू निमकहराम हुनाले बहुतै दुःख पाया। यस्ता तरहसंग पतित भयाका बादशाहले पुत्र जन्म भयापछि पुत्रको लक्षणका प्रभावले इरानका बादशाह ताममास्पदका मदद पाई फेरि आफ्ना दिल्ली तखतको अधिपति हुन पाया। तपसीले अवतार लियाको हुनाले तैमुरका घरानामा यतिका बडा बादशाह संसारमा जस कीर्ति प्रख्यात भयाका प्रतापी अरू कोही बादशाह भएनन्। यिनै बादशाह अकबरले बिक्रमसंवत् १६०३ साल तखतमा बस्यापछि कोही वखतमा सौगात पठाई बादशाह खुशी गराई छमासाका छाप बक्साई आफ्ना नामको टक बनाई छाप मारी महीन्द्रमल्ली कहाई भर मुलुकमा चलन चलाइदिया। फेरि यवन भन्याका मुसलमानहरूकन कान्तिपुरमा घरखेत बिर्ता दी बसाया।

फेरि यिन राजाले तुलजादेवीका आदिस्थान भक्तपुर हो भनी नित्य नित्य जाई तुलजा मूलमन्त्र जपी दर्शन गरी फर्की आउँथ्या। यस्तै तरहसंग नित्य धाई सेवा गर्दा श्रीतुलजाभवानी प्रसन्न भै स्वप्नशिषे हे राजन् तँ यहाँसम्म नित्य धाउनुपर्दैन। यस स्थानको गजूर त्यहाँका स्थानको द्वार बना बराबरसम्म सूत्रप्रमाणले इच्छा गरी जग बनाई यन्त्राकार आवरण देवताले संयुक्त गरी देवालय बनाउनु र म कान्तिपुरमा जाई त्यस मन्दिरभित्र प्रवेश गर्न आउँला भनी आज्ञा प्रसन्न हुँदा राजा महेन्द्रमल्ल अत्यन्त खुशी भै मखनडबलीदेखिन् दक्षिण तानांदेवदेखिन् पश्चिम भोछेदेखिन् उत्तर प्यफलदेखिन् पूर्व यति चार सिमानाभित्र जगा ठहराई श्रीतुलजाका देवालय बनाउन आरम्भ गर्दा दिनभरि बनायाको रातभरिमा नासी राख्न्या यस्थै तरहसँग दुःखदिदा कालीगढहरू पनि चकित भै गया। त्यहाँ पछि राजाले क्याकारण यस्तो भयो भनी बिचार गर्दा तानांदेवले आफ्ना स्थानभन्दा उच्च गरी देवालय बनाउन लाग्या भनी बिगारिदियाको रहेछ र ती तानांदेबलाई राजाले २१ गजुर ३६० रागाँ वलि चढ़ाउला भनी भाख्या उप्रान्त निर्विघ्नसित यन्त्राकार सुन्दर देवालय सिद्ध भयो। त्यहाँपछि अघि तानांदेवलाई भाख्यामध्ये तानांदेवलाई ५ गजुर चढ़ाई बाँकी गजुर १६ चानक देवलमा राखिदिया। ३६० रागाँमध्ये तनांदेवलाई १ रागाँमात्र चढाई ३५९ राँगा दसैँमा सबै देवतालाई पुजा गरी बलिदान गऱ्या। तुलजा भवानीका देवालयलाई ५ गजुरले मखनडबली ढाक्न्या गरी बनाई चढाई सुवर्णले छाना छाईदिया।

त्यहाँपछि नेपाली संवत् ६८४ साल मिति माघ कृष्ण दशमी तिथि सोमवार अनुराधानक्षत्रका दिन बढ़िया मुहूर्त पारी कोट्याहुति यज्ञ आरम्भ गरी यथाक्रमले सबै देवता आवाहन गरी प्रतिष्ठाकर्म गरिरहँदा श्रीतुलजा भवानी भ्रमरस्वरूप भै आई देवालयभित्र प्रवेश गर्दीभइन्। त्यहाँपछि राजा बहुतै कृतार्थ भै बड़ो उत्साह गरी धेरै ब्राह्मणहरूकन बिर्ता दक्षिणा दी देवालय प्रतिष्ठा गराया। त्यसदिनदेखि कान्तिपुरमा सबै जनाले ठूला उच्च घर बनाउन पाया। फेरि यिन राजाले पशुपतिनाथकन चार नाग चाँदीका बनाई चारै मुखकन चढाया। अद्यापि छँदैछन्। यी नाग बडा प्रत्यक्षका हुन्। फेरि पशुपति-

नायमा तुलजामा धेरै गुठ पूजा गहना ईश्वरी प्रीति गरी धेरै धर्म कीर्ति यस जगत्मा प्रख्यात गरी अन्तमा शान्त भै उद्धार भै गया ।

अस्य पुत्र सदाशिवमल्ल दोस्रो पुत्र शिवसिंहमल्ल वर्ष २५ सदाशिवमल्लले कुसङ्गको सङ्गरी धेरै घोडाहरूको बथान तुल्याई छाडी पठाई प्रजाहरू सबै कन हाहाकार गराया । फेरि बडा बडा यात्राकालमा हेर्न आउन्या सुन्दरी स्त्रीहरूकन पनि जबरदस्ती गरी लगी धेरैलाई बिगारीदीया र प्रजाहरू सब मिली नोल मुग्दरहरू ली राजा मनोहरातिर खेलन जाँदा नोल मुग्दर ढुङ्गाले प्रहारगरी भक्तपुरमा भगाया यी राजाले बहुतै उपद्रव गरी प्रजाकन पीडा दीन्या हुनाले भक्तपुरका राजा नरेशमल्लले एक चोक भीत्र राखी बन्द गरी खानपीन दी राखीदीया । केही दिन पछि त्यस चोकमा लोप भै गया । सदाशिवमल्लका चोक भनी प्रख्यात भै गयो । केही दिन पछि त्यस चोकमा लोप भै गया र त्यस चोकको नाम सदाशिव मल्लको चो भनीक प्रख्यात भै गयो ।

यहाँ उप्रान्त नोल मुग्दर समाल्न्या प्रजाहरू सबै मिली दाज्यू सदाशिवमल्लकन भक्तपुरतिर भगायापछि तिनै प्रजाहरू सब मिली भाइ शिवसिंहमल्लकन राजा गराया । यी राजा बडो ज्ञानी हुनाले दक्षिण महाराष्ट्र देशदेखि लक्ष्मीनारायण नाम लम्बकर्ण भट्ट ब्राह्मण नेपालपुरीमा आई कुलेश्वरमा बसी राजाप्रजा सबकन हेरी देसका लक्षण विचार गरी सहरभित्र प्रवेश गरी राजासँग भेट गर्‍या । राजाले बिचार गर्दा उत्तम पुरुष ठहराई बहुतै सन्मान गर्‍या । त्यहाँपछि राजाले ती लम्बकर्ण भट्टकन गुरु वरीमन्त्रदान लिया । यिनैका मन्त्रका प्रभावले ललितपत्तनका वैश्य राजाकन जिती दुवै सहर भोग गर्‍या । गुरुका आज्ञाले कान्तिपुर ललितपत्तन दुवै सहरमा देगुतलेका देवालय बनाई यथाक्रम विधानपूर्वक बाह्याभ्यन्तर गरी श्रीईश्वरीकन स्थापना गर्‍या ।

फेरि नेपालसंवत् ७०५ आषाढकृष्ण ५ कान्तिपुरका चिकंमुगलमा यिनै भट्टले आगम श्री वज्रयोगिनीका रहस्य ध्यानले गरी स्थापना गरिदिया । ललितपत्तनमा पनि स्थान बनाई आगमहरू गणेशका मूर्तिहरू स्थापना गरिदिया । यी लम्बकर्ण भट्ट बहुतै मन्त्र शास्त्रमा प्रवीण सामर्थवान् हुनाले घर खेत बिर्ता दी कान्तिपुरमा वास गराया ।

फेरि तिह्लौंतिया पण्डितहरू देस पढ्याका हुन्छन् भनी चार घर ब्राह्मणहरू विशेवारकर्म हसको नयन खार भन्याका यति ४ घरकन तिह्लौंतबाट झिकाई घर खेत बिर्ता दी पुत्र परिवार समेतलाई कान्तिपुर आदि सहरमा बसाया । यिन दिनदेखि नेपालमा तिह्लौंतिया ब्राह्मणहरूको पूर्ण प्रवेश भयो । फेरि राजकुमारहरूकन मैंया लिन पनि तिह्लौंतैमा भै गया । मैयाहरू सत डोलाका साथ आउन्या ब्राह्मणहरूकन परिवार घर खेत बिर्ता दी बसाया । यही समय परापूर्वकालदेखि नन्दिग्रामबासिहरूका रक्षकारी पूर्व दिशाकी देवी भै रह्याकी बाराही देवीले प्रजाहरूकन मलाई बगाई लैजाला भनी जनायाको थियो ।

आज्ञाप्रमाण चौथो दिनमा चोभारका नागले रुद्रमती तीरका बाराहीकन बगाई बाग्मतीदोभान धोरै नाघदा लैजान सकेन र अड्किनरह्याकी अद्यापि छन् । तिलबाराही कहाई रह्याकी छँदैछन् । नन्दिग्राम वासिहरूले पैले देवीले खबर दिँदा पनि जानीजानी केहि याद नगर्नाले देवी कोप भै नन्दिग्रामवासिहरू दुखी हुँन गया । त्यहाँपछि नन्दिग्रामवासिहरूले ग्रामरक्षक पीठ बिना हामीलाई भलो हुन्या छैन भनी देस उत्तरपट्टिका वैष्णवीपीठ जगाई अन्नका धेरै पाक गरी सुवर्णका मूर्ति बनाई स्थानमा लैजाई विधि गरी वैष्णवी गणहरू रथारोहण गराइ राजा बक्साइ धेरै गुठ राखी जात्रा गरी प्रतिवर्ष चलाया ।

यी शिवसिंहमल्ल कान्तिपुर ललितपत्तनका राजाका पुत्र र ज्येष्ठ लक्ष्मीनरसिंह कनिष्ठ हरिहर सिंहमल्ल यी हरिहरसिंहमल्ल ललितपत्तनमा राज्यभोग गर्न गया । यिन राजाले पुत्रका कल्याणनिमित्त भुल्लुनाम ग्राम बनाई ताम्रपत्र गरी श्रीपशुपतिनाथकन प्रीति गरिदिया । फेरि यिन राजाले पञ्चलिङ्ग भैरवका कूप कैले भरिदैन भन्याको सुनी म भरिदिउँला भनी अहंकार गरी धेरै द्रव्य ल्याई भर्दा पनि भरिएन र बाग्मतीका पानी उठाई ल्याई भऱ्या तैपनि भरिएन र राजाले मैंले नबाहिदो अहंकार गऱ्याछु भनी चेती अपराध क्षमा गर्न निमित्त धेरै खर्च गरी पूजा गऱ्या । अद्यापि पञ्चलिङ्ग भैरवका यात्रा प्रति केही पूजा पठाउँदैछन् । यस्ता प्रत्यक्षका भैरव हुन । यिनै वर्षका जात्रामा भैरव कोप भै चिकंमुगलमा कूप रवसी फुट्यो र शिवसिंहमल्ल कान्तिपुरका राजा भैरह्याका हरिहरसिंहमल्लका बाबाले भैरवका कूप फुट्याका टुक्राहरू सब जम्मा गरी जमीनमा गाडी शिलाले ढाकी यथाक्रमले पूजा गरी स्थापना गरी भेलुपात स्थान भनी प्रख्यात गरिदिया । त्यहाँपछि राजाले यो पञ्चलिङ्ग भैरव दक्षिण क्षेत्रपाल बडा प्रत्यक्षका हुन् भनी अघि वैश्य ठकुरी राजाहरूले मृत्तिकाको कूप बनाई जात्रा चलायाको यिनका पालादेखि धातुका कूप बनाई भैरवका ध्यानले युक्त गरी नाना द्रव्यले भरी आश्विन शुक्ल पञ्चमीका दिन प्रतिवर्ष जात्रा गराया । पुत्र हरिहरसिंहमल्ल पाटनका राजाको स्वभाव देखि पिता शिवसिंहमल्ल माता गंगा रानी दुवै स्त्री पुरुष शंका मान्दथ्या । गंगा रानीले नजीक गरी वनविहारका इच्छाले बूढानीलकण्ठमा अर्ध-मार्ग विषय सुस्थिर गरी ठूलो बगैंचा बनाई रानीवन भनी नाम प्रख्यात गरी जात जातजा फलफूल अनेक जातका बिरुवालाई तैयार गरिराख्याको थियो र एक दिनमा राजासहित वनविहार निमित्त जाइरहदा दाज्यू लक्ष्मी नरसिंह मल्लकन बाबाका शेषपछि दुवै सहरको भोग गरूंला भन्या इच्छाले केही अपवादलाई दर्बारबाट धपाई पठाया । लक्ष्मीनरसिंह मल्ल भाइको ठूलो डर मानी देवपत्तन जाई राधि विषय एक रञ्जीक संवटको घरमा गुप्त गरी दबी रहन गया । धेरै दिनसम्म दबी रहदा रञ्जिकपुत्री यी दुवै नीफीकुंचा पचंचा नाम गऱ्याकीहरूले राजपुत्रकन धेरै प्रकारले सेवा गरिराख्दा सबै कर्म भयो र राजपुत्रले मेरा राज भै गया तिमीहरूकन पानी चलाइदिउँला भनाई राख्या । ललितपत्तनका राजा हरिहरसिंह सम्म र कान्तिपुरमा बाबा महातारिकन भेट्न नीमित्त आउँदै जाँदै गर्दथ्या । ती राजारानीले जेष्ठ पुत्रको खोज गऱ्या । कान्छा पुत्र रिसाई कलह उठा-

ला भन्या सदेन्हु मानी ज्येष्ठ पुत्रको खोजखबर नगरी रह्याका थिया। यस्तै समय नित्यानन्द नाम ब्रह्मचारी घोडान्यासी स्वामी दक्षिण देशदेखि आई पशुपतिनाथमा प्राप्त भयाकाछन् भन्या खबर गंगा रानीले सुनी रानी जाई स्वामीका सन्मान गरी परीक्षा गरी पशुपतिनाथका पूजक योग्य ठहराई अर्पणकारि गरिदिइन्। यी नित्यानन्द स्वामी कस्ता थिया भन्या बडासमर्थवान् सबै कर्म क्रिया जान्या हुनाले राजाका कल्याणनिमित्त ललितपत्तनका अघिअघिका राजाहरू धेरै दिन नठहन्याको कारण अघोरनाथका दृष्टि सन्मुख पर्नाले हो भनी ठहराई अग्रभागमा कुतूहल क्रिया संयुक्त गरी श्रीउन्मत्तभैरवकन स्थापना गरिदिया। यिन दिनदेखि ललितपत्तनका राजाको बढिया हुन गयो। फेरि सिम्भूका बुढियाको बालखहरूको भय पनि निवारण भै गयो। ती बुढियाको भय देवालनविषय यी भैरवका कृपाले भय नास्ति भै गयो। अरू स्थानमा रह्याका बालखहरूकन ती बुढियाका भय भयो भन्या उन्मत्त–भैरवकन पूजा गन्या शान्ति।

फेरि राजराजेश्वरीका जंगल पनि ठूलो गरी पशुपतिनाथका दृष्टि खुशी निमित्त बसाया। त्यहाँ यी स्वामीले गंगा रानीकन बोलाई अब तिम्रा सन्तानहरूको दुवै सहरविषे स्थिर भोग रहला भनी आज्ञा भयो। फेरि यिनै स्वामीका कृपाले रानीले पशुपतिनाथका देवालय पनि तिन तला छाना भै रह्याको बिग्रनलाग्यो र परन्तुसम्म कष्ट होला भनी मध्यम खण्डका छाना शून्य गरी दुई तलामात्र छाना गरी अघिको सुनका छाना बिग्र्याकोमा धेरै सुन राखी गजुर बनाई त्रिकोण इट पारी देवालय संपूर्ण गरी छाई बनाई गजुर चढाइन्।

नेपालसंवत् ७०५ सालमा त्रिकोण इट उब्रन गयोर चाँगुनारायणका देवालय सम्पूर्ण गरी छाइदिया फेरी गंगा रानीले पशुपतिनाथकन पताका चढाई स्वामीका आज्ञाले कान्तिपुरका दरबारमा एक पताका बाँध्न लैगया। यति गरि केही कालपछि राजा रानी दुवैलोप भैगया। पशुपतिनाथका देवालय नैऋत्य कोणका सरभ रात्रिविषये विशब्दगरी कराउँदा सुन्या मानिस तर्सी कोही बहिरा पनि भैगया यति भया उप्रान्त चौथो दिनमा राजा रानी लोप भैगयाका हुन्।

यहाँ उप्रान्त लक्ष्मीनृसिंहमल्ल जाई कान्तिपुरका मन्त्री प्रजाहरूको मद्दत पाई राजा भया। हरीहरसिंहमल्लले ललीतपत्तनैमा राज्य गन्या। यी हरिहरसिंहमल्लले ललीतपत्तनमा राज्य गन्याको माता पितास्वर्ग नहुँदैमा हो। धंतलेबाराहीकन बगाई ल्यायाको र पंचलिंग भैरवको प्रत्यक्ष पायाको पनि आफू राजा भयापछि हो। यी हरिहरसिंहका भोगवर्ष २१।

अस्य पुत्र सिद्धिनरसिंहमल्ल राजाका भोगवर्ष ४१ नेपाली संवत् ७४० आश्विन शुक्ल दशमी आदित्यवारका दिन राजा भया। काजीहरूका जुक्तीले हरिहरसिंहमल्लराजाकन र लालमती रानीकन पशुपतिनाथका मन्दिरसन्धि दक्षिण पश्चिम थोरै दिन बास गराई गर्भाधान भै बढ़िया लग्न पाई जन्म भयाका हुनाले अतिज्ञानी भया। यिन राजाले संवत् ७४१ साल मछिन्द्रनाथका देवालयमा एक

तला बढ़ाई सुनका छाना बनाई गजूर चढ़ाया । यिनै राजाले अघिकाभन्दा सुन्दर गरी दर्बार बढाई बनाया । सुनका ढोका बनाई राखिदिया । दर्बारका दाहिना बाज नरसिंह पञ्चमुखी गणेश हनुमान् स्थापना गरिदिया । भित्र ढुंगाका चोकमा सुनका धारा बनाई नन्दमूर्ति बनाई अति रमणीय स्थान बनाई संवत् ७६७ वैशाखकृष्ण उत्तराषाढ़ा नक्षत्रबृहस्पतिवारका दिन स्थापना गरिदिया ।

फेरि दिगुतले भवानीका देवालय ठूलो पाँच तला छाना गरी अघिका भन्दा बढ़ाई बनाई सुनका छाना बनाई संवत् ७६७ ज्येष्ठ कृष्ण २ उत्तराषाढ़ानक्षत्र बुधवारका दिन गजूर चढ़ाया । फेरि तुलजा भवानीकन यथाक्रमले स्थापना गऱ्या । दशैंमा टिकाका दिन दर्बारबाट गमन गरी ठेचोका गठ नाच ललितपत्तनका दुर्गागणका नाचसमेत खड्गयात्रामा जनुपऱ्यो रीत चलाया । भण्डारखालमा पोखरी धारासहित गरी बनाई बीचमा सुनका कमल राखिदिया । फेरि मंडपमा भूगोलका आकारले देवतासहित गरी काठको चढुवा गरी गजूर चढ़ाया । फेरि सुनका कमलमाला बनाई मछिन्द्रनाथकन चढ़ाया । यिन राजाका महारानि लालमती रानीले तीनतला देवालय बनाई विश्वेश्वर शिवकन लक्षाहुति यज्ञ गरी स्थापना गरिदिइन् । यहाँ पछि राजाले दर्बारका अगाडि ढुंगाका देवालय बनाउनकन सब सरंजाम तयार गरी संवत् ७५० भाद्रशुक्ल १५ रोज ७ का दिन आरम्भ गरी अति सुन्दर दश अवतार महाभारत रामायण पुराण प्रमाण आवरण क्रमले मूर्तिहरू बनाई राम्रो देवालय संपूर्ण गरी बनाया ।

यस्तै समय गोपीकृष्णले स्वप्नामा म फलाना ठाउँ छु मेरो बनायाको देवालयमा मलाई स्थापना गर भनी आज्ञा प्रसन्न हुँदा आज्ञाप्रमाण खोज्दा श्रीकृष्णका मूर्ति र राधाजीका मूर्तिकन बुइंगलमा पाया । ती मूर्ति त्यहाँ कस्ता तरहसंग रहन गयाको हो भन्या अघिका राजाले भण्डारखालका जमिनभित्र पाइ दर्बारका बुइंगलमा राखि छोड्याको रहेछ । यिनै मूर्ति २ कन ल्याई अर्को एक राधाजीका मूर्ति बनाई तीन मूर्तिसहित गरी नेपाली संवत् ७१७ साल फागुन शुक्ल १० पुनर्वसु नक्षत्र बृहस्पतिवारका दिन कोट्याहुति यज्ञ विधानपूर्वक गरी देवालय प्रतिष्ठा गरी बडो उत्सव संग श्रीकृष्ण भगवान्‌कन स्थापना गरिदिया । देवालयका सन्मुखमा ठूलो खम्बा बढाएरी सुनका गरुड तेजकन स्थापना गरिदिया । देवालयमा सुनका २१ गजुर चढ़ाई ब्राह्मणहरूकन दक्षिणा वस्त्र गहनाहरू दी धेरै ब्राह्मण [illegible] जंगम बैरागी फकीरहरूलाई न भोजन गराया ।

यही कोट्याहुति यज्ञ श्रीकृष्णका मन्दिर सन्मुखका मण्डपमा यज्ञ आरम्भ गरी यज्ञ कुण्ड बनाउँदा चुक बहालको गुभाज्यू बडो सामर्थी थियो र त्यस गुभाज्यूका मनमा मन्त्र कार्य ब्राह्मणहरूले चलाउन लाग्या । हाम्रो त जान्याको शास्त्र त व्यर्थ भया भनी रिसाई यस यज्ञमा विघ्न गरिदिनुपऱ्यो भनी ढोकाबाहिर खेतमा मन्त्र पढ़ी माटो फोर्दा यज्ञकुण्ड बनायाको अकस्मात् यज्ञ भत्की चूर्ण भै बिग्रचो । फेरि बनाउँदा फेरि बिग्र्यो । यस्तै तरहसंग दुइ चार बार हुँदा यो त बडो आश्चर्य भयो क्या कारण रहेछ भनी विचार गर्दा चुकबहालको गुभाज्यूले गरायाको ठहराई आफ्ना प्रोहित बकनिहा कुलका

विश्वनाथ उपाध्याय लाई यस्ता ईश्वरका प्रतिष्ठा कर्म गर्न लाग्दा यज्ञ विघ्न गरिदिन्याका मन नगर बरु लल ई पनि यो यज्ञमा बसाउँला भनी बुझाई हात ली आई ओट्याहुति जज्ञ वेदोक्त तन्त्रोक्त प्रमाण गरी आफू होता भै विश्वनाथ उपाध्याय जज्ञ आरम्भ गरी कर्म चलाय ।

यस्तै समय कान्तिपुरका राजा प्रतापमल्ल र तनका प्रेमी जामन नाम गुभाज्यूले सिद्धिनृसिंहमल्ल-का जज्ञ आरम्भ गरीयाका विघ्न गर्नको इच्छा गरी जज्ञमंडपमा भूतका झ डाका रूप ली गै रुन लाग्या। किन रुन्छौ भनी सोध्या । खान्या कुरो माग्दा खान्या कुरो दिंदा भोटाका थैलामा थाप्या । दिंदा दिंदा पनि तिनहरूका थैला भरिदिन नसक्दा यिनिहरू त मानिस रहेनछ विघ्न गर्न निमित्त आउन्या हुन् भनी जानी बोली गर्दा तिनिहरू अलप भै गया ।

फेरी थोरै बेरपछि ती दुवै सर्पका रूप गरी जज्ञमंडपमा आउंदा यिनिहरू विघ्न गर्न आउन्या हुन् भनी जानी मन्त्रका बलले ती दुवै सर्पकन आसन गरी चाहिंदो कर्म चलाउन लाग्या । जब पूर्णाहुतिका बेलामा ती सर्पकन शुद्ध श्रुव पात्रमा राखी आहुति दिन तयार गरी तिमीहरू को हौ भन्या भया मन्त्र नत्र आहुति गरिदिन्छु भन्दा तिनिहरूले हामी कान्तिपुरका राजा प्रतापमल्ल र जामन गुभाज्यू हुं हाम्रा जीवकन बचाऊ भनी विश्वनाथ उपाध्याका कानमै भुन्या गरी बिन्ति गर्दा फेरी तिमी-हरूले कैले यस्तो उत्तम कर्म गर्दा विघ्न गर्न्या काम नगर्नु भनी वाचा गराई छाडी पठाया । यस्ता तरहसग कोट्याहुति जज्ञ ४६ दिनसम्मलाई श्रीकृष्णका कृपाले यज्ञ निर्विघ्नसित संपूर्ण गर्न्या । त्यहांपछि होता ब्रह्मा कुन्डका विश्वनाथ उपाध्याकन सुनका मुकुट सुनका जनही गहनाहरू वस्त्र पहिराई खेत गावालको घर घरलाई चाहिंदो सब सराजाम गाई भैंसी आदि कमरा कमारीसंहित गरी दान दिया फेरि सुनका वृक्ष हिरा मोति आदि नव रत्नले फल फूल फलाई कल्पवृक्षका आकार गरी चांदिका पोखरी समेत विश्वनाथ उपाध्याकन दान दिया ।

यहा उपरान्त कांही एक दिनका रात्र विषये राजाले हुनो पाषाण जस्तो देवालय गोपीनाथका अनुग्रहले तयार भयो भनी हेरिरहदा भगवान् श्रीकृष्णले आफ्ना पुराणस्वरूपले राजा सिद्धिनरसिंह मल्लकन उद्धार निमित्त क्षणमात्र दर्शन दिदा भया । यसै दिन देखि राजाका मनमा यस्तो आयो कि कलियुगका राजाहरूको चर्मचक्षुमा यस्ता तरहसंग दर्शन पाउनु अति दुर्लभ महाफल पनि पाइनसक्नु हो । भगवान् श्रीकृष्णका कृपाले मलाई सहजैमा दर्शन मिल्यो । अब यो संसार व्यर्थ हो केवल यिनै ईश्वरमात्र सत्य हुन् भनी जानी शरीरकन धेरै किस्मत गराया ।

गर्मी दिनमा ७ पाखि खापी अग्निसमीप गरी अन्दर भत्र बस्दथ्या । जाडोका दिनमा शिला पलङ्ग बनाई उसमाथि सुती पातला पछेउरा ओढी बस्दथ्या । एक मुठी देखि अन्न बढाई पाथिसम्मलाई भोजन गर्दथ्या । पाथिमा एक मुठी देखि घटाई मुठीसम्म गरी भोजन गर्दथ्या । यस्ता तरहसंग देह

साधी मेवा वस्तु त्याग गरी अनेक गीत ज्ञानका कविता नाच बनाई लोकजनले धन्य कहाई रह्याका थिया ।

यिनै राजा गादीमा बस्दा गोर्खाका राजा रामसाह गादीमा बस्याका १४ वर्ष भयाका थिया । तिनै राजा रामशाह नेपालमा आई राजा सिद्धिनरसिंहमल्लसंग भेट गर्न आउंदा राजा सिद्धिनरसिंह मल्लले पनि बहुतै सन्मान गरी मर्यादा राखी बिदा गरी काजी प्रमाणहरूकन गोर्खासम्म पुऱ्याउन पठाया । यिनै राजासंगको मित्रता रह्याको हुनाले राजा रामसाहले ललितपत्तनका चौबीस टोलका २४ भला मानिस मागी ताम्रपत्र गराई लगी गोर्खामा कोठी बसाई बेपार कारबार गराया । यही समय देखि गोर्खा गुलजार हुन गयो । यिन राजाका महतारि लालमती रानीले आफूले स्थापना गऱ्याका विश्वेश्वरका देवालय सन्मुख अघिका २ धारा मानिगलकमा बनायाका थिया । पछि तीन धारा गरी सुनका बनाइन् । श्रीकृष्ण मन्दिरका नैऋत्य कोणमा अघि आफूले बनायाका देवालयमा स्थापना गर्न निमित्त बनायाका कृष्ण र राधाजीका मूर्तिकन स्थापना गरिदिया ।

फेरि श्रीकृष्णकन सुनका मूर्ति बनाई फागुण शुक्ल पूर्णिमाका दिन हिण्डोल यात्रा प्रतिवर्ष गराया । फेरिजेष्ठ शुक्ल पूर्णिमाका दिन सुनका सिंहासनमा सुनका श्रीकृष्ण राधिका मूर्तिकन विराजमान गराई आफूले बनायाका ३२ गीत र श्रीकृष्ण आदि देवताहरूको मूर्ति लेख्याको पट्टाकी सोही ३२ राज ज्ञान लीलाको गीत प्रतिवर्ष गाउनुपर्ऱ्या रीत चलाया । यिन राजाले आफै ग्रन्थकार भै रामायण आदि अनेक नृत्य लीला बनाई दर्बार सामुन्नेका डबलीमा नचाया । फेरि कार्तिक माहात्म्यका नाच आरम्भ गऱ्या ।

यहाँ उप्रान्त महतारि स्त्री पुत्र पौत्र परिवारकन बोध गरी पुत्र श्रीनिवासमल्लकन घन आउन्ज्याल राज्यको संभार गरी प्रजाकन प्रतिपाल गरिरहनु, म पश्चिमतिर त्रिशूलगंगा संगममा स्नान गरी अगखुं समीपका स्वयम्भू महादेवका स्थानमा शिवरात्रि जागर्न गर्न जान्छु ! निश्चय आउंला भनी नेपाली संवत् ७७२ साल माघ कृष्ण १३ बुधबारका दिन प्रस्थान गरी गोर्खाको बाटो गरी गया । यी राजा कस्ता थिया भन्या ज्ञानी बडा गुणी पण्डित कवि महादाता तपस्वी विवेकी क्षमावन्त सात्त्विक मृदङ्ग वीना आदि वाद्य बजाउन गाउन जान्या थिया । नेपालमा यस्ता राजा अघि भैगयाका पनि छैनन् । आउन्या पनि छैनन् । यस्ता राजा सिद्धिनरसिंहमल्ल जाई देवप्रयाग, बद्री, केदार, हरिद्वार, श्रीनगर, नागरकोट, लाहुर, दिल्ली, आगरा, कुरुक्षेत्र, मथुरा, जगन्नाथ, रामेश्वर, प्रयाग, वाराणसी, गया नानादेश नानातीर्थमा श्राद्धदान स्नान गऱ्या । यहाँ अघि ललितपत्तनमा श्रीनिवास मल्लले राजकाज गरिरहँदा सिद्धिनरसिंहमल्ल तीर्थ स्नान गर्न गयाका ८ महिनापछि संवत् ७७२ साल आश्विण शुक्ल पर्व मंगलबारका दिन कान्छा भाई ज्योतिनरसिंहमल्ल राजकुमार खस्या । बाबा सिद्धि

नृसिंहमल्ल वैरागी भया भन्या खबर सुन्दा श्रीनिवासमल्लका मनमा बहुतै शोक प्राप्त भयो । फेरि धैर्य गरी खस्न्या भाई ज्योतिनरसिंहमल्ल राजकुमारका नामले तीनतले देवालय बनाई श्रीनारायणकन स्थापना गरिदिया ।

राजा नृसिंहमल्लले देशान्तर जाई देवताहरूको दर्शन गंगास्नान गर्न्या । श्राद्ध तीर्थहरू गरी नेपाली संवत् ७७७ चैत्र शुक्ल ७ का दिन कतैरोकतोक नभै फर्की नेपालमा आइपुग्नासाथ पुगी आउन्याहरू सबकन विसर्जन भया । राजाकन केही भएन । ललितपत्तनका राजा प्रजा स्त्रीजनहरू कान्तिपुरका राजा प्रतापमल्लले प्रमाणहरूसहित गरी गै लिन जाँदा थान्कोट देखि पगरी जमीनमा बिछ्याई सिन्दूर जात्रा गरी नाना वाद्य बजाई लोकजनहरू बहुतै हर्षमान भै राजा सिद्धिनृसिंहमल्लकन ललितपत्तन सहरमा प्रवेश गराया । ललितपत्तनका प्रजाहरूकन बहुतै आनन्द प्राप्त भयो ।

यहाँ उप्रान्त राजा सिद्धिनृसिंहमल्लले संवत् ७७९ आषाढ शुक्ल ३ का दिन आफ्ना महनारी लालमतिका नामले ज्यावला पोखरी बनाई जलजज्ञ गराया । सम्वत् ७८९ माघ शुक्ल पूर्णिमा संक्रान्ति त्रेतायुग उदय महापर्वका दिन राजाले साढे बाह्रहजाररुपैयाँ मोल जान्या हात्ती चन्द्रशेखर नाम वाराणसीका ब्राह्मणलाई दान दिया । वराहक्षेत्र जाई स्नान गर्न्या । फेरि नीलकण्ठ जाई स्नान दान गरी रात्रि जागरण गर्न्या । आफै ग्रन्थकार भै बनायाका रामायणादि नाचहरूको तमासा हेरी धेरै धर्म कीर्ति यश प्रख्यात गरी लोकजनले धन्य कहाई श्रीपशुपतिनाथ मच्छिन्द्रनाथकन गहनाहरू चढाई संसारकन त्याग गरी केवल श्रीकृष्णजीका चरणको आश्रय गरी नेपाल सम्वत् ७८१ पौषवदि १ का दिन बुधवार देशान्तर गमन गरी गया ।

> सिद्धिनृसिंहसर्वज्ञो जीवन्मुक्तो जितेन्द्रियः ।
> माधवप्रियसंभक्तो योगीश्वरः कवीश्वरः ।१।
> वीर योऽभवत् त्यागी हरिसिंहस्य नन्दनः ।
> इत्याख्यानं पठेन्नित्यं सर्वपापै प्रमुच्यते ।२।

यी राजा सिद्धिनृसिमल्लले राज्याभिषेक पाया उप्रान्त ४१ वर्ष राज्यभोग गरी संसार त्याग गरी गयाका हुन् ।

अस्य पुत्र श्रीनिवासमल्ल भोग वर्ष २६ यिनका बाबा सिद्धिनृसिंहमल्लले आफूले देश त्याग गरी गयाकै दिन राज्याभिषेक दी गया । राजा श्रीनिवासमल्लकी रानी मृगावती नाम गर्न्याकी थिइन् । यिन राजाले असल असल ७ घोडाका रथ बनाई सब संयुक्त गरी सुनका सूर्यबिम्ब रथमा राखी काशीका सामवेदी ब्राह्मणकन दान दिया । फेरि मछिन्द्रनाथकन आरती गुठ राख्या । प्रातःकाल मध्याह्नकाल सन्ध्याकाल अर्धरात्रिमा आरती गराया । फेरि बुङ्मतीमा सुनका धारा बनाया । सम्वत् ७८२ वैशाख शुक्ल ३ का दिन प्रतापमल्लकी रानी खस्दा मछिन्द्रनाथका यात्रामा बाजा शून्य गरी जाबा गन्या र

अतिवेगसित हाव। आई धेरै रूख ढाल्या । घरका छानाहरू पनि उडाया । यसै साल छत्रनरसहमल्ल राजकुमार खस्या । यिनै राजकुमारका नामले दरबारभित्र ढुङ्गाका देवालय बनाई वंशगोपाल स्थापना गरिदिया ।

संबत् ७८३ कार्तिक शुक्ले १० कादिन अघि सिद्धिनृसिंहमल्ल राजाले पाँच तला गरी ठूलो गरी बनाई राख्याको दिगुतलेका देवालयका छानामा अग्निप्रवेश भै एक तला मात्र बाँकी राखी सब जलाउँदा देवताकनमात्र केहि भएन । त्यहाँपछि चाडै आरम्भ गरी छ मैह्लाभित्रमा चार तला छानामात्र गरी सिध्याई सुनका छाना छाई गजूर चढ़ाया । सहरमा पनि धेरै ठाउं अग्निप्रवेश भै घर जलाया । त्यहाँ पछि यिन राजाले यी सब विघ्न भयाको मछिन्द्रनाथका यात्रामा बाजा शून्य गरी यात्रा गर्नाले हो भनी संबत् ७८५ पौष कृष्ण अमावासी सूर्यग्रहणका दिन टौदह जाई पुरश्चरण गराया । फेरि यिन राजाका पालामा भक्तपुन्या मंत्रीका बुद्धिले राजाकी भिञ्यानी देवलक्ष्मीकी छोरी खस्दा एक खेस्ता नेपालमा ल्याउनुपर्छ भन्या । भक्तपुन्या मन्त्रीका बचनले राजद्वारमा स्त्रीहरू जाई रोई विचार गर्नु भनी खेस्ता बनाई चुइकीलाई रुवाई विचार गराउन पठाया । पैले पाटनमा भै पांछ ३ सहरमा भै गया । नेपाली संवत् ६८५ माघ शुक्ल २ का दिनदेखि रुन्या प्रबन्ध भै गयो । फेरि यही सालका माघ शुक्ल पूर्णिमाका दिन त्रेतायुग उदयका दिन शंखमूलमा काशीका गुजराती दामोदर नाम ब्राह्मणकन गोशत दान दिया । यिनै दान लिन्या ब्राह्मणले, लब्धं दशगुणं पुण्यमिति वचनं ज्ञात्वा,, भनी एक ब्राह्मणकन १० गाइ दान गरिदिया । फेरि मछिन्द्रनाथको देवालयका माझतलामा सुनका छाना बनाई छत्रसहित गरी बनाई गजूर राखिदिया । त्रेतायुगोदय माघ शुक्ल पूर्णिमाका दिन ८ हजार रुपैयां मोल जान्या हात्ती दक्षिणी व्यास नाम ब्राह्मणकन दान दिया । फेरि ७८६ सालमा मूलचोकमा दक्षिणपट्टि तीनतले देवालय बनाई गजूर राखिदिया । अघिका गजूर बीच तलामा राखिदिया । चोभारका चन्द्रविनायककन देवालय बनाई गजूर चढाया । संवत् ७८७ आषाढ़शुक्ल ३ का दिन हरिसिद्धिदेवीका देवालयमा गजूर ३ चढाया । अघिका १६ गजूर तला तलाका बीचमा राखिदिया । कीर्तिपुर जान्या बाटामा पुल बनाई प्रतिष्ठा गर्न्या । यसै साल आश्विन शुक्ल २ का दिन मूलचोकका बीचमा देवालयमा सुनले जलप सरी देवालय बनाई गजूर चढ़ाया । मूलचोकलाई अघिभन्दा चोक फराक बरा बनाई दिया । फेरि चंपापुरग्रामका वज्रवाराहीदेवीकन सुनका मूर्ति बनाई संवत् ७८६ चैत्र शुक्ल ८ सोमबारका दिन विश्वनाथ उपाध्याले प्रतिष्ठा गरी एकादशी बृहस्पतिवारका दिन ललितपत्तन सहर घुमाई यात्रा गरी चंपापुर लगी राखी- दिया । संवत् ७८८ श्रावण कृष्ण षष्ठीका दिन ललितपत्तनका राजा श्रीनिवासमल्ल भक्तपुरका जगत्प्र- काशमल्लसँग मिली कान्तिपुरका लगामध्ये उन्तीस कोटहरू जिती ललितपत्तनका राजाले लियापछि भक्तपुरका राजाले हामी दुई मिली तिमीलाई राज्य बढाई दियाको साइत एक १ लाख रुपैया र दुइ

हात्ती लुभु ग्राम बिसंङ्खु यति हामीलाई देऊ भनी माग्न पठाया । यसमा ललीतपत्तनका राजाले केही उतर नदी एक बन्दोबस्त गर्नुपर्ला भनी रहँदा यस्तै समय कान्तिपुरका राजा प्रतापमल्लले रात्रिविषये एक एक मानिस ललितपत्तनका राजासँग पठाई भोलि केही कुरा तिमिसँग सल्लाह गर्नुपर्न्याछ भनी पठाया र भोलिपल्ट सबेरै ललितपत्तनका राजाले प्रतापमल्लसँग टेकु दोभानमा भेट गर्दा हामी दुवै मिलिरहनु नछुट्टिनु भनी सत्यवाचा गन्या ।

यहाँ उप्रान्त कान्तिपुर ललितपत्तनका राजा दुइ मिली भक्तपुरमाथि चढाइ गरी नाला चौकोट धुलिखेल दाप्चा जिती अम्बल गऱ्या । त्यहाँ पछि भक्तपुरका राजाले रात्रिविषये शैन्य ली जाई कान्तिपुरका कोटहरूमा श्री नवासका सेना हुँ भनी कोटभित्र द्राटी जाई ९ जनालाई माऱ्या । ३० जनालाई समात्या । अरू कान्तिपुऱ्याहरू भागी गया । यहाँ पछि कान्तिपुरका राजा बहुतै रिसाई ठेमी नलिन्ज्याल पगरी गुत्न्याछैन भनी प्रतिज्ञा गरी पगरी उतारी राख्या । त्यहाँपछि ललितपत्तनका राजासँग मिली भक्तपुरका राजाले कपटसँग जिती लियाको कोटहरूकन फेरि आफनु गऱ्या । भाद्र कृष्ण ६ का दिन ठेमी लिनकन ठाना बस्न गयो । ठेमी सहरका चारोतर्फ घेरा नौकोट बनाया । आश्विन मैह्लामा एक कोट जिती लिया । मङ्सिर मैह्लामा नकदेश जिती लिया । ठेमी शहरवासी जनहरूलाई बाहिर निस्कन नदी बहुतै दुर्भिक्ष भारी दुःख दी माघ शुक्ल एकादशीका दिन ठेमी जिती लिया । बन्दूक ६३ ढाल १०९ बलजफत गरी लुटी दुवै राजाले बाँडी लिया । यस सेनाका दलमुखी ललितपत्तनका मुख्य काजी विश्वराम कान्तिपुरका मूलकाजी विरजु थिया । संवत् ७८३ वैशाख मैह्लामाथि पोजोनमाथि जगज्ज्योतिर्मल्लले बनायाको पोखरीको छेउ स्थापना गरी राख्याका जागेश्वर महादेव सुनका छाना भयाका देवताकन उठाई आपना शहर कान्तिपुरमा लग्या । फेरि यसै पोखरी बीच राख्याको सुनका नाग पनि उठाई लगी कान्तिपुरका भण्डारखालका पोखरीमा सुनका बराहामाथि जागेश्वर राखी नागफनि समेत राखिदिया ।

त्यहाँपछि प्रतापमल्लले पगरी शिरमा राख्या । यस्ता तरहसँग भक्तपुरका कोटहरू जिती लिया उप्रान्त पनि राजा प्रतापमल्ल भक्तपुरका कपट बुद्धिदेखि बहुतै रिसायाका थिया र सम्वत् ७८३ भदौ मैह्ला भक्तपुरका समीप चारोतर्फ कोट बनाई कान्तिपुर ललितपत्तनका दुवै राजा मिली ठानामा बसी घेरिराख्दा भक्तपुरवासी जनहरू कोही ढोका बाहिर निस्कन सकेनन् । यहाँपछि कुँन्युँलाई राख्याका धान सब भाँगी पशुपतिनेत बोकाई कान्तिपुर ललितपत्तन लग्या । ललितपत्तनका राजाले भन्दा दोबर अन्न कान्तिपुरका राजाले लग्या ।

त्यहाँ उप्रान्त भक्तपुरवासी जनले खान नपाई बहुतै दुःख पाई धेरै मानिस मऱ्या त्यहाँ वर्षसम्म धान त्यहाँ रहँदा कोही ग्रामबाट चामल च्यूरा बेच्न जान नदी राख्या र शहरभित्र अति

दुर्भिक्ष भै दामका १२ सेडा मकै मोहरका २ माना चामल भै जाँदा किन्न पनि नपाउदा बहुतै गरीब भै खान नपाउँदा रुखका पात कपासका बियाँ घाँसपर्यन्त खान लाग्या । फेरि प्रतापमल्ल राजाले यी नायडोमा राख्याका ढुँगाका सिंह २उठाई ल्याई आफ्ना राजद्वारमा राख्या । पोखरीको ढुंगाको तोरण-समेत उठाई कान्तिपुर लग्या । ललितपत्तनका राजाले मात्र कौतिबिगारी केही कुरो लिएनन् । भक्त-पुरवासी जनले अनेक पुस्तक घर बनाढ्यहरूकन बेचो आया । बेचदा पनि किन्या कोही नहुँदा सहर-बासीजनहरूले खान नपाउँदा शृंगार गर्न समर्थ नभै स्त्रीहरू गर्भमय कोही भएनन् । मन्यासिबाय जन्म-न्या कोही भएनन् । कोही मानिस हरू र राजाहरू सहरबाट जीवको माया मारी निस्की परदेश भागी गया ।

यस्तै समय ललितपत्तनका मूलकाजी विश्वराम बेरामी भया र दुवै सहरका सेना ठाना छाडी फर्की आया । ७८४ कार्तिक कृष्ण ६ का दिन मूलकाजी विश्वराम खस्या । यी काजीलडाईमा बहुतै शूरा थिया । जोगी सन्यासी परदेशीहरू ब्राह्मणहरूकन अन्न वस्त्र दी बारम्बार भोजन गराउँदथ्या । यहाँ उप्रान्त प्रतापमल्ल राजाले भक्तपुरका राजा त अति दुर्बल भया भनी ललितपत्तनका राजा श्रीनिवासमल्लकन कपटसंग बोलाई बन्दिखानामा राखनको मतलब ठहराई बोलाई पठाउँदा राजाका मनमा बहुतै शंका प्राप्त भयो । तैपनि तयार हुँदा मच्छिन्द्रनाथ एक जनाका शरीरमा प्राप्त भै प्रताप-मल्लका मतलब संक्षेपसंग आज्ञा गर्दा श्रीनिवासमल्ल राजाले हामी दुइ जनाको जीव छन्ज्याल नछुटिनु भनी अघि सत्यवाचा गरी देवताका स्थानमा तावापत्र गरिराख्याको छँदा भनो प्रतापमल्लले मर्माथि यस्ता यस्ता दुष्ट बुद्धि गऱ्या भनी मनमा विरोधभाव भै डराई कान्तिपुर गएनन् र कान्तिपुरका राजाले अब म एकला हुन लाग्या भनी डराई गुप्तसंग भक्तपुरका राजासंग मानिस पठाई हामी दुइको सन्धि गरी मिल्दछु भनी अनेक तरहसंग भनी पठाउँदा पनि भक्तपुरका राजाले प्रतापमल्लको विश्वास नमान्नी केही उत्तर दिएनन् । यही बार्ता ललितपत्तनका राजाले सब थाहा पाई आफ्ना पुरोहित विश्वनाथ उपाध्याका माहिला छोरा मधुसूदन उपाध्याकन सन्धिको बार्ता करी भक्तपुर पठाउँदा सम्वत् ७८४ वैशाख शुक्ल द्वादशीका दिन भक्तपुरका राजा जगत्प्रकाशमल्ल भक्तपुरवासी प्रजाको दुःख कष्ट देखी अति दुःख मानी दाह्री कपाल पनि नखौरी लामा लामा रौं गरी अति मलिन मुख गरी ललित-पत्तनका राजासंग शरण आउँदा श्रीनिवासमल्लले लिन गया । सहरभित्र ल्याई भोलिपल्ट दाह्री कपाल खौराई असल वस्त्र पैह्राया । फेरि उनको दुख देखी करुणा गरी उनका राज्य आफूले लियाको सब संपूर्ण गरी दिया । थोरै दिन आफ्ना राजकुलमा बास गराई बिदा दी पठाया । यताक कान्तिपुर ललितपुरका कौनै राजाले पनि भक्तपुरका मूलतलेजुको दर्शन पाउँदैनथ्या । श्रीनिवासमल्लले धेरै पूजाको सराजाम तयार गरी आई तुलजा भवानी को दर्शन गऱ्या ।

यहाँपछि कान्तिपुरका राजा एकला हुन गया । संवत् ७८५ ज्येष्ठ शुक्ल दशमी हस्ता नक्षत्रका दिन भक्तपुरका राजा जगत्प्रकाशमल्लले देवालय बनाई ललितपत्तनका विश्वनाथ उपाध्याकन भक्तपुरमा लगी श्रीहरिशंकर मूर्ति स्थापना गराया । संवत् ७८५ आश्विन मैह्लामा मदालसोपाख्यानका नाच बनाई मानिस्लमा नचाया । संवत् ७८६ कार्तिक शुक्ल ८ मा पुत्र जन्म्या ७५ दिन मात्र बाँचो बस्या । यही साल नव बह्वालको देवालयका बीच तलामा सुनका छाना छाई सुनकाछत्र पुष्प माला चढाया । ललितपत्तन र भक्तपुरका राजा मिलिरह्याका थिया । संवत् ७८६ आषाढ मैह्लामा केही कारण नभै भक्तपुरका राजा जगत्प्रकाशमल्ल प्रतापमल्ल राजासँग मिल्न गया । थोरैदिनपछि प्रतापमल्ल राजाले कान्तिपुरका दर्बारबनाउनानिमित्त भक्तपुरका राजासँग १४ हज्जार गोटा काठ देऊ भनी माग्दा यिनसँग मिली बढिया हुँदैन भनी ठानी ६ मैह्लापछी फेरी श्रीनिवासमल्लसँग मिल्न आया । यस कुरामा भक्तपुरका प्रजाले आफ्ना राजाकन प्रतापमल्लसँग मिल्न गयाको नचाहिंदो काम गर्नु भयो भनी खं गर्‍या । संवत् ७८७ आसाढ मैह्लामा पुनर्वार ललितपत्तनका राजाको प्रतापमल्लसँग भेटमै सलुक गरी आवत जावत गर्न लाग्या त्यहापछि भक्तपुरका राजाएक्ला हुन गया ।

संवत् ७८७ भदौ मह्लामा प्रतापमल्लले हरिसिद्धि देवीका देवालयमा सुनका छाना बनाई दिया । संवत् ७८८ कार्तिक कृष्णपंचमीका दिन बुङ्मतीमा दण्ड कुण्ड भैरबकन सुनका तोरण बनाईचढाया । अघिबाट भैरबकन मनाई ठूलो सुनकामुख बनाई स्थापना गरिदिया । श्रीमछिन्द्रनाथको आँखाबाट आँसु बह्या आयो । यस साल धूम्रकेतुको पनि उदय भयो । फेरि बग्मतीमा गोकर्णदेखि देवपत्तनसम्म दूध जस्ता शुक्ल वर्णको जल बह्या । राजा श्रीनिवासमल्लले संवत् ७८८ पौषवदि १० का दिन यथाक्रमले शान्ति गराया । संवत् ७८८ श्रावण मैह्लामा नीलकण्ठ आई स्नान गरी अनेक दान पुण्य गर्‍या । संवत् ७८९ वैशाख शुक्ल चौथी सिद्धिनृसिंहमल्लका ज्येष्ठपुत्र कृतिसिंहले स्वयमा तीन तलादेवालय बनाया । संवत् ७८९ ज्येष्ठ शुक्ल १का दिन कुम्भेश्वर स्थान सर्वेश्वरकन नाग बनाई चढाया । संवत् ७९० साल फागुन शुदि नवमीका दिन देगुतले का गजुरका चार कुनामा ४ गजूर बनाई चढाया । संवत् ७९० ज्येष्ठ कृष्ण षष्ठमी आदित्यवारका दिन भण्डारखालका छेउमादेवालय बनाई यथाक्रमले दुइ माजु देवीकन स्थापना गरिदिया । संवत् ७९१ कार्तिक शुक्ल दशमीका दिन काठ छें बालकुमारी स्थानमा अचिन्त्य प्रमाणले राख्याका खम्बामाथिका मयूर सारी दोस्रा मुजूर बनाई राखिदिया यसै साल यछे महालक्ष्मी पोखमा खम्बा खडा गरी सुनका सिंह बनाई राखिदिया । संवत् ७९१ साल चैत्र कृष्ण त्रयोदशीका दिन ललितपत्तनमा भक्तपुरका विश्वयात्राका प्रमाणले यात्रा बनाई चतुर्दशीका दिन लिंग ढाल्नुपर्न्या रीत चलाया । फेरि रामायणका नाच बनाया । यस नाचका दरहरू नाटेश्वरका प्रभावले सिद्धि पाई बडो अद्भुतसँग चटकी गर्न्याले गर्‍याजस्तै तमासा गरी नाच्दा सहर गाउँका धेरै मानिस

तमासा हेर्न आया ।

संवत् ७९१ साल वैशाख शुक्ल चतुर्थीका दिन १६० तोला सुनको च्यादर बनाई चढ़ाया । संवत् ७९१ साल ज्येष्ठ कृष्ण ५ का दिन देवालय बनाई सुनका छाना गजुर चढ़ाई ठाउँ स्.री लक्षाहुति यज्ञ गरी श्रीतुलजाभवानीकन देवालयमा स्थापना गरिदिया । श्रीनिवासमल्ल राजा नायक भै भक्तपुरका राजा गोर्खाका राजा तनहुँका राजासहित गरी जाई मकवानपुर जिती पछि मुलुक गरी शुभसेन राजाले श्रीनिवासमल्ल राजाकन हात्ती २ चढ़ाया । यिनै हात्तीमध्ये एक हात्ती गोर्खाका राजालाई दिया ।

संवत् ७९२ माघ मैह्ला मोरंगका राजा हरिहरसेन हरिहरसेन राजा आई सिधुलीमा चढाइ गर्न आउँदा मकानपुरका राजा शुभसेनले थाहा पाई जाई घेरैलाई मारी धेरै वस्तु लुटी लिया । ललित–पत्तनका राजाले विसङ्खुका खसहरूकन मोरंगका राजाकन हटाउन पठाया । तिनिहरूले धेरै वस्तु लुटी ल्याया । संवत् ७९२ माघ शुक्ल श्रीपंचमीका दिन मच्छिन्द्रनाथकन सुनका ढ़ोका तोरणसमेत राख्या । यसै ढ़ोकामा राजाले श्लोक बनाई राखिदिया ।

मत्स्येन्द्रं योगिनो मुख्यः शाक्ता शक्तिं वदन्ति यम् ।
बौद्धा लोकेश्वरं तस्मै नमो ब्रह्मस्वरूपिणे ॥१॥
नेपालाब्दे लोचनमङ्गिन्द्रसमो श्रीपञ्चम्याम् श्रीनिवासेनराज्ञा ।
स्वर्णद्वारे स्थापित तोरणेन सार्धं श्रीमल्लोकनाथस्य गेहे ॥२॥

संवत् ७९३ साल फागुन शुक्ल दशमीका दिन आफ्नै राजाले ५ श्लोक बनाई शिलापत्रमा लेखाई अरु विस्तार नेपाली भाषा लेखि सुनभरि यात्रा गरी देश घुमाई श्रीमच्छिन्द्रनाथका देवालयमा पूर्वपट्ट थापिदिया । संवत् ७९४ वैशाख शुक्ल चतुर्थी बुधवारका दिन श्रीमच्छिन्द्रनाथका रथमा सुनको घट जला राखी यात्रा गराया । यही साल कान्तिपुरका राजा प्रतापमल्ल परलोक भयापछि अघि प्रतापमल्लका साहिला पुत्रले राज्य गर्नु भन्याको रहेछ र यो त बेनीत भयो भनी श्रीनिवासमल्ल योगनरेन्द्रमल्ल भक्त–पुरका राजा जितामित्रमल्ल यिनैका भाइसमेत ४ जना सामेल भै कान्तिपुर जाई श्रीनिवासमल्ल प्रमुख भै तीनपुत्रमध्ये ज्येष्ठ नृपेन्द्रमल्लकन राज्याभिषेक दिन लाया । यिनिहरू सातै राजा सामेल भै सभा गरी बडो उत्सवसंग नाच कीर्तन गराया ।

संवत् ७९४ आश्विन मैह्लामा सेन राजाहरूको तकरार भै नमिली शुभसेन नाम राजा आई मदद माग्न आउँदा ललितपत्तका राजा प्रमुख भै भक्तपुर कान्तिपुर तनहुँका राजा सामेलभै पूर्वतिर हरिहर सेनका राज्य मोरंगमाथि चढाइ गरी गवाहलेति आदि १७ ग्राम जिति शुभसेन राजाकन दी फर्की आया । दोस्रा साल मोरंगबाट ४ हात्ती शुभसेन राजाले श्रीनिवासमल्लकन चढ़ाई पठाया ।

संवत् ७९५ मार्गशिर शुक्ल एकादशीका दिन भाग नाम काजीले लामु सत्तल बनाई उमा महेश्वर स्थापना गरी शिवालय पनि स्थापना गर्‍या । संवत् ७९४ चैत्र शुक्ल चतुर्थीका दिन श्रीनिवासमल्लका

महतारि आपुरव नाम रानी परलोक भइन् । संवत् ७९५ मार्ग कृष्ण ६ का दिन श्रीनिवासमल्ल राजाले भक्तपुरका राजा दुई भाई कान्तिपुरका राजा तीन भाई तनहुँका राजा गोर्खाका राजा मकवानपुरका राजा दश पनिकन राखी पुत्र योगनरेन्द्रकन व्रतबन्ध गर्दा बडो उत्सव गरी यात्रा गऱ्या । यस समय अघि भै रह्याका राजाहरू परलोक भै नेपालका राजाहरू बालक हुँदा यिन राजाले कसैमाथि चढाइ नगरी सबकन आफूसँग मिलाई आनन्दसित राजभोग गरिरहँदा श्रीनिवासमल्ल राजाले संवत् ७९५ ज्येष्ठ शुक्ल ३ का दिन कान्तिपुर भक्तपुर तनहुँका राजा काजीप्रमाण सामेल गरी श्रीगुह्येश्वरीमा जाई हामीहरू यति राजामा कसैले कलह नउठाउनु, आफुसमा मिली आफ्ना आफ्ना राज्यको भोग गरी मित्रत्व गरी मिली आनन्द सित रहनु भनी बाचा बाँधी खुशीराजीसित सबले कसम खाया । संवत् ७९५ भदौ मैह्ला मा इकुहिटि मुनिका खेतमा एक धानका बीजमा १२४ धानका बाला उठी रहँदा राजा प्रजा सब जाई हेर्न गया । संवत् ७९५ चैत्र शुक्ल पंचमीका दिन श्रीनिवासमल्ल जितामित्र मल्ल नृपेन्द्रमल्ल यी तीन राजा र गुरु प्रोहित चौतारा प्रमाण सबसमूह भै मानिसहरू मर्दा १२ दिनमा घर शुद्ध तेह्रौं दिनमा चाहिंदो कर्म गरी ब्राह्मण भोजन गराउने रीत सबको थियो । यस रीतमा प्रजाहरूले सबक्रिया पुऱ्याउन नसकी कर्महीन हुन जाँदा शास्त्र स्मृतिका बचन प्रमाण गुरु प्रोहितहरूको बचन लीनिनै सहर आदि सब प्रजाले ४५ दिनमा सपिंडि जोर्नु राजकुलमा मात्र तेह्रौं दिनमा सपिण्डी जोर्नु भन्या बन्देज बाँधी तामापत्र गरी ललितपत्तनका मूलचोकमा टाँसिदिया । संवत् ७९६ वैशाख शुक्लमा हतपावदेखि चोकाठसम्म दर्बार बनाई संपूर्ण गऱ्या । संवत् ७९९ वैशाख कृष्ण ८ का दिन मानिगल भक्त आगम मूलचोकमा स्थापना गरिदिया । संवत् ८०० ज्येष्ठ कृष्ण ४ का दिन अमरसिंह कुँवरले कोबहालमा ढुंगाको देवालय बनाई श्रीकृष्णकन स्थापना गरिदिया । संवत् ८०१ मार्ग शुदि ८ का दिन भीमसेनका देवालय ठूलो गरी तीन तला गरी गजूर चढाया । फेरी कीर्तिपुरमा कोट घर बनाई गजूर चढ़ाया ।

संवत् ८०१ पौष कृष्ण ८ का दिन रात्रि दिग्दाह भैगयो । फेरी अघि लामु धूम्रकेतु उदय भयो । ठूलो एकतारा पनि उदय भयो । फेरि अकस्मात् आकाशविषय शब्द भयो । ज्येष्ठ शुक्ल ७ का दिन रात्रिविषे भूमि कम्प भयो । घेरै घरहरू भत्काया । संवत् ८०२ माघ कृष्ण २ का दिन साह्रै तुसारवृष्टि भयो । पुत्रल मन्त्रीका खेलले दर्बारका धन द्रव्य ओसारी लगनका स्थानसन्धि बसी बेपारीकन झिकाई बेपार चलाया । ह्लुपुखुल बनाया दर्बार बनाउनको पनि इच्छा गऱ्या र छोराले ममाथि अप्रीति गऱ्या भनी बहुतै राजको काम गर्न आट्या नर क्याहोला उसको मनसुवा पुऱ्याइदेउ भनी शान्तस्वभावका राजा हुनाले राजकुलमा बोलाई संवत् ८०५ पौष कृष्ण ५ बृहस्पतिबार हस्ता नक्षत्र सुकर्मा योगका दिन पुत्र योगनरेन्द्रमल्लकन सुवर्ण नदीका कलश स्थापना गरी राज्याभिषेकका विधिपुऱ्याई राज्याभि-

षेक दिया ।

बाबा सिद्धिनृसिंह मल्लका कीर्ति कार्तिक भरका नाच गाई मछिन्द्रनाथकन धेरै गहना गुठ राखी नीति सँग प्रजा प्रति पाल गरी धेरै धर्म कीर्ति यश बढ़ाई धन्य कहाई संवत् ८०७ माघ शुक्ल एकादशीका दिन राजा श्रीनिवासमल्ल परलोक भै गया ।

अस्य पुत्र योगनरेन्द्रमल्ल वर्ष २१ यिन राजाले संवत् ८०२ वैशाख कृष्ण ११ का दिन आफ्ना महातारी मृगावती रानीका नामले पोखरी बनाई सुनका नाग फणिमा श्रीबालगोपाल स्थापना गरिदिया । संवत् ८०५ भदौका ८ दिन भाग नाम काजी बाबाका पालादेखिकाले सब काजीहरूभन्दा बडो भै आफ्ना मनोज्ञ गर्दा रानीकनबेमर्यादाका बचन गर्दा प्रजाहरू लीन हुँदा राजाले जुक्तिसँग मान खासी पछिबाट मारिदिया ।

संवत् ८०० फागुन कृष्ण अमावास्यका दिनदेखि देशपूर्वपट्टि मैदान बढ़ाई घोडाजात्रा प्रतिवर्ष चलाया ।

संवत् ८१० कान्तिपुर भक्तपुर मिल्याका बखतमा भक्तपुरमाथि चढ़ाइ गरि ढाल तरवार बन्दुकहरू लुटी १२८ मानिस पक्री ल्याया । यही साल मच्छिन्द्र नाथका जात्रामा रथ ढल्दा एक बाडाका शरीरमा देवता प्राप्त भै दर्बारमा आई तिनिहरूको केही सन्देह मान्नु पर्दैन । रथ ऐले खडा हुन्याछ भन्दा राजाले यो कुरा निश्चय हो भन्या बाह्र १२ पल सुनको गहना चढ़ाउँला भनी भाख्या । त्यहाँछि श्रीमच्छिन्द्रनाथकन रथबाट झिकी बाटामा राखी काठको टेवा लाई डोरीले तानी रथ खडा गरी फेरि यात्रा गन्या । अघि भाख्याको सुनका सिक्री माला बनाई चढ़ाया ।

संवत् ८१२ फाल्गुन शुक्ल १२ का दिन लक्षाहुति यज्ञ गरी तुलजा भवानीका गजूर चढ़ाया । यही साल मच्छिन्द्रनाथकन बांग्यामुढाको भैरवका मुखबाट पसिना चुहुँदा चौथा दिनमा सहरका उत्तर पट्टि अग्निप्रवेश भै धेरै घर जलाया । संवत् ८१३ माघ शुक्ल १० आदित्यवारका दिन योगनरेन्द्रमल्लले देगुतलेमाथि खम्बा खडा गरी आफ्ना मूर्ति दुरुस्त गरी सुनका बनाई राख्या । स्थापना गरी बसाया यही साल ईश्वरदास काजीले नुवलमा भवानीशंकर स्थापना गरिदिया। यिन राजाको राउतिनी स्त्री भनी मडले पनि मण्डप बनाया । बाज्या सिद्धिनृसिंहमल्लबाट कार्तिक माहात्म्य का नाच बनाया । आफैं ग्रन्थकार भै यसमाथि फेरि श्रीयोगनरेन्द्रमल्लले थपनचाय नाचकन जमाया। संवत् ८१५ साल गोदावरी तीर्थमा जाई अहोरात्र यज्ञ गरी सब दान दिया । संवत् ८१४ मछिन्द्रनाथका जात्रामा अघि मछिन्द्रनाथ नेपालमा ल्याउन्या नरेन्द्रदेव राजाको मूर्ति खड्ग भक्तपुरका राजाले सौंपदिनुपर्न्यामा उसताक भक्तपुरका राजासँग मेलन हुनाले भक्तपुरका राजाबाहेकगरी आफ्नै खड्ग ली कर्म चलया ।

संवत् ८१६ सालदेखि चैत्र मैह्लामा जमरा थाली राम नवमी कर्म वर्षप्रति चलाया । संवत्८१६

माघमा भक्तपुरका राजासंग मेल नहुँदा चाँगुनारायणका साटो ललितपत्तनका आदिनारायण स्वयं टोलकाकन पूजा गराया । यही साल योगनरेन्द्र मल्ल देवघाटमा स्नान गर्न जादा तनहुँका राजासंग र परशुराम थापासंग भेट भयो । तनहुँका राजाले २ हात्ती दिया । त्यहाँपछि मकवानपुरको बाटो गरी फर्की आया । यिनै हात्तीमध्ये एक हात्ती जितामित्रमल्लकन दी मिल्या । थोरै मैंह्लापछि कान्तिपुरका राजाले योगनरेन्द्रमल्लकन एक हात्ती दी भेली भेली भक्तपुरमाथि चढाइ गरी नाला साँगा जिती फर्की आया । संवत् ८१७ ईश्वरदास काजीले काठछे पीठ बालकुमारीकन तीन तलादेवालय बनाई गजूर चढाया यही साल राजाले कुम्भेश्वरका देवालय पाँच तला गरी बनाया । संवत् ८२१ माघ शुक्ल एकादशीका दिन यज्ञ मण्डप बनाई होमा पट्टको घरको पूर्णानन्द उपाध्याले अग्नि स्थापना गरी कोट्याहुति जज्ञ गर्‍या । श्री कुम्भेश्वरमा गजूर चढाया । सुनका जलहरि राखिदिया । तिन दिनपछि यही जज्ञमा अधिक भीमसेन फेरी नामका मूर्ति दुग्धासनबधका ध्यान गरी भूत भूतिनी सहित गराई यात्रा गरी देवतापिछे छाग मेष हंस बलि चढाई सहरका सब नाच बाजासहित गरी बडो उत्सव गरीदेश घुमाई जज्ञ मण्डप मा लगी यथाक्रमले प्राण प्रतिष्ठा गरी देवालयमा राखी जीवन्यास दिया । कस्ता तरहसँग जगाया भन्या । नाकका छिद्रमा पिडरीकोचारी राख्या । जीवन्यास मन्त्रसिद्धिका प्रभावले जब स्वासाबाट पिडरी उडाया । तबै जागृत भयो भनी थाम्या । त्यहाँपछि राजा बहुतै खुसी भै आफ्ना हातको नवरत्न अँगुठी भीमसेनका अंगुलीमा राखिदिया । यी भीमसेन बडा प्रत्यक्ष का छन । भक्तपुरका राजाले ललितपत्तनका राजामाथि रीस गरी सन्तान शून्या हुन्या क्रिया गरी शिव स्थापना गरी जलहरिसामुन्ने उत्तर दरबार पारी स्थापना गरिदिया । यसकुरा योगनरेन्द्रमल्ललाई अघि थाहा नहुँदा यिनको पुत्र ऋद्धिनृसिंहमल्ल बालकमैमा मर्‍या । सभा पालीमाथि पनि तला होचाई धुरीमा हनुमान थापिदिया । धर्मधारा दक्षिणतिर पनि पर्नुपर्न्या जलधेनु बागमति उत्तरवाहिनी भै रह्याको साँभो गरी बहाई उत्तरवाहिनी गराई विश्रान्थाका टारोलामा जन्त्र गाडी फेरी दिया । सभापालिमा तला होचा ३ धुरीमा हनुमान थापिदिया । बालकौमारीका सन्मान फेरिदिया । मानिस मर्दा गल्लीगल्लीमा राई विचार गर्नुपर्न्या रीत चलायाको संवत् ८२६ माघ कृष्ण ७ का दिन भक्तपुरका राजा भूपतीन्द्रमल्लका राज्य बभु दखल गर्न निमित्त चाँगु जाई बस्या । दलमुखि चौतारा आनन्दहरि थिया । यस लडाईमा बभु हात लिन सकेनन् । श्रीवज्रयोगिनी चाँगुनारायणका दर्शन गरी सकिरहँदा भक्तपुर्‍या मन्त्रीका खेलले तमाकुमा राखी-खुवाउदा संवत् ८२६ कार्तिक शुक्ल एकादशीका दिन योगनरेन्द्रमल्ल चाँगुमा परलोक भया । यसै दिन डोलामा राखी ललितपत्तनमा ल्याई राख्या । कान्तिपुरका भूपालेन्द्रमल्लका रानी र छोरा महेन्द्रमल्ल काजी प्रमाण शुद्ध आई विचार गरी भोलिपल्ट पलङमा राखी शंखमूलमा लग्या । यिनका संग सति जान्या रानी २ राउतिनी जना ७ बाहिरका जना २३ जम्मा सती जान्या ३२ गया सँ-

स्कार गरी सक्यापछि चतुर्दशीका दिन राजाका भण्डार हात्तीहरू कान्तिपुरका प्रजाहरूले लजान लाग्दा ललितपत्तनका प्रजा सब उठी कान्तिपुऱ्याहरूलाई जहाँ पाया तहाँ माऱ्या। यस्ता तरह गमाई १०० जनालाई मारिसक्यापछि कान्तिपुरका राजाले रानी काजी कोठामोच्याहरूकन पुऱ्याउन पठाया। संवत् ८२६ कार्तिक कृष्ण १० का दिन छोरीपट्टिका सन्तान लोकप्रकाशमल्लकन भक्तपुरका राजा आई अभिषेक दिन लाग्या। त्यहाँपछि हात्तीमा सवार भै देशजात्रा गऱ्या। यिन राजा योगनरेन्द्रमल्लका पुत्री योगमती रानीका छोरा हुन्। संवत् ८२६ साल बर्सात नहुँदा योगमती रानी र लोकप्रकाशमल्लले सबै ठाउँ देवताहरूकन पूजा पाठ माऱ्या गरी पानी मगाया। यही साल आषाढ मैह्नामा बज्रबाराही बालकुमारी स्थान देवीमाथी बढ़ी जाहेर भया। फेरि बुङ्नारायणगणेश पनि कीर्तिपुरतिर फर्किरह्या।

संवत् ८२७ आश्विन वदी षष्ठीका दिन लोकप्रकाशमल्ल ११ मैह्नामात्र राज्यभोग गरी मृत्यु हुँदाभया।

यहाँ उप्रान्त बौद्धमल्ल कुबरका छोरा इन्दुमल्लकन राज्याभिषेक दिया। संवत् ८२९ चैत्र शुक्ल पूर्णिमाका दिन डेढ़ वर्षमात्र राज्यभोग गरी परलोक भया। भाग्यवती रानी सती गइन्।

यहाँ उप्रान्त बालक महेन्द्रमल्लकन राज्याभिषेक दिया। यी राजा बालक हुनाले लोकप्रकाशमल्लका महतारि योगमती रानीले कान्तिपुरका राजाकन बोलाइ मर्यादामाफिक कर्म चलाई मछिन्द्रनाथकन जात्रा गऱ्या। यिनै योगमती रानीले ढुंगाका देवालय बनाई श्रीकृष्णकन स्थापना गरिदिइन्। संवत् ८३४ चैत्रवदि २ का दिन श्रीमच्छिन्द्रनाथका मुख उप्की आयो। संवत् ८३५ पौषवदि २ का दिन बालक राजा महेन्द्रमल्ल शीतला भै परलोक भया। माघ शुक्ल १३ वर्ष २ संवत् ८३५ ज्येष्ठ कृष्ण अमावास्याका दिन ऋद्धिनरसिंहमल्ल परलोक भया।

संवत् ८३७ आषाढ शुक्ल पूर्णिमाका दिन कान्तिपुरका राजा महेन्द्रमल्लकन मणिमण्डपमा सिंहासन राखी राज्याभिषेक दिया। भोगवर्ष ५ यिन राजा शुद्ध सूर्यवंशका हुन यिनै राजाले कान्तिपुर ललितपत्तन दुवै सहर भोग गऱ्या। यिन राजाका पालामा संवत् ८३६ चैत्र मैह्नादेखि कान्तिपुरमा महामारि आई धेरै मानिस मऱ्या। असारदेखि ललितपत्तनमा मऱ्या। त्यहाँपछि भक्तपुरमा मऱ्या। कान्तिपुरका महेन्द्रमल्ल ललितपत्तनका राजा ऋद्धिनरसिंहमल्ल भक्तपुरका राजा भूपतीन्द्रमल्लका पर्यायमा पैल्हे हात्ती घोडा आदि पशु पन्छीहरू असंख्य मरी पछि मनुष्य मऱ्या। तीन सहर आदि ग्राम सबमा मर्दा व्यवहार विचार सञ्चार सब बन्द हाहाकार भै गया। संवत् ८४१ ज्येष्ठ शुक्ल १४ का दिन व्याघ्रभैरवका नेत्रदेखि मुनिको मुख पतन भैगया। सबै देवताहरूका स्थानस्थानमा उपद्रव भया। यस्ता तरहसँग महा उत्पात भयापछि संवत् ८४२ माघ कृष्ण ११ का दिन अघि भास्करमल्ल नाम भयापछि

महेन्द्रमल्ल कहायाका कान्तिपुर ललितपत्तन दुवै सहरका राजा महेन्द्रमल्ल परलोक भया ।

यहाँ उप्रान्त ललितपत्तनमा योगप्रकाशमल्ल छोरीपट्टिका सन्तान राजा भया । भोगवर्ष ७ तिन राजाकन भक्तपुरका रणजीतमल्ल राजा आई राज्याभिषेक दिया तिन राजाले महामारी उपद्रव शान्तिनिमित्त संवत् ८४३ माघ ६ का दिन लक्षाहुतिजज्ञ मेल र भगवतीदास नाम काजी र राजा प्रमुख भै सम्पूर्ण गन्या । संवत् ८४४ ज्येष्ठ शुक्ल ७ का दिन मछिन्द्रनाथकन रथबाट ओह्लाल्दा कुकुरले छोयो । फेरि वुङ्मती पुग्यापछि सुंगुरले छोयो र प्रायश्चित्त गराया । फेरि कोटिका गौरीकुण्डबाट मांस उत्री आयो । फेरि गुह्येश्वरी कुण्डबाट हिला जाहेर भै आयो । फेरि चाँगुनारयणका शिर जमीनमा खसिरह्या फेरि भक्तपुरका भैरवका चढाईराख्याको महिषको शिर जिभ्रा निकाली उफ्रन लाग्यो । फेरि पनौतिमा ठेवोमा देवगणहरू अग्नि सरिरह्या । संवत् ८४५ सालका मछिन्द्र जात्रामा बांग्यामुढाको मुखका नाक आँखा मुखबाट धेरै दिनसम्म पानीको बूँध गिर्दै रह्यो । यही साल भक्तपुरका राजा एकला थिया । तिनले गोर्खाका राजाको सैन्य भिकाई भदौमा विसङ्खु दखल गरिलिया ।

फेरि ललितपत्तनका राजाले कातिक मैह्लामा गोर्खाका सैन्यकन हात ली योगप्रकाशमल्लले विसङ्खु आफ्ना गन्या यहाँपछि भक्तपुरका राजाले कान्तिपुरका राजालाई एक हात्ती र १२००० रुपैँया दी योगप्रकाशमल्लकन एकला गन्या । फेरि थोरैदिनपछि जगज्जयमल्ल योगप्रकाशमल्लसँग मिल्न आया । फेरि मैह्ला दिनपछि कान्तिपुर ललितपत्तन भक्तपुरका तिनै राजा कोटेश्वरमा भेट भै भक्तपुरका राजाले २ हात्ती र २४००० रुपैँया दिदा जगज्जयमल्ल योगप्रकाशमल्ल गोर्खालीले तीन भाग गरी बाँडी लिया । संवत् ८४६ वैशाखमा मछिन्द्रनाथका देवालयमा चारैतर्फ ढुंगा बसाई मिलाई प्रतिष्ठा गन्या । यहाँपछि कान्तिपुर भक्तपुरका राजा मिली भक्तपुरमाथि चढाइ गरि फूलबारी नांबुढा दापचाको टाँजती कर्की आया । कान्तिपुरका राजाले भक्तपुरका राजासँग हात्ती २ र १८००० रुपैँया लिया । संवत् ८४६ भाद्र कृष्ण १२ का दिन योगप्रकाशमल्ल परलोक भया ।

त्यहाँपछि विष्णुमल्लकन राज्याभिषेक दिया । भोगवर्ष १५ संवत् ८५१ पौष मैह्लामा जगज्जयमल्ल र विष्णुमल्ल राजा मिली भक्तपुरमाथि चढाइ गरी नालाग्राम साँगा आदि ६ ग्राम जिती ३ ग्राम बाँडी लिया । विष्णुमल्ल राजाले आफ्ना भागमा गोर्खालिहरूकन राखी आया । यहाँपछि तीनै राजा भेट भै भक्तपुरका राजाले आफ्ना ग्रामहरू छुटाउन निमित्त हात्ती र रुपैँया दी पठाउँला भन्या कबूल गराई फर्की आया । पछि कबूल नबुझाउँदा रिसाया र भक्तपुरमा ठाना बस्न गया । भक्तपुरका राजाले तनहुँ लमजुङ् मकवानपुरका सैन्य आफूसित मिलाई आई हटाई । पठाया । १२० जना गोर्खालीहरूकन समातीं ग्रामहरू आफ्नु गरी लिया । यहाँपछि रणजितमल्लले विष्णुमल्लकन रुपैँया दी आफूसंग मिलाया । यहाँपछि कान्तिपुरका राजाले गोर्खालीकन आफूसंग मिलाई ललितपत्तनका राज्य लामुडाडा

दखल गरी गोर्खालीकन राख्या । फेरि विष्णुमल्ल राजाकन गोर्खालीकन आफुसँग मिलाई लामुडाँडा आफ्नु गऱ्या । संवत् ८५१ आषाढ कृष्ण ५ का दिन श्रीमच्छिन्द्रनाथकन ठूलो चाँदीका त्रह्मकूप बनाई चढ़ाया । फेरि संवत् ८५४ माघ शुक्ल देखि आरंभ गरी चौक्काठ नाम गरी अति सुन्दर गरी प्रजा गुहार मागी ३ मैंह्ला भित्रमा अघि भयाको भत्काई दर्बार बनाया । संवत् ८५७ साल विष्णुमल्ल राजाकी रानी चन्द्रलक्ष्मी देवीले श्रीगुह्यकेश्वरी प्रीति गरी ठूलो घण्टा चढाई सुनका छाना छाई गजूर चढाइन् । संवत् ८६० पौष कृष्ण ७ का दिन श्रीपशुपतिनाथकन चाँदीका जलहरि बनाई चढाया । महास्नान यज्ञादि कर्म गराया । यही साल फाल्गुन शुक्ल ६ का दिन विष्णुमल्ल राजाकी रानी विष्णुमति देवीले मातातीर्थमा अघि एक धारामात्र थियो । पछि जग्गा सुन्दर गरी बनाई एघार धारा गरी बनाई प्रतिष्ठा गरिन् । संवत् ८५२ ज्येष्ठ शुक्ल ४ शंखमूलका पश्चिम पट्टि लामु पाटी बनाई लक्ष्मीनारायण बाग्मतीका मूर्ति स्थापना गरी प्रतिष्ठाकर्म गराया । संवत् ८६१ माघ कृष्ण ७ का दिन महादेव काशीमा अग्निस्थापना गरी यज्ञ पूर्ण गऱ्या । अद्यापि अग्निहोत्र त्यहाँको ब्राह्मणहरूले गर्दछन् । चार हात चार पाउ चार कान भयाको भेडो जन्म्यो । फेरि लगनखेलका माजु सीमाका ठूलो एक हाँगा अकस्मात वायु नबहो ठूलो शब्द आई पश्चिमबाट हाँगा भाँचियो । यहाँपछि गोर्खाली र लमजुङ्या मिली देउ राली दखल गऱ्या । यिन राजाले वज्रवाराही देवीका स्थानमा जगा देवालय बनाई शिलाका महिषमूर्त्ति बनाई स्थापना गरिदिया । यिन राजाले ब्राह्मणहरूकन विर्तादी धर्मको सम्मान गरी जगज्जयमल्लका पुत्र आफ्ना साला राज्यप्रकाशमल्लकन राज्याभिषेक दिनू भनी संवत् ८६५ श्रावण शुक्ल ८ का दिन परलोक भया ।

यहाँपछी राज्यप्रकाशमल्ल राजा भया । भोगवर्ष १३ यिन राजाले श्रीमत्स्येन्द्रनाथकन नाहाल पूजा रथका अगाडि ध्वजा ढल्माका पछाडि पाँच तल्या छत्र चढाई जात्रामा प्रतिवर्ष लेजानुपर्न्या रीत चलाया । संवत् ८६८ पौषमा राजा सिद्धिनृसिंहमल्लले बनायाका कृष्ण देवालयका अगाडीको खम्बाका गरुडको नेत्रबाट रक्त बही आयो । यही साल भदौमा तनहुँका राजाले चितलाङ दखल गरी लिया । पछि केही रुपैँया दी बुझाई जगा आफ्नू गऱ्या । तनहुँका राजाले लामुडाँडा दखल गरी राख्दा नेपालका प्रजाहरूले कपास किन जान पनि पाएनौं तुना काठहरू काट्न जान पनि पाएनौं भनी राजा राज्यप्रकाशमल्लसँग बिन्ति गर्दा सयभा काजीले म युक्तिगरुँला केही सन्देह मान्नुपर्दैन भनी पठाया । यहाँपछि सयभा काजीले तनहुँका राजासंग बन्दोबस्त गरी लामुडाँडा छुटाईदिउँला भनी आफ्ना गुरुकन पठाउँदा बीचैमा गोर्खाका राजा आई धनवन्त काजीसंग सल्लाह मिलाई लामुडाँडा सपुर्द गरी पठाया र सयभा काजी रिसाई फर्क्या । जगा छुटाइदिन आउन्या तनहुँका राजाको गुरु बहुतै दिक् औ बहुतै सर्मिदा भै फर्क्या ।

संवत् ८७१ साल ज्येष्ठ वदि अमावास्याका दिन मछिन्द्रनाथका रथ नखुमा पुग्या । यसै दिन सूर्य-ग्रहण हुँदा राजा राज्यप्रकाशमल्ल प्रभृति धेरै प्रजाहरू जाई स्नान गऱ्या । राजाले धेरै दान धर्म गऱ्या यस्तो महापर्व अघि भै गयाको सुन्याको पनि छैन यही साल भिखवालधन र धनवन्त काजीले भिल्ढुंगा खाल दखल गरी राख्दा कालुपाँडेसँग भेट गरी छुटाउनको बन्दोबस्त गर्दा कालुपाँडेले हामीलाई जान आउन खुलासा गरिदिन्छौ भन्या सौ भन्दा यस कुरा प्रजाहरूले नमान्दा फर्की आया ।

तिन राज्यप्रकाशमल्लका १६ रानी थिया र स्त्रीहरूका विरोधले नेत्र रोग भयो । ज्योतिषीहरूकन देखाउँदा गणेशको दोस भनी ठहराउँदा चोभार गणेशकन देवालय बनाई गजूर चढाया । भक्तपुरका राजा रणजितमल्ल गणेशदर्शननिमित्त आया । कान्तिपुरका राजा जयप्रकाशमल्लले भन्या २१ फेरासम्म बो-लाउन पठाउँदा पनि अनेक बिन्ति गरी पठाउँदा पनि आएनन् भनसारो पाटनका लगा भित्रको कोटहरूमा आगो लाइदिया । श्रीगणेश छाडी यस्ता तरहको बुद्धि गऱ्या । यही खबर सुनी कालीदास धनवन्त मन्त्रीले गोर्खाका राजा पृथ्वी नारायणकन पत्र लेखी नुवाकोट दखल गरी लेऊ भनी पठाउँदा गोर्खाका राजाले अवसर पाई दखल गरी लिया । राज्यप्रकाशमल्ल राजाले ४ दिनसम्म राज गरी विधिपूर्वक प्रतिष्ठा कर्म गरी सहर फर्क्या । यहाँपछि जयप्रकाशले नगर्कोटी झिकाई सिपाही बनाई नेपालमा रा - जाका भँडार खराप गऱ्या । दर्माहा दिनानिमित्त पसुपतिनाथका भण्डार खोली पनि लिया । ठछे महालक्ष्मीका अगाडि खम्ब हाली सुनका सिंह उठाई रात्रिमा कान्तिपुरमा लग्या । अनेक उपद्रव गऱ्या त्यहाँपछि कालीदास मन्त्रीका घरमा नगर्कोटी २ जनाकन चाकरी राखी भेद गरी ६मैह्नापछि दशैंमा स्थापना कर्म गरी चोकमा बसी तमाखु खाइरहँदा परशुप्रहार गरी कालिदासकन मार्न लाया । यी नगर्कोटीहरूकन नगरी नकर्चाहिलमा समाई माऱ्या । दोस्राचाहिँलाई वाग्मतीमा फेला पारी माऱ्या । यहाँपछि कालिदासलाई मारिदिया भनी जयप्रकाशमल्ल बहुतै हर्षमान्या । यहाँपछि ठूला एक मन्त्रीलाई मारिदिया भनी राज्यप्रकाशमल्लको मनहारि रोगले पीडा गऱ्यो । यस्तै बखतमा बिष्णुदत्तानामका ब्रह्म-चारी वीरसाधना गर्न राज्य वामन सामर्थ भयाका ललितपट्टनमा प्राप्त हुँदा तिनकन बहुतै सन्मान गरी राजाको जय होस् भन्दा कारणले वैष्णवी पीटमा साधन गरी सोधन नाम गऱ्याको गुभाजु मन्त्र शास्त्रमा जान्या थियो र साधन गर्याको चरित्र बुझन पठाउँदा सोधन गुभाजुले रात्रिमा जाई साधन गऱ्याको भ्रष्ट गरी यही साधन गर्दामा पाव्याको मोहनी पाई गुभाजुले पाडनह मवहादेव भनाई दुनियाले पूजा मान्य गराई बहुतै तर्वाषिसँग अहंकार गर्न्या पछिबाट मत्स्येन्द्रनाथ नै हुन् भनी शिरको छत्र लिन जाँदा समाई त्यसलाई माऱ्या । अघि साधना भ्रष्ट गरिदिदा विष्णुदत्त ब्रह्मचारिले बहुतै रिसाई श्राप दिया । आफ्ना देश फर्कि गया ।

यहाँपछि गोर्खाको अवश्यनै राज्य होला भनी श्राप दिँदाभया । नीचका बुद्धि लीकन राजाप्रति

मन्त्रीले मन्त्र शास्त्र भ्रष्ट गऱ्या । यहाँपछि ब्राह्मण देवताकन सन्मान गर्न्या गोर्खाका राजाले यो नेपाल राज्याभिषेक पाउला । ब्राह्मण देवताकन सन्मान गर्न्या उत्तरोत्तर वृद्धि होला भनी ब्रह्मचारि विष्णुदत्त मैथिलले आज्ञा गरी गयाको छ ।

यहाँपछि राज्यप्रकाशमल्लले नाना प्रकारले प्रजालाई पीडा दीकन बौलाहाको स्वभाव भैं नानाउपद्रगऱ्या । संवत् ८७३ चैत्र मैह्नामा राज्यप्रकाश मल्लका पुत्र राजकुमार परलोक भया । यही बखतमा गोर्खाका राजाले नेपाल खाल्डामा प्रवेश गरी दहचोक फर्पिङ आफ्नु गरी राज्यको चलन गरिरह्या । यहाँपछि गोर्खाका राजा पृथ्वीनारायणशाहले नेपाल खाल्टाभित्र प्रवेश गरी पाटनका लगाको थोरै ग्रामहरू दखल गर्दा संवत् ८७७ कार्तिकमा बुङ्मती रह्याका मछिन्द्रनाथकन पाटनमा ल्याया । नेममा रह्याका गुभाजुहरूले बोकाई ल्याउनाले ग्रामहरूका मानिस सहर जान नदी सहरका मानिस ग्रामहरूमा जान नदी राख्दा पाटनका काजीहरूले केही रुपैंया गोर्खाका राजालाई दीबुझाई ठेंबु बाडे ग्राम चापागाउ ठेचो सुनागुठी खोकना बुङ्मती फर्पिङ यति ग्रामहरू छुटाई लिया । यिनै ग्रामहरूबाट घर्घरी उठाई रुपैंया जंमा गरी गोर्खाका राजालाई महाजन हरूसँग सापट्ली टारिदिया ।

फेरि गोर्खाका राजाले थाङ्कोट् बलम्बु एतुंगल दहचोक दखल गरी राख्दा कीर्तिपुर दखल गर्न निमित्त भंखेलमा ठाना बस्न आउँदा विश्वजित्मल्लका सेना र जयप्रकाशमल्ल आफैं जाई लडाइ गरी गोर्खाका काजीहरू सबै यिनिहरूकन मारी हटाया । गोर्खाका राजा पृथ्वीनारायणशाह जीवको शंसय गरी दहचोक चढी भागी गया । राज्यप्रकशमल्लका रोग साह्रै भै नाना ज्योतिष शास्त्रमा विचार गराई समय अनुसार उपचार दान कर्म चाहिँदो गराई नाना औषधि गराउँदा पनि रोग शमन नभै संवत् ८७८ शुक्ल सप्तमी पर अष्टमीका दिन परलोक भै गया ।

यहाँपछि भिरख्वाल धन काजीले नुगलको विश्वजित्मल्ल १८ बर्षका उमेर भएकालाई ल्याई सिंहासनमा बसाई उपाध्या मन्त्री प्रजाहरुसँग सम्मत गरी बिश्वजित्मल्लकन संवत् ८७८ आश्विन शुक्ल ६ का दिन राजा थाप्या । भोगवर्ष २।६ यिन राजाल प्रजा प्रभृतिकन सुख दी राज्यको चलन गरिरह्याका थिया । यिन राजाले कालिदास काजीकी छोरी चाकुबहाल काजीका छोरालाई दयाकी भयजूथकुं राजाले ल्याई स्त्री गरी राख्या र चाकुबहाल प्रमाणका छोराले कालीदासकी छोरी देवीदास र तधिधनको बल पाई राजामाथि दगा गरिरहँदा एकदिन विश्वजित्मल्ल राजा मछिन्द्रनाथका दर्शननिमित्त जाँदा मछिन्द्रस्थानमा मुहुडा फिराईराख्याको देख्या र राजाले आज किन लोकनाथकन टेढो गरी कन राख्याको भनी हुकुम हुदा अरू साथका मानिसहरूले सदाका माफिक रह्याकाछन् भनी बिन्ति गर्दा राजाका मनमा आजमलाई क्या भयो भनी आश्चर्य मानी दर्शन गरी फर्कदा सिंढ़बाट लोट्या । त्यहाँपछि दर्बारमा आया यसै दिन चौकाठका पंच भयालमा रह्याका थिया । उसै भखत चाकुबहाल प्रमाणका छोराले ढुंगाले

हानी भाग्या । राजालाई लागेन । यसकी स्वास्नी मैंले राख्यो भन्न्या मलाई हान्याको हो भनी रीसले राजाले केही नभनी चुप लागिरह्या ।

त्यहाँपछि राजाकन साथमा रह्याका काजी प्रधानहरूले राजामाथि यस्तो गर्न सक्न्यालाई समाइ ल्याऊ भनी भयानबाट भिन्न गरी काज हरू आफ्ना आफ्ना घर गया प्रजाहरु जाई चाकुबहाल काजी कापरलाई घेरा दीयार चाकुबहाल प्रमानका छोरा दुई भाइले अबहाम्रो जीव रक्षाहुन्याछैन सक्यास-म्मको पौरुष गर्न्या हो भनी जीवको माया मारी दुइ भाईले तर्वार झिकी पट्टाखेली जाई घेरा दिन्या-हरूकन धपा या । प्रजाहरूकन मागी आउनु भन्न्या हुकुम थिएन र मारेनन् । समाउन भन्या सकेनन् ती दुइ भाइले हटाउदा हटाउँदा भीमसेनस्थान नघाई धपाया । दर्बारका ढोकाहरूमा रह्याका मानिसहरू पनि दब्दा एक कोही ढोकाबाट पसी दर्बारभित्र ज्यांदा राजाले खबर पाई तलेजुमा लुक्न भनी जांदा चाकुबहाल प्रमाणका छोराले शस्त्र हातमा ली केबल मार्न आंगो लगारी ल्याउँदा विश्वजितमल्ल राजाले अबमेरो जीवरक्षा हुन्याछैन भनी डराई कम्बबाट शस्त्र हातमा ली पेट चिरी संवत् ८८० भाद्रबदि १४ का दिन प्राणत्याग गर्न्या । यस्ता तरहसंग राजा विश्वजितमल्लकन परलोक गराई चांडै फर्की देशत्याग गरी मधेसतर्फ भागी गया । त्यहाँपछि काजीहरूले थाहा पाई दर्बार आइं बहुतै दुःखित भयापछि धनवन्त काजीले उसै बखत कान्तिपुर जाई जयप्रकाशमल्लका हजुरमा पुगी जुनकन बाबा भनी मानिरह्याथ्यौं तनकन नरचाकुबहाल प्रमाणका छोराले दगागरी अन्तकाल पार्न्या । अब हजुरकन बाबाभनी मात्र आया भनी विन्ति गर्दा जयप्रकाश मल्लले माया गरी ललितपत्तनमा आया । राजा मरण भयापछि विश्वजितमल्ल का महारानिले बहुतै विलाप गरी रोई भयालमा बसी प्रजाहरूकन मेरा पुत्रकन यहाँसम्म आपदा पर्दा क्या हे गर्न्या भन्दा प्रजाले केही विन्ति गर्न सकेनन् । सबै टोलाई रक्षा र प्रजाहरूकन औ-सरमा बात न आवस् भनी श्राप दी छोराका संसर्ग गरी सती गइन् ।

यहाँपछि संवत् ८८० साल भाद्र वदि १४ का दिन जयप्रकाशमल्ल राजा भया । भोगवर्ष १।२ यिन राजाले हुकुम चलायाको देखी डरमानी टेकु दोभानतिर जाँदा उतैतिरबाट धपाई कान्तिपुर पठाया। यहाँउप्रान्त पाटनका काजीहरूले भक्तपुर जाई रणजितमल्लकन बुझाई संवत् ८८२ साल ज्येष्ठ मैह्नामा ल्याई ललितपत्तनमा राजा गर्न्या । भोगवर्ष १।। यिन राजाकन मन नपरी शंखमूलमा श्राद्ध गर्न जादामा तेसै बाटो धपाई पठाया । फेरि तिनै प्रमाणहरूले कान्तिपुरका जयप्रकाशमल्लकन अनेक तरहसँग बुझाई ल्याई राजा गर्न्या । मैह्ना ६ राजा भया उप्रान्त काजीहरूसँग चित्त नमिल्दा राजा जयप्रकाशमल्लले दगा गरी कान्तिपुरका देवानन्द उपाध्याकन पाटन पठाइ धालाछे काजी धनवन्त भिखवाधन आदि यी प्रधानहरूकन जयप्रकाशमल्लका आज्ञाले सात पुर्खाको धर्म दी सत्यवाचा गरी कान्तिपुर लग्या । यहाँपछि जयप्रकाशमल्लले नगर छोडी छुट्टै काजीहरूकन बन्धन गराया । भिखवाधन काजीले जयप्रकाशका

बन्धनमा रहन्याछैन । पृथ्वीनारायणशाहकन सलाम गर्न्याछैन भनी प्रतिज्ञा गर्‍याको थियो र बन्धनमा पर्दा कम्मरबाट शस्त्र झिकी मुटुमा रोपी प्राणत्याग गर्‍या । यस कुरामा पाटनका प्रजाहरूले थाहा पाई हुल उठी रात्रीमा अटकनारायणका स्थानसम्म पुग्दा जयप्रकाशमल्लले खबर थाहा पाई २ जनालाई मारी ५ जनालाई समाई हटाई पठाया । यहाँपछि ५ काजीहरूकन स्त्रीको पोशाक पैह्राई आवरु लो फजित गरी छाडी पठाया ।

जयप्रकाशले पाटनका काजीहरु कन बन्द गरी राजा काजी शून्य भै रहँदा पाटनका प्रजाहरु जाइ गोर्खाका राजा पृथ्वीनारायणसाहकन राजा गर्नुपर्‍यो भनी बिन्ती गर्न जाँदा राजाले आफ्ना भाइदल मर्दनसाहकन आफ्नु साटो छात्र चिन्ह दी पठाया र नेपालि संवत् ८८४ माघ शुक्ल पुर्णीमा शुक्रवार का दीन पाटन सहरमा प्रवेश गराई राज्याभिषेक दिया । थोरै दिन व्यतीत भयापछि नुन कपास राजा पृथ्वीनारायण शाहले पठाई न दिँदा यस कुरामा प्रजाले दलमर्दनसाहकन भन्या । हामी प्रजाकन सुख होला भन्ना कारणले हजुरकन राजा थाप्यौं । नून कपास झिकाइदेउ भनी बिन्ति गर्दा राजा दलमर्दन साहले केही धन्दा मान्नु पर्दैन झिकाइदेउला भनी दिलासा दी राख्या ।
यहाँपछि दाज्यु पृथ्वीनारायणशाहकन पत्र लेखी पठाउँदा पनि दी नपठाउँदा छ प्रधानहरू र प्रजाहरू मिली राजा पृथ्वीनारायणशाहको नाम काटी कारण गरी दलमर्दन शाहकन राजा थाप्या । भोगवर्ष १ त्यहाँपछि पृथ्वीनारायणशाहमाथि बधाई तैपनि नून कपास दी नपठाउँदा प्रमाणहरू प्रजा रिसाई दलमर्दनसाहकन छेकी पछिबाट छाडी पठाया ।

यहाँपछि संवत् ८८५ वैशाख शुक्ल १२ बृहस्पतीवारका दिन पाटनवासी ठाकुर तेजनरसिंहमल्लकन राज्याभिषेक दिया। भोगवर्ष ३ यही सालगोर्खाली नेपालमा प्रवेश गरी ठाना राख्या । ठानामा रहन्याहरूसीत सत्य विश्वास गरीकन तिमीहरूकन मान्याछैन भनी निदानमा सबैकन मारीदीया । २ सर्दारहरूकन समाई नुवाकोटमा लगी साम्नी दिदा नदीमा डुबाई दुख दिंदा एक जना मर्‍यो। धनवन्तका छोरा वीरनरसिंह मरेन । चौकी राखी कतै जान नदी राख्दा पछिबाट तेरा बाबुलाई चिठी लेख फलाना गाउँ हाम्रा हात पारिदेऊ त्यहाँपछी छोडिदीउँला भनी केही गाउँ हात पार्‍या । पछीबाट नेलमा रह्याका वीरनरसिंबले नेलैसँग त्रिशूल गंगामा फाल हाल्दा चोकीदारहरूले फेरि समाइ राख्या । यस्तै समय धेरै चिठी गोर्खाका राजा पाटनका काजीको उत्तारा उत्तरी हुँदै थियो । काजी धनवन्तका छोरा वीरनरसिंहले बाबुकन चिठी पत्र लेख्दा छोराको मायाले पृथ्वीनारायणसाहबाट चिठी पत्रपठाई झिकाउँदा पाटनका काजीमान छोडी गोर्खाका भरमा गया । यही साल श्रीवज्रयोगिनीका निधारमा अकस्मात रक्तका बिन्दु देखिया । वैशाख कृष्ण १४शनिश्चरवारका दिन बालाज्यूका कोटमा गोर्खाका का सैन्यले प्रवेश गर्‍या ।

संवत् ८८६ नउचैत्र शुक्ल ६ का दिनका रात्रिमा कीर्तिपुरमा गोर्खाले प्रवेश गर्‍या । देश प्रजाहरू साम्ने देखापर्‍या आइलाग्न्याहरूकन समाई मार्‍या । पछिबाट अघि कालुपाडे आदि सर्दारहरूकन र शूरप्रतापशाहका नेत्र तीरका प्रहारले फोरिदियाः भन्या रिसले कीर्तिपुर्‍या प्रजाहरू १२ वर्षभन्दा बढी उमेर भयाकाहरूकन नाक काट्या । भागी दवी रहन्याहरूमात्र बाँच्या । यहाँपछि संवत् ८८७ साल पौष कृष्ण दशमीका रात्रीमा प्रजाहरू सब जम्मा भै चिराक बाली दगाछोडी कीर्तिपुरका कोट घरमा प्रवेश गराया । यहाँपछि संवत् ८८८ भाद्र शुक्ल १४ उत्तरफाल्गुनी नक्षत्र सोमवारका दिन गोर्खाका राजा पृथ्वीनारायणशाहले कान्तीपुर प्रवेश गर्‍या । पछि जयप्रकाश भागी पाटनमा आया । त्यहाँपछि आश्विन वदि ७ का दिन पाटनका तेजनरसिंहमल्ल र जयप्रकाशमल्ल दुवै भागी भक्तपुरमा गया । पाटनका काजी सयखवाधन भोजनरसिंह सबमता सिपाइहरू सब भक्तपुरमा गया । यहाँपछि संवत् ८८८ आश्विन वदि ११ शनिश्चरवारका दिन गोर्खाका राजा पृथ्वीनारायणशाहबाट ललितपत्तन दखल गर्‍या । त्यहाँपछि मिश्रज्यु बाहाबल राजाधनवन्त सिं प्रमाण तविप्रमाण कीर्तिलक्ष्मी सिं यी ६ जनालाई पाटनको भारा दिया । यहाँपछि यी प्रधानकन बोलाई स्वच घरमा सल्लाह हुदा मिश्रज्युले तिमीमरू छ जनालाई छल कपट मैले गर्न्याछैन भनी जनै मुठीमा पानी ली सत्यबाचा गर्‍या । बाहाबल रानाले ढाल माथि तरवार राखी तिमीहरूमाथि मैले छल कपट गर्‍या यी भवानीको कुदृष्टि लाग्या छ । पछि संवत् ८८९ पौषमासमा राजा पृथ्वीनारायणशाह पाटनमा प्रवेश गर्दा सिन्दूर जात्रा गरी लग्यापछि छ प्रधानहरूकन पाउरखवारी ल्याई समाई कान्तिपुरमा लगी सर्वस्व हरण गरी सन्तान मार्‍या । यिनिहरूमध्ये यगुबहालको प्रधान भागी मधेसतिर गया । कसैले फेला पार्न सकेनन् । अरू पाँचै प्रमाणहरूकन हुल्याहा हुन भनी यमलोक पठाया । पाँचै मयजु सती गइन । धनवन्तसिंह शरण आयाको हुन्याले बाँच्या । सबै जग्गा जमीन घर खेत फोई बक्स्या । ६० खेत जागीर बुङमती खुवा गरी १२५ घोडा तैयार गर्नु भनी भारा-बक्स्या । यस्ता तरह संग राजा पृथ्वीनारायणशाहबाट निकट गरी राज्य गर्दाभया ।

## कान्तिपुर

फेरी कान्तिपुरको बिस्तार कहिन्छ । शिवसिंह मल्लका ज्येष्ठ पुत्र लक्ष्मीनृसिंहमल्ल संवत् ७३३ मा राजा भया भोगवर्ष ११ दिन राजाका पालामा आफ्ना कष्ट कालमा आयिसह्यार गर्‍या भनी संझी रजकपुत्री फिकुवा पर्‍याकन डोली पठाई लिन पठाउँदा डोलीमा बस्न्या हाम्रो रीत छैन भनी देवपत्तनमा आई राजासित भेट गरी जलबन्ध मोचन गराया । धेरै खेत मागो गुठी राखी रानीगुठी भनी मनाया । राजाले यिनिहरूमाथि बहुतै आग्रह गरी खुसी गराई पठाया ।

यहाँपछि नित्यानन्द स्वामीले श्रीपशुपत्तिनाथकन ढोग दिदैन । यस्ता पूजाहारी राखी बढिया छैन भनी कोही दुर्जनले राजालाई सुनाउँदा राजा आफै जाई हेर्न जाँदा स्वामीले अर्थ बुझी केही न-

बोली नित्य पूजा सकी बाहीर आई चण्डेश्वरी पूजा गरी आई कामदेवकन ढोक दिया र कामदेवका पादुका भंग भै खस्या । फेरि धर्मशीलामा ढोक दिदा धर्मशीला फुट्यो । दुइ चिरा भयो । फेरि दक्षिणदर्बाजाभित्र पसी दण्डवत् प्रणाम गर्दा त्यो शीला पनि दुई टुक्रा भै फुट्यो । फेरि हर हर भनी भित्र जाई श्रीपशुपतिनाथकन सिरले छुवाई दण्डवत गर्न तयार पर्‍या बेलामा स्वामीकन बलले समाई राजाले कर जोरी बहुतै प्रार्थना गरी बुझाई स्वामीदेखि डर मानी राजा कान्तिपुर फर्क्या । यिन दिनदेखि स्वामीले मेरा गुप्त प्रभाव खोलनुपर्‍यो भनी दिक्क भै संसारमा रहनको इच्छा त्याग गरी नित्यपूजा सकी बाहिर आई नैऋत्य कोण मा खडा भै पकडो ३ भनी तीन बार नित्य भनि रह्या । थोरै दिनपछि यी नित्यानन्द स्वामी समाधि ली प्राण खैची शून्यमा गया । यी स्वामीलाई उनका गुरुले यो गुप्त प्रभाव खुलन गया पछि तैले प्राणको माया नराखी संसार त्याग गर्नु भन्‍या बाचा थि - यो र स्वामीले प्राणत्याग गर्‍याको हो ।

यिन राजाले श्रीगुह्येश्वरीदेखि बाग्मतीमा जग बसाई त्याई श्रीपशुपतिका स्थानको चरणोदक बाग्मतीमा पर्‍या गरी नाल बनाई जल चढाया । संवत् ७५३ माघ शुक्ल ७ का दिन श्रीतुलजा भवानीकन सुनका चदुवा चढाया । दीपमाला सवालाख बाली कोटेश्वर मखनमा गुदाल राखिदिया । भित्र ठूलो घण्टा चढाया यिन राजाका २ पुत्र थिया । जेठा प्रतापमल्ल कान्छा भीम मल्ल थिया । ११ वर्ष राज्य भोग गरिसक्दा मन्त्री वर्गका खेलले जेठा छोरा प्रताप मल्लले बाबुको टीकाहरण गरी राजा भया । भीम मल्ल बहुतै बुद्धिमान् अवतारी पुरुष हुनाले बालपनैमा मन्त्री भया । बाबुको टीकाहरण छोराले गरी बन्द गरी राख्या र मन हरी वात रोगले पीडा गराई रह्याका थिया । राज्याभिषेक पाया उप्रान्त ४४ वर्ष बाँची आफ्ना पूर्वादेखि क्रमसा चल्याको तुलजा जगाउन्या महामन्त्र बाबाबाट पायाको मन्त्र छोरा प्रतापमल्ललाई दिननपाई मन्त्र लोप गरी नेपाली संवत् ७७७ आढकृष्ण १३ शुक्रबारका दिन परलोक भया ।

अस्य पुत्र प्रतापमल्ल राजा भोगवर्ष ११ यिन राजाले बाबा छँदै बाबाको टीका हरण गरी संवत् ७४४ मा राजा भया । यिन राजाका पालामा श्रीदक्षिणकाली प्रसन्न भै मलाई मूर्तिमान् प्रकाश गर भनी- स्वप्नविषे प्रसन्न हूँदा राजाले याद नगरी रहँदा फेरि कन्या कुमारीमा प्राप्त भै मेरा स्वयम्भू मूर्ति अप्रकाशित छ । मलाई मूर्ति बनाई स्थापना गर महामारी भय निवारण होला आयुबृद्धि होला स राज्य प्रख्यात होला भनी आज्ञा हूँदा राजाले श्रवत नबनाई भएन भनी मूर्ति बनाउन लाया । जब सक्या यहाँपछि फेरि त्यो मूर्ति मेरो अप्रकाशित ध्यान हो त्यो दर्बार भित्र स्थापना गर भनी स्वप्न प्रसन्न हूदा दोस्रा मूर्ति बनाया । श्रीनृसिंह भट्ट लम्बकर्ण गुरु पाई यिनका द्वाराले श्रीदक्षिणकाली श्रीसुन्दरकाली अनुमातृकाकन दक्षिणभागे पूर्णवती गंगा वामभागे उद्धारवती गंगासंगम श्रीस्वयम्भू दक्षिणकालीका स्थान

निकटमा श्मशानवासी प्रकाशस्वरूप महाकाली सुन्दर कालीकन सहस्र बलि नरबलि महापूजा कोटयाहुति यज्ञ गरीकन प्रतिष्ठाकर्म विधान पूर्वक पुन्याई वैशाख शुक्ल ३ का दिन स्थापना गरी बिराजमान गराया। श्रीसुन्दरकालीकन र आफ्ना राजकुलमा मोहनचोक बनाई त्रिशक्ति पञ्चाम्नाय दशाम्नाय षोडशाम्नाय मूर्तिमा मूर्ति प्रतिमा चौसट्ठी जोगिनी आवरण देवता संयुक्त गरी श्रीसुन्दरकालीकन स्थापना गर्‍या।

यिनै फणिन्द्रका ईश्वरी प्रसन्न हुँदा असंहरव्य धन द्रव्य कुबेर संतुष्ट भै ऐश्वर्य पाउदा भया। श्रीगुरु नृसिंहभट्ट राजा प्रतापमल्ल मन्त्री भीममल्ल यी तीन जनाका सम्मतले ईश्वरीकन स्थापना गर्दा ईश्वरीका प्रसादले भोट राज्य लासा कुती अम्बल गरी धेरै दौलत प्राप्त हुँदा मोहन चोकमा पाँच कोटि द्रव्य भण्डार थाप्या। चार कोणमा चार ध्वजा खडा गरी जयधेनुमा षोडश प्रकारका अक्षर लेखी राख्या। फेरी कोटि धन खर्च गरी परलोक उद्धार इह लोक ऐश्वर्य साम्राज्य पाउनको कामनाले श्रीविष्णुदेव भवानीका मूर्ति बनाई आफ्ना मूर्ति बनाई सालिकथाप्या। श्रीपंचमुखि हनुमानका मूर्ति देवालय बनाई भित्र स्थापना गर्‍या। फेरिदोस्रा हनुमान्‌का मूर्ति बनाई राजद्वारविषे स्थापना गरी हनुमान् ढोका भनी नाम प्रख्यात गरिदिया।

बाबा लक्ष्मी नृसिंहमल्ल वात रोगले पीडा गराई दुःख पाइरह्याका थिया। यिनका मन्त्री भक्तपुरका कचिगल नरदेव काजी थिया प्रताप मल्लका काजी प्रतापध्वज भट्ट जोशी थिया। प्रतापमल्लले राजकाज गर्‍याको देखी बाबा लक्ष्मीनृसिंह मल्लले मनमा संताप छोडी मन हर्ष गरी भन्या कि मैले गुरुका सामर्थ सुनाकन गुरुका प्रसादले त्रुटिका विन सामर्थ भयो। धन्य मेरा गुरु भन्नु यस्तो भया पनि पुत्रले पुर्खाको नाम राख्यो। मेरो मनमा दुःख छैन गुरुका कृपाले मेरा पुत्र उद्धार भयाको देखिसक्यां। अघि मात्र मेरा मनमा दुःख भयो। पछिबाट मेरा चित्तले देख्या। भक्तपुर्‍या मन्त्रीका बुद्धि सुन्नु रहेनछ। इनीका बुद्धि मैले सुन्दा ग्रोराले यस्ता गर्‍याका हा उत्तरनट्टिका राज्यभोग गर्न पाउन्या गरी गुरुबाट कृपागरी प्रसन्न भयो। मेरा गुरुका कृपाले चतुर्दिग्‌को भुक्तमान होला भनी कृपा भयाको बुद्धि भयो। भक्तपुर्‍याको बुद्धि सुनी घर कलह कुटुम्ब नाश भयाको देखिसक्यां भनी लक्ष्मीनृसिंहमल्लले भन्या।

महारानी र भीममल्लकी रानी बहुतै मिल्याका थिया। आफ्ना कुलमा सिद्ध पुरुषले उपदेश गर्‍याको काम संझी पीठदेवता कोटेश्वरसम्म सडक बाग शास्त्र मर्यादाको सहर प्रजा दस्तुरबमोजिम बन्दोबस्त र यस्तो घाट तयार गर्न सक्या। यहो इन्द्रासन भन्थ्यो। छयासी हजार योजन हिड्नै पर्दैनथ्यो भनी दुइ जना रानी ब्बी कुरा गर्‍याको राजा प्रतापमल्लले र भीममल्ल मन्त्रीले सुन्याछन् र यिनै कुरा पूर्ववृत्तान्त सुनी बीरा पेठमा चिर अकालले सृष्टि हुन्छ भनी राजा प्रतापमल्लले र मन्त्री भीममल्ललाई धन पूर्ण गरी कार्य सिद्धि गर्नानिमित्त देश देशमा तिमीले गर्‍याको थिति प्रजा प्राणीले

मान्नु भन्या बन्देज गरिदिन्छु सकौला भाइ भनी हुकुम गर्दा भीममल्लले बिन्ति गऱ्या । भोट मधेस पहाड जाई बुझी बसी बन्दोबस्त गरी प्रजा त्यस सल्लाहमा राखी दौलथ कमाई ल्याई घाट् पाट् सहर जग्या । देवताका नामले टोलै बोलाई वैकुण्ठ जस्तो गरी सिद्ध पुरुषको आज्ञा श्रीपशुपतिनाथको इच्छा हजुरको कलियुगमा वीरकीर्त्ति रहन्या काममा थिति गरी बक्स्या । टहलमा म भरिसक्य गरी पुऱ्याउँला भनी बिन्ति गऱ्या र यही उद्योगनिमित्त राजाले बन्देज बाँधी भीममल्ल मन्त्रीले गऱ्याको स्थितिमा सबै प्रजाले राजी भै सामेल रहनु भनी सहर सिमानामा डंका बजाइदिया । भीममल्लले पनि मधेस पहाड भोट राज्यतक सर गरी मिलाप राखी सौगात पत्र पठाई राज्यको सोझो चिताई प्रजा मिलाई थिति-बाट टकसार रीत भात श्रीपशुपति आर्याको पूजा सज्जन पण्डित पुराण जोगीहरूमा भक्तिसँग मिलाप राख्दै धर्म मार्गले आयाको धन जम्मा गरी ढुकुटी भन्या नाम खजाना राख्या । पहाड मधेस सर गर्न उद्योग गरिरहन्याह्याका थिया ।

यस्तै बखतमा मन्त्री भीममल्लले श्री भीमभक्तेश्वर महादेव स्थापना गरी देवालय बनाउँदा भक्तपुऱ्या मन्त्रीको बुद्धिले तुलजाका देवालय भन्दा अग्लो भै तुलजा अप्रसन्न हुँदा बहुतै मेहनतसित तीन दिनमा बनाइसक्याको देवालय एकैदिनमा भत्काइ डेढ वर्षभित्र पनि सिध्याएनन् । यस्तै बीचमा उत्तरापथबाट कल आउँदा राजा प्रतापमल्लले भीममल्ल मन्त्रीकन वकील गरी उत्तरापंथ राज्य गर्नको मनसुवा गरी पठाउँदा मन्त्री भीममल्लले भक्तपुऱ्या मन्त्रीको कपट बुद्धि थाहा पाई पछि मलाई चुक्ली गरी बिगार पर्ला फर्की आउन पाउन्या छैन भनी चोताई पत्र लेखी आपना तकियामनि यस्ता तरहका बेहोरा लेखी राख्या । भक्तपुऱ्याका बुद्धिले राज्य नासला, पछिबाट राज्य हुन जाला । मेरा बाबाका बुद्धि छैन भन्दा भन्सारी मेरा दाज्युको बुद्धि रहेनछ मलाई विदेस पठाउनको मनसुवा न गऱ्या । परन्तु बागमती पूर्वपट्टिका मनुष्यको विश्वास सुन्याको नेपाल थाम रहन्या छैन । उपान्त टीकाधारीको आज्ञा सुनी जान पऱ्यो भनी मैले धंधा लियाको होयिन परन्तु मेरा फर्की आउन पाउला भन्या आँखा देख्दैन भनी यस्ता तरहको पत्र लेखी गयाथ्या । राजा प्रतापमल्लले भाइ भीममल्ल मन्त्रीकन बाह्र वर्षको बिदा बक्सी साखुसम्म राजा आफै जाई भाइकन भोटतिर पठाई सहर फर्की आया । भीममल्ल मन्त्री पनि मुलुक सर गर्दै भोट जाई बिस्तार लेख्दै बुझी हेर्दा सर्वत्र सुन चाँदीका खानि रहन्या गुप्त मार्गका ज्यादा भन्या गुतुक् जाती कहिन्या ल्हासादेखि वायव्य उत्तर दिशातिर १५।२० दिनका रस्ताभित्र मानु । पानी जम्याको बालुवा नून उतैतिर सुन खानि एक बिरा जमीन खन्या पछि सुनका झुर्के झुर्की धेरै मिल्न्या पानीले पखाल्या र बुकी सुन् देखिन्या ल्हासादि गन्या गैह्रका भोटे महाजनका फौज एकट्ठा भं हुनियारतिर तिर कनान गैह्र लो खचड च्याङ्ग्रा भेडा गधालाई सत्तु चिया बोकाई गुतुक् जातिका देसमा जाई सुन सत्तु चिया बराबर साटो नून मफतैमा रिहा खचड गैह्रमा बोकाई ल्याउन्या एकलै

१।७।१४।२०।६०।७० जना मरमेनन जाई सबनु गुरुक जाति भूत जस्ता मानीकन कत्ति दया नभयाका
जस्ता भोक लाग्या बेलार्रीका मुखबाजी च्यांग्री समानी दातले घोकामा च्या पौलाती रक्त पिउन्या यस्ता
तरहका मानिस का हातमा द्रव्यको खानि रह्याको थाहा पाई भीममल्ल सामर्थीवाला थिया र मनमा
बिचार गन्या कि तिनीहरू सँग सलुक् गर्न सक्या सिद्ध पुरुषको आज्ञा श्रीपशुपति आर्यको इच्छा कलि-
जन्मको वीरकीर्ति महाराजको साम्ना टहल पुग्याथा भनी टागनमा सवार भै थोरै मानिससाथ ली सलुक
गर्दै जांदामा बाटामा सिद्ध पुरुष संग भेट हुंदा सिद्धले तिमी को हौ कता बाट आयौ । कहाँ जान्छौ किन
जीवको माया मारी जान्छौ भनी भन्दैमा तपस्वी देखि घोडाबाट उत्री साष्टांग प्रणाम गन्या । श्रीपशुप-
तिआर्यको इच्छा हाम्रा राजाको टहल तपाईंका दर्शन पाउनु मलाई जन्माउन्या मेरा बाबा महतारी
धन्य हुन् भनी अश्रुपात गरी बिन्ति गर्दा सिद्ध पुरुष खुसी भै चीन दिल्ली भोट सब भोग तप योग जो
गर्न उनका अवतारलाई त्यो काम सिद्ध छ । सोही राजा काजी पनि नेपालमा सत्यवादि हुनन् त्यो
कीर्ति उनै हरू गर्नन् पुन्याउनन् निमि वीरवरहौ छाम्कामिनिमा जाइ तमी रानी लाइ पत्रनेषि सगदसो
तिमिहरू योग नगर फेरी जन्मौला उहाँबेरै अनाचार हेर्रे कोछ मर्य्यादा न पुग्दामा जन्म लिएका तपस्वी
जन्मी बाह्रहजार कानिगढ् फौज जमाई कार्य सिद्धगर्नन् तिमिलाइ मैले कायाप्रवेशविद्या दिन्या यही ज्ञान
रानीलाई पनि भनि पठाउ भनी सिद्ध गया । उप्रान्त लामाका अजित लामाले भिममल्लकन भोट्का
महाकाल स्वरूप देखि बहुतै सन्मान गरी भिक्षा गरी भिक्षा पछि दाज्यू प्रतापमल्ल राजाकन मोहन
चोकमा भंडार राषन निमित्त भनि ५ करोड द्रव्य दी पठाया । फेरी भिममल्ल पाकुमा आफ्ना हातका
पाँच अंगुलाको छाप चिह्न राखि द्रव्यराखि छाड्या । मुलुक सब गर्दैथिया भिममल्ल मन्त्रीले बहुतै राजा-
कोसाभंडारी सहरमा महाजन हरू राखी कोठीहरू ३२ बहलाइ भोटान्तरमा महाजन पठाइ आफु पनि
लासामा जाइ बेपार गराइ सुन् चाँदिका धारा बहाई नेपालमा ल्याइ महाजन हरूमध्येहि मध्ये
अपताली आफ्नोगरी कुटि ग्राम आधा आफ्नुगरी राख्या । यस्तै बेलामा भक्तपुरका मंत्रिका बुद्धिले तमा
काजि भिममल्ल भाइ भनि पठायाको । भोटका राजाभै भोट्यासँग मिलि रजाइ गर्दछन् भनी चुक्ली
गर्दा क्याहो भनी संदेह मानी तीन मानिस पठाउदा नस्तै बेलामा भिममल्ल पनि धेरै द्रव्य लाखपल
हुन् बोकाइ आया भन्या खबर आयो । जब भक्तपुर आइ पुग्दा भीममल्ल लाईभक्तपुरका राजा मंत्रीले
राजाको हुकुम् निको छैन दौलथ यहि राखी जाउ भनि उतातिर भित्रीचिवां खबर प्रतापमल्ल लाई
पठाउदा प्रतापमल्ल रिसाइ मन्मा दगागीया । भिममल्ल जाइ तलेजुको दर्शन गरिराजाका दर्शन गर्दौना
भनि सिंह ढोकाबाट भित्र जाने खिलिकी कपाहिहरूलाइ तिन्ने अघि दुदको गोलपुरो जस्तौकी रगतको
गोलागोल भो भनो भै पिपार्न छुटायाको ले रिसाएाक छन । उनिहरूलाई काट् भनि अह्राइ राषवरू
पोत्रहत्या निमित्त धर्म कीर्ति शिव स्थापना गरी देउला भनि राजा प्रतापमल्लले हुकुम दि राख्याको
रहेछ । भिममल्ल आइ सिंहढोका छिरि त्रिशूल ढबलि पुग्दा दश बाह्र जनाले पक्रिए तर्वारले प्रहारगरि

विवेक नगरी मार्न लाया ।

भीममल्लकी रानी सतीभै स्वैरगत्मा हातको पंजा भिज.ई हातको पंजा ढोकामा छापा मार्दा यमढुंगा ढोकाको सोभ्रो जोगर्ना सिद्धपुरुषको आज्ञा पौषशुक्ल ८ सोमबारका दिन महापराक्रमी १२ राज्यका राजाले अनिमान्याका दुर्जनका वचन सुनेछन् ता तपस्वि जोगि बाहेक पानु कसैलाई नहोस् भनी आर्य्याघाट्भागै प्राण छोड्या । पनी तिन्को लास चितामा मुर्दादे थिएनन् । ती भिममल्लका रानीले पनि काय प्रवेश विद्या सिद्धपुरुषका आज्ञाको चिठि पाउदा सो ज्ञान पूर्ण भयाको थियो र दुवै स्त्रीपुरुष घोडा चढी जानलागेका लाई सिद्ध पलंभले स्थापना गर्‍याका भगवान् महाकाल स्थानमा भीममलका भतिजाले देषि आश्चर्य्यमानी बोलाउनपनि नसकी हेरी मात्र रह्या । उनैहरू दुवै जना वात्‌चित् गर्दै टागन् घोडा चढी बिस्तारै गएका लाइ रानीपोखरी छेउ धेरै मानीसल देख्या । चित् दिनु भन्या मल्लाहको बात् अघी सुनीनुथ्यो पछि काटछन् भनियोथ्यो आजै आइपुग्या भन्या आजै दुवैजना यकै टागन्मा चढि जानछन् क्या आश्चर्य हो भंदै सबैल हेरिकन मात्रै रह्या । देउपाटन्मा पुग्दा प्रतापमल्लको भडान्या ज्ञानेश्वर मास्कीले भेट प्रणामगरी रोयो क्या आश्चर्य हो भनि बिन्ति गर्दा मानिसका हात चिठि पठाइ दियाका छ हामि दुवैका सेवा छ बिन्ति गरि दिनु कागज बमोजिम बुझि लिउन् सबै बात दाज्यै जान्येछन् चित्त ाइ छाडकामिनि जान्छौ भथ्या भनि पनि बिंति गरी दिनु भन। अह्लाइगया रूदै ज्ञानेश्वर फर्की आइ राजासंग बिंति गर्दा मोह भै दोश्रा लस्कर समेत गो गएमा यतैबाट गया मात्रै भन्या । भेटाउन कसैल पाएनन् र फकिकागज बमोजिम् बुझदा सब वृतान्त बुझ राजा प्रतापमल्लले बहुतै पछुतो मान्या । बाबा लक्ष्मी-नृसिंहमल्ल हाय भीममल्ल हाय हाय भनी कान्छा छोरा भनी कांछा छोराका साकल बौलाहा जस्ता भया । ताहापछि भीममल्ल मन्त्रिका नामन यट्खाटोलमा यथाक्रमले शिवस्थापना गरि देवालय बनाइ गुठराखि नित्यार्चन गराया । यिनै राजा प्रतापमल्लले संवत् ७७१ माघ सुदि १५ रोज १ का दिन विश्वरूपका मूर्ति ढालि सुनका जलपसारी लायकुल वहिमा राखिदिया । यहि साल बाबा नृसिंह मल्लले आफ्ना अंतकाल बेलामा मंत्री हरुका पेलले बाबु छोराको चित्त टुट्य को थियो र कस्तैभया पनि यो तुलजा जगाउन्या मूल मन्त्र हाम्रा कुलमा अघि देखि संतति चाल आयाको कुरा छोरा लाइ दि जानुपर्छ भनी छोरालाइ बोलाउन पठाउदा पुत्र प्रताप मल्लले आइ यक दुर्बुद्धिमंत्रि संग बाबाले मलाई बोलाउनु भयाको किन हो भन्दा मंत्रीले भन्या म दिनभरी वहि थिया बोलाउन भयाको होइन तेस छोराकन मार्नपाया हुंदो हो भनि भंनु हुन्थ्यो भनि छोडी विमुख भया । ताहापछि त्यो मंत्रि बाबा चाहि संग गएमा छोरा आयेन की भनि सोधदा छोरालाई अनेक तरह संग बुझाई बिंति गर्दा पनि त्यस बाबुसंग ७ जन्म मा पनि मिल्न नपरोस् भनि भंनु भयो भनि बिंति गर्दा लक्ष्मिनृसिंह मल्लले बहुतै मनमाफिकका गर्‍या यहापछि कलश १ स्थापना गरी कलशमा मन्त्रादि मंत्र स्थापि इनारमा पसालि दिंदा अग्निज्वाला प्र-

काशभै उर्द्धमार्गगरी गै मंत्र लोप भयो । प्रतापमल्लले मनमा विचार गऱ्या यिनै काजि नरदेव मर्यासि-काषेनले ठुलो कुरा उम्काया । अहंकारिभै विवेक नगर्दा बाजाकन वेमर्ज्यादा सँग राषदा आफ्ना कुलदेखि चलि आयाको मंत्र लोप गराया भनी बहुतै पछिनो मान्या ज्ञाहापछि त्यस मंत्रीका वंश नासगरी सबै सहर सहरका आगम षोल्न हेर्दा पनि मंत्र मिलेन यस्ता तरहसंग मंत्रका लागी धेरै आगम षोल्दामा दुइ चार ठाउ हेर्न सकेनन् पाटन मुलछेमा जाइ ताडपत्र खड्ग षोल्दा बहुतै त्रास हुन गयो र भागी फर्कि आया यी राजाले तुलजा जगाउन्या मंत्र पायनन् ता पनि वडो सामर्थवान् थिया । यी राजा बडा ज्ञानि तानि वडोश्रुतिधर विरक्त पनि थिया । निह्लौन देखि २ रानि ल्याइ विवाह गऱ्या । अधि ठकुरी राजाका पालादेखि लोप भयाको लोकेश्वरको जात्रा फेरि रथारोहण गरी देश घुमाइ प्रतिवर्ष रथजात्रा गराया । फेरे देसि पर्देशि पण्डितहरू जंमागरी विद्या सिकि षोडश जातका अक्षर अध्ययन गरि नेपालमा ठुला ठूला देवताहरूका स्तोत्र बनाई शिलापत्र लेषि स्थापना गऱ्या पशुपतिनाथ अगाडि देवताहरूका स्थान-नमा अद्यापि छदैछन् । फेरि नासल चोक नृसिंह नृत्यनाथ तामस गरी सर्वदृष्टि हुन्या लक्षण क्रमले बसाई नासलचोक भनि प्रख्यात गऱ्या । फेरि काष्ठमण्डप संधि एक प्राचीन लिंगाकार भिन्न देवालयका नृत्य-नाथका ध्यान निकासि सुंदर मूर्त्ति बनाइकन आफुले बनायाको कविता श्लोक शिलापत्रमा लेषि कवीन्द्र पुर नाम राषि ठुलो सतल बनाइ महुनासलदेव कहलाइ बसाया ।

फेरि पंचलिङ्गेश्वर भैरव कन अघि लम्बायमान भया लिंग छोपि साना गराय महादेव कन हि-सागर्छ्र् भनि देशि पर्देशि हरूले ठट्टा गऱ्या भनि जलहरि छोपि दिया फेरि भडार षालमा जथा जुक्त मरि बनाइ भुजंग जलशयन नारायण बनाइ राषन सो इच्छाले आदिरुपि नीलकण्ठ जलशयन नारायण स्थानमा जाई बस्नाउदा दाशमूर्ति उठाइ ल्याइ तलाउ बीचमा बसाया ।

॥ ॥ फेरि यिनै नारायण कन उत्तम शक्ति बर्द्धमान निमित्त बुढानीलकण्ठका जल ल्याइ तलाउमा भर्ने इच्छाले आदि जलशयन नारायण कन धेरै बचिगरा बस्नाइ कुलोषनि जल ल्याउदा रानीवन सन्धि पुग्दा कुलो चलेन र महाकष्टपाया । राजाले पनि धेरैकष्टगरी वर्षदिन सम्म तहिं बसि यहि जलसंग मात्र दर्वारमा जाउला जल लैजान नसक्या यो राज्यभोग छाडि जोगीरूप धारी देशान्तर जाउला भनी प्रति-ज्ञा गरा इन्द्रजात्राहरूलान आफु वस्याकै ठाउ भिकाइ नाच कीर्तन गराया । धेरै मानिसकन माटो बो-काइ पुरी चपगौं लगाई चापातलाजोल् भनि प्रख्यात गरी पानि ल्याया । नवरात्री कर्मकादिन जलसंग आफु आइ पोषरीमा पवित्र जल भरी जलशयननारायण कन स्वभाव गराई प्रतिज्ञा पुऱ्याया । यिनै दिनका रात्रि विषे राजाकन स्वप्ना भयो त्यो स्व नामा आजदेषि तमासंतान पर्यन्त राजाहरू ज्ञाहा न आउनु ज्ञाहा आया देषि मरण होला म तहि आया भनि जलशयन नारायण बाट आज्ञा प्रसंन गर्दा भया । विष्णु पृथ्वीपति इन दिनदेषि राजाहरू बुढानीलकंठ जानुभा बोन्दैगयो। फेरी केहि दिन पछि जलशयन रानयण

ल्यायाका स्थासंघि बाटोका पोषरीमा ठुलो एक भयंकर मूर्ति शिलाको घोप्टोपरि रह्याको छ भनि राजाले सुन्या र आफै जाइ धेरै कारिगर लैजाई हेर्छन् त बडो ध्यान संयुक्त भीमभैरव देषि राजा बहुत षुसिभै सबैलाइ सुनाया । हे प्रजाहरू यी भीमभैरव द्वापरयुगमानेपाल सब तलाउभै रह्यामा डुङ्गामावसी जलविहार गर्न्या आदिरूप प्रभूको ध्यानहो भनि उठाइ दर्बारसंघि दिगुतलेका देवालयका अग्रभागमा उत्तरमुख गरि यथाक्रमले विधि पुर्याइ अगाइ स्थापना गर्‍या । इस्थूलकाया भैरव बडो ध्यानले संयुक्त प्रयक्ष भयाका हुन् फेरी विशाल नगरका प्रवीन साकुह्मा भनेका स्थानमा कालीनाग मथन गरी रह्याका ध्यानले संयुक्त भयाको नारायण माटाले छोपि रह्याको गरूडसहित कान्तिपुर लैजाइ सुन्दर चोकमा स्थापना गरि बसाया ।

गरुडले इराजाकन धेरै दुःख दिया र नारायण थाराका नारायण संघिमा यथाक्रमले बसाया । यि राजाका पुत्रहरू दुइरानीका दुइ दुइ पुत्रगरी चारपुत्र भया पुत्रहरूकानाम नृपेन्द्रमल्ल पार्थिवेन्द्रमल्ल महिपतेन्द्रमल्ल चक्रवर्तेन्द्रमल्ल यि पुत्रहरू सहितभै आनन्द गरी रहँदा समय दक्षिणदेशदेषि एक ज्ञानानन्द नाम षोढान्यासि स्वामि आइ पशुपतिनाथमा बस्याकाछन् भनि सुन्यार आफैजाइ स्वामिसित बसि परोक्षा गर्दा पशुपतिनाथका पूजक जोग्य ठहराई पशुपतिनाथका मन्दिर भित्र प्रवेश गराइ दिया । ईस्वामिले राजाकन शास्त्रकोभेद बताउदा राजा खुसिभै पंचायण मंत्रसंख्या क्रमले काञ्चनछत्र बनाइ तदुपरि आफुले बनायाको कविता भुजंग लेषि ल्याइ कन स्वामिलाइ देषाया र स्वामिलेपनि अर्को ताण्डव मंत्र सहित तन्त्र महाकालोक्त आगमार्थ नृत्यलिला प्रसन्नार्थ छत्र माथि लेषि पशुपतिनाथकन अघि नभयाको छत्र रचित गरी चढ़ाया । अघिका पूजाहारिले रूद्राक्षका भया चदुवा बनाइ चढाउदै गर्थ्या फेरि यि स्वामिले पशुपतिनाथ पुसी निमित्त नीलकण्ठका स्नान मेला पाइ पशुपतिनाथकन नीलकण्ठ गमन भावना राषि श्रावणशुक्ल चतुर्दशिका दिनमा राजा बक्साइ पंचगव्यले वेदवाक्य प्रमाण गरी देवालय सर्वत्र साधना गरी सूनले बाधि अलंकार प्रक्षालन गरी सबै भण्डार्‍या कन प्रवेश गरइ नेम क्रिया पुर्याइ श्रीपवित्रारोहन नामले गरी सून रसंख्या प्रमाण धार्नि ७ सेर १ गरि पशुपति नाथकन शास्त्रोक्त प्रमाण गरि चढ़ाया । चतुर्थदिनसम्म कर्मगरी राजाकन पवित्र प्रसाद चढाउनु भनी रीत चलाका । फेरियि स्वामि बडाहुन भनि यिन कन नित्य स्वकर्म गर्ना निमित्त देवपत्तनमा भूतलक्रिया स्थिरासनजपसिद्धि निमित्त घर बनाइ मध्यभागमा उचो आसन बनाई दिया ईस्वामिले तेहि स्थानसंघि सो मंत्र मूल मूर्ति उर्द्धाम्नायनका आवाहन गरी अर्को घर बनाई यथाक्रमले बनाई दिव्यार्चन गरी जाइ पशुपतिनाथका पूजागर्दैथ्या । यि स्वामिसित राजाले सम्मत गरि आफ्ना पुत्रहरूकन राजकुलमा उत्पत्ति हुनाले स्वेच्छापूरणार्थ वर्ष १ राजागरि आफुले गादि छाडि भोग गराया नृपेन्द्रमल्लले गादिमा चढदा पशुपतिनाथ नन्दिमूर्तिकन सुनका कवच बनाइ यथाक्रम नन्दि बसाया ।

तिनपुत्रले तिन ३ वर्ष भोग गर्‍या पछि चौथा पुत्र कान्छा गादिमा बस्दा अहोरात्र राजामै शून्य पदवीमा गया। यो राजाका नामले छाप मोहर बनाउदा स्वामिने त्रिकोण बालास्त्र पाश अंकुश शर चाप राषि लेषि दियाका हुनाले राजा मरण भयापछि यो मोहर प्रसूतीकालमा कष्टहुदा त्यो छाप प्रक्षालन गरी पिलाइ दिया क्षण मात्रमा प्रसूति हुन्या भै गया। यी राजाका अभिमुलक्षण कान्छा पुत्र अभाग हुनाले बडो कल्पना गरी इनका नामले धेरै हरैया खर्च गरी चारै दिशामा गमन गौचर जहाँ सम्मको हो ताहाँ सम्म पठाइ धेरै तीर्थका जल ल्याइ मगाई नागतलाउ नाम राषि मध्ये भागमा स्वेष्ट देवता राषि रानीपोषरी बनाया। यो पोषरीमा नीलकण्ठका जल भरि सबै तीर्थका जल राषि यंत्राकारले बनाइ नाग शंख फणि राषि संवत् ७९० कार्तिक शुक्ल १५ का दिन प्रतिष्ठागरी पुत्रकन उद्धार गराया।

भुवनलक्ष्मी रानीले संपूर्ण गरी पछि रानीपोषरो भनि प्रख्यात गर्‍या। फेरी यि राजाले जामन नाम गर्‍याको कान्तिपुरवासि गुवाहाल सामर्थि ? कोहिथियो ननसिन भेटगरी बौद्धमतका क्रिया प्रवर निमित्त देशमध्ये गरी यथाक्रमले इटंबाहाल केशोचन्द्र महाजनले राजासित मतो गरी बनायाको हो। फेरी सिंभुका चैत्याकार एकै प्रासाद शोभा छैन भनि स्वेच्छाले पार्श्वस्थ युग्म देवालय बनाउँला भन्दा सिंभुका इच्छा भयेन र राजा को। भै छमास सम्म शून्यालय गरि राषि सिंभुकन बज्र सँगमनाइ पार्श्वविषे देवालय कवीन्द्रपुर प्रतापपुर नामगरी गमना गम बनाई मध्यभागमा बडो बज्र कुलिश बनाई स्थापना गरि बौद्धहरूकन जगाया यस्ता वीर राजा हुन्।

फेरि यि राजाले यौवनावस्था पुरुषार्थ स्त्रीभोग लक्षयोनि क्रियापुन्याउन इच्छाले स्त्रीहरूकन बुझाइ मनोमान संग क्रिडा गर्दा तिन हजार ३००० सम्म पुग्दा एक बालास्त्रीसंग भोग गर्दा स्त्री मरण भै गईनुर राजाकन ठुलो पाप भयो भनी पशुपतिनाथ जाई मास तिन ३ उमि कोटिलिंग स्थापना गरी बिचमा बाहुला देवालय बनाइ कोट्याहुति यज्ञगरी अघिका बिग्याको गजुर बनाइ पशुपतिनाथकन चढाया। सबै द्रव्यको तुलादान गरी श्रीपशुपति नाथका दक्षिण दर्वाजामा शिलाको तुला षम्ब ४ खडा गरी मब परी बारका मूर्त्ति बनाइ सालिक स्थापना गरी चतुर्थिकर्म गर्दा ग्रामका उत्तर पट्टि धेरै गौचर संकल्प गरी भूदानषेत कहाया। फेरी इन राजाले पशुपतिनाथ प्रारंभ कांतिपुर पर्यंत लिंगाकारले देवालय बनाई शिव स्थापना गरी देव पाद एकका प्रमाण राषि बनाइ स्थापना गर्‍या। फेरि यकै पताकाले श्रीपशुपतिनाथका गजुर देषि बाँधि लें जाइ मोहन चोकका देवता सम्म ल्याइ बाँधिकन पशुपतिनाथकन पताका चढाया। यति धर्म नीति गरी पाप छुटाया। फेरी इन राजाका पालामा चोबारका नामले बागमती बढाइ पशुपतिनाथमा आर्यतीर्थको जल षुलि पशुपतिनाथका निर्माल्य जान्या जलद्वार बाट भित्र जाइ अनेक द्रव्यहरू सबै त्यागगरी कवचमा जडी राष्याको शुद्ध एकमुषि रुद्राक्ष चोरि लै जान नसार गर्दा श्रीवासुकी नागराजाले चाल पाया र अगाध जलमा फाल हालि नाग समाती मारी रुद्राक्ष ल्याइ जल

हृरिमा राषि गया । यो रुद्राक्ष कस्तो भन्या परापूर्व मोहनसि महाजनले नाथका कवच बनाउदा एक संन्यासि रूप जोगी आइ श्रीपशुपतिनाथका दक्षिण मुषमा चढाउ भनि दि गयाको हो। एहि रुद्राक्ष नागले चोरि लै जादा सबैजना जाई हेरि रहंदा जलवगी गया पछि राजराजेश्वरी मंधिमा ठुलो नाग एक मरि रह्याको देष्या र राजा छेउ षवर पुर्‍याउदा राजा प्रतापमल्ल गुरु सहित भै आइ हेर्‍या । यहाँ पछि लम्बकर्ण भट्टले शास्त्रोक्त प्रमाण संग नागका गमन सर्वदा बंध गरी वासुकि कन जगाई अघिका देवालयमा जीर्णोद्धार गरी गजुर बनाइ चढाइ दिया फेरि एक बाजा रात्रि ४ प्रहरमा बजाउनु भनि धं पाट नाम गुठ राषि नित्य भजन गराया । यसै दिनदेषि नागको भय वासुकिका कृपाले निवारण भै गयो ॥ ॥ श्री गुह्येश्वरीका स्थान अघि शंकरदेव राजाका पालामा नृसिंह नाम गर्‍याका महापुरुष कन स्वप्नमा दर्शन दी मलाई प्रकाश गर भनि आज्ञा प्रसन्न हुदा कुण्ड बनाइ स्थान सुन्दर गरी बनाई राख्याको स्थान नाशि बिग्रन जादा राजा प्रतापमल्लले गुरु लम्बकर्ण भट्ट संग सम्मत गरी संवत् ७७४ वैशाख शुक्ल ११ रोज ५ का दिन श्रीगुह्येश्वरी कुण्डमा बडो यत्न संग फलामका दलिन लगाइ चारैतीर पर्षाल बनाई ढुगाले छापि इश्वरीका जल ज्वाला ढाकी अष्टदल पत्र यंत्राकार भैरव सहित गरी कुण्ड सुन्दर गरी बनाइ फटिकका कलशाकार बनाई नित्य नैमित्तिक पूजा गराया ।

आवर्ण देवता सब यथाक्रमले स्थापना गरी षम्बामा सिंह सालक राषि दिया । संवत् ७७५ मा श्रीतुलजा भवानीका देवालय तला तलाको छाना सुवर्णको बनाया । चारै ढोका पट्टि सुवर्ण सिंह बनाइ चारैतिर आफना मूर्ति र परिवारका मूर्ति बनाई षम्बा षडा गरी शालिक राष्या । एक षम्बामा सुवर्णाकार सिंह बनाई राष्या फेरि सब देवता कन आवाहन गरी कोट्याहुति यज्ञ तिन फेरा सम्म गर्‍या। याहाँ पछि यिन राजाले जामन नाम गर्‍याका गुबाहाल साथगरी जापा इनार नाम कूप बौद्धमार्गका शास्त्र प्रमाण यथा बिधिले बनाया । यो इनार वर्षा शून्य हुदा मात्र चलाउनु अघि पछि कैले पनि नहेर्नु भनी सिद्ध कूप बनायाको हो । श्रीगुह्येश्वरीका स्थानमा तेली खड्ग षोला गरी राषि दिया । फेरी लम्बकर्ण भट्ट प्रतापमल्ल जामन नाम गुबाहाल् यी तिन जना सहितभै अनेक पीठमा जाइ नानातरहको तमासा गरी सुख बिहार गरी रह्याया थिया । एक दिन फीर्न जादा रातका समय अबेर भयो र डाकिनीहरू धेरै पीठ विषे सेवागर्न गयाका रह्याछन् र लम्बकर्ण भट्टले अजित घण्टाकर्ण वतु देशीहो भन्या र राजाले सबै डाकिनीहरूकन फजित गरुला भनी पंचसूत्रले सहर घुमाई बाधि दिगबंधन देश अगम डाकिनी मंत्र नाश कर्म गरी राषि तिनैजना फर्कि दर्बारमा आया भोलि पल्टबिहान हेर्न जाँछन् त डाकीनीहरुसबैदेश भित्र आउनु नसकी चारै दिशामा बसि मुख मात्र ढाकरह्याका थिया । राजाले मुष उघारी हेर्दा आफना सुहृद काजिका स्त्री र अरू अनेक जातका छोटा बडाका स्त्रीहरू धेरै डाकिनी मंत्र सेवन गर्‍याहरू देषि असंष्य कर्म हो भनि चाडै पंचसूत्रभिकि दिया र डाकिनीहरूसबै उठी सहर भित्र पसि आफना घर गया । फेरी एक दिन फिर्न जादा ललितपत्तनमा एक घर भित्र धेरै बौद्धमार्गिहरू जम्माभै चर्चा गाई रहदा राजाले आहा

तमासा गर्छँ हैं भनि घरमा मत्र गर्दा घर भित्रकाधाडाहरू सबै रोया । फेरी क्षणमात्रमा अति अघोर शब्द गरीहाँस्या फेरि कराल शब्द गरी रोया । यस्ता तरह ७ंग दुइ घडि सम्म तमासा गरी कान्तिपुर फर्किआया फेरि ललित पत्तनमा कोट्याहुति यज्ञ गर्दा यी राजाले सर्पको स्वरूप धारी हेर्न जादा सिद्धिनृसिंह मल्ल राजाका प्रोहित विश्वनाथ उपाध्या यज्ञमा होता भयाकाले यो सर्प्प विघ्न गर्न आउन्या हो भनि मंत्रका बलले आसन गरी पूर्णाहुति गर्न तयार गरी रहदा जानन नाम गुवाडालने थाहापाई गरूड भैजाईरह्याका राजाकन ल्याई बचाया । फेरि नेपालमा गणेशहरू तीन बडा प्रत्यक्षका हुन् भनि जगाया कान्तिपुरका लगा भर्को सिद्धिदाता चावहिलका श्वेतविनायक ललितपत्तनका लगा भर्को, चोंबहारका चन्द्रविनायक भक्तपुरका लगा भर्को सूर्य्यविनायक यति तिन सहरका मूल गणेश हुन् भनि जगाया ।

फेरि इन राजाले श्रीभीमसेनका दुई मूर्त्ति कन बुझाई यथाक्रमले बाटामा पादुका पिछे हंसवलि टोल पिछे छागवलि दोबाटा पिछे महिषबलि दे कन दरबार मोहन चोक सम्म ल्याइ द्रौपदीका मूर्त्ति बनाइ जीवन्यास गरीकन कलशमा व्यासमुनि आवाहन गरी ठूलो यज्ञ गरी भीमसेन कन द्रौपदी व्यासमुनिले कन्यादान दिलायाको भावगरी अघिका दुइ भीमसेनका मध्यभागमा यथाक्रमले विराजमान गराई राखि अघि गमन गरि लै जादा भै बलि पूजा गरि स्वस्थानमा लै जाई विराजमान गराया । यिन दिन देखि द्रौपदी मध्यभागमा यथाक्रमले विराजमान गराउदा युग्म भीमसेनका उपद्रव शांत भै गयो ।

अघि ठकुरी राजाका पालामा दोलखा भीमेश्वर मनुष्य रूप भैं आइ उन्का घरमा रहदा भीमसेन भनी ठहराई बहुतै प्रार्थना गरि बुझाइ मूर्त्तिमान बनाई भीमसेन कन प्रवेश गराई एकतामस् मूर्त्ति एक शान्तमूर्त्ति गरि विराजमान गराई स्थापना गर्‍याको हो । अघि गंगा रानीका पाला देखि सति जान्या स्त्रिहरूकन सिंदूर सुपारी दिन्या रीत चलायाको थियो । यिन राजाले अतरस् थान् १ रूपैया १ भेटि दिन्या मर्य्यादा कान्तिपुरका लगाभरमा चलाई दिया ।

फेरि यिन राजाले श्रीपशुपतिनाथका देवालय भित्र अघिको तामाको बसाहा पुरानु भयो भनि चाँदिका ढलवट् गरि बसाहा बनाइ जीवन्यास गरि स्थापना गरि दिया । केहि दिन पछि बसाहाले देवपत्तनका लगामा रात्रिविषे प्रजाहरूका बालो खाइ नाश गर्‍या र यो बसाहाको उपद्रव हो भनि ठहराई भंडारमाथि राखि दिया फेरी तामाको बसाहा राखि दिया ।

अनि पश्चात्पूर्वमा वीरविक्रमादित्य राजाको पालामा श्रीउग्रतारा नीलसरस्वती प्रसन्नभै राजालाई आज्ञागरी मेरा एक नाटक प्रख्यात गर भनि आज्ञा हुंदा मैले कस्ता तरह संग गर्न्या हो भनि विंति गर्दा यस नाटक को पद्धति हरसिद्धि प्रख्यात भयाको ऐश्वर्य्य आयुर्दा कारि यहि विधान मैले भन्याका पुण्य प्रमाण मेरा गुरु महेश्वर ठाकुर बुद्धिसेन मंत्री बसि सम्मत गरी लंकाविधान यस प्रबंध बानेश्वरका पूर्वस्थापित गरि कन यो नाटक बनाउनु पर्दछ भनि ईश्वरी बाट आज्ञा प्रसन्न हुदा वीरविक्रमादित्य राजाले

हरिसिद्धि पुराण प्रमाण त्रिशक्ति देवी मुष्प गरि सूत्रवीरले नागेन्द्र लाइ वधगराई पुराण प्रमाण माथि आफ्नु यश प्रख्यात निमित्त तिन तला छत्र शिरमा राषि आफना नामले मकुंडो बनाई चौदिगका राजा कन जित्याको भावगरी चार राजा र सिद्ध मंत्रिका मुष बनाई आदि नृत्यविधान बनाया ।

विक्रम संवत् फिराइ सक्यापछि ३ वर्ष उप्रान्त वानेश्वरका स्थान छोडी ठैव देश विशाल नगरका अंतमा यिनै इश्वरी प्रवेश भयौ फुत्वोक ग्राममधि विक्रम संवत् ७४५ पर्यन्त वास हुन्या थाहापाई विश्वशर्मा भै नृत्य ली रह्याको थियो । यो नाटक को प्रभाव सुष ऐश्वर्य्य पृथ्वी वृद्धि राज्याभिमान राज्यलक्ष्मी वासहुन्या यस्तो थाहापाई पछि विश्वशर्मा नाम ब्राह्मणले इश्वरीकन प्रसन्न गरी चौवन्नपट् प्रमाण गरी नृत्यलीला गराउनु पर्न्या रीत चलाइ प्रख्यात गर्‍या ।

श्रीज्योतिस्वरूप पशुपतेश्वर भीमेश्वर ज्ञानेश्वर यी तीन महादेव बाट हरिसिद्धि नाटक दृष्टिगर्न इच्छा गर्‍याका भाव गरी भेटि चढाई नाटक पर्य्याय चलाया । विक्रम संवत् १००३ बर्षसम्म यो पर्य्याय चलि रह्याको थियो । त्यहाँ उप्रान्त लोप भै रहदा शेषांतरमा ललितपत्तनका ज्यापुहरू फुलचोक वनमा काठ लिन जादा काठ ली फर्कि आउदा अधिका स्थानमा एक चौर थियो । सोहि चौरमा दाउर वो भारी बिसाई च्यूरा षाई बसि रहदा इश्वरी प्रसन्न भै तिनि हरूका शरीरमा प्राप्त भया र ज्यापुहरू आफु आफै दाउराका कच्याट् ह्रातले ली युद्ध भाव गरी नाची रह्या । यस्ता तरहको आश्चर्य अद्भुत समाचार सुनी तीन सहरका राजाहरू मिलि ज्ञानि पंडित तान्त्रीक जमागरी विचार गराउदा ललित पत्तनका गर्भदत्त ब्राह्मण तांत्रिक कन बोलाइ यो अद्भुत प्रेत पिचाश प्राप्त भै भयाकोहोइन साक्षात् हरिसिद्ध भवानी प्रख्यात भएकी हुन् भन्यो ठहराइ मानिता गर्दा ईश्वरी बाट आज्ञागर्‍या । मलाइ गुप्तगरि नराष मलाइ भीमेश्वरको स्थान जानको इच्छा भयो भनी आज्ञा हुदा यो कुरो माफ गराई ईश्वरीकन प्रार्थना गरी थाम्या । याहाँ पछि ईश्वरीबाट मेरा नृत्य लीला विधानको पुस्तक ली मलाई विधि पुर्‍याइ प्रख्यात गर्नु भनी आज्ञा हुदा सोहि पुस्तक पाइ हरिसिद्धि नाम गरी अधिका चलन प्रमाण बाह्रवर्षमा उत्सव पूजा गरी मूल श्रीकलश बिराजमान गराई २६ गण देव देवीका मुख मकुट बनाई प्रकट गरी यज्ञ यागादि पूजा विधि पूर्वक पुर्‍याई नृत्यलीला गराया । यति सक्या उप्रान्त भीमेश्वरका स्थानमा जानपर्न्याप्रबंध चौवन्न पट् नृत्य लीला गराउनु पर्न्या पर्याय बनाइ राष्याको थियो । यहि नाचकन कान्तिपुरका सूर्यवंशी अमरमल्ल राजाले जगाया थ्या ।

यहि नाच कन राजा प्रतापमल्लले ललितपत्तनका राजा संग संमत गरी हरिसिद्धि देविका नृत्य विधान ललितपत्तनका गावाहालका ब्राह्मणलाई भारा दी नाचमा चाहिदो कर्म गर्न अधिकार गरि यथास्थित गरी देवीका नाच कन जगाया । यि राजाले बहुतै धर्मकीर्ति यश बढाई अनेक तरहका सुखभोग गरी रह्याका थिया । पछि बाह्रवर्षका हरिसिद्ध नाचका मेला आई दर्बारमा नृत्यलिला भै रह्याका

बेलामा राति विषये पोसाक बदली तमासा हेर्नाको इच्छागरी एक्लै जादा हिटि चोकका डवलिमा श्रीहरिसिद्धि त्रिमूर्ति अतिसुन्दरी मनुष्यरूपधारि विराजमान गरी रह्याका देवीकन राजाले देष्या र सुन्दरी स्त्री हुन् भनी ठानी जाई हस्त क्रिया गर्न तयार हुदा तेस बेलामा देवी कोप भै राजाकन आज्ञा गर्‍या । हे राजा तिमि अति छिनारी कर्म गर्दा रह्याछौ विवेक विचार केहि रहेन छ अव तम्रा राज्य-भोग यतिकै मात्र हो देवी कोप भै अन्तर्ध्यान भै गया । त्यसबेला यो राजा अचेष्टा भैं पृथ्वीमा लोट्या र कोहि बाटामा जान्याहरूले देषि उठाई दर्वार भित्र लेगया । पछि २ घडि सम्म बाचो सम्वत् ७९४ चैत्र शुक्ल ११ पर द्वादशि सोमवारका दिन २४ घडि रात जादा बडा प्रतापि शास्त्रमा प्रविण कवि भयाका धेरैं धर्म कीर्ति यज्ञ प्रष्यात भयाका एस्ता राजा प्रतापमल्ल परलोक भया । यिनका संसर्ग गरी रानी प्रभृति स्त्री ९ जना सति गया ।

अस्यपुत्र नृपेन्द्रमल्ल वर्ष १३ संवत् ७९४ आषाढ़ सुदि षष्ट सोमवारका दिन ललितपत्तनका श्रीनिवासमल्ल भक्तपुरका जितामित्रमल्ल कांतिपुर आई प्रतापमल्लका ज्येष्ठ पुत्र नृपेन्द्रमल्लकन राज्या-भिषेक दिया ।

यी राजाले मेरा पिताकन विसर्जन गर्‍या भनी हरिसिद्धिका नाचनव मेरा संतान भरकान्तिपुरमा न ल्याउनु भनी मनाहि गरी कान्तिपुरको साटो देवपत्तनमा नचाउन्या रीत चलाया । फेरी यी राजाका पालामा सिष्वाल् प्रधान भन्याका काजि थिया तसले राजा ववसाइ पशुपतिनाथका चारै दर्वाजामा सु-नका षम्बा तोरण चढ़ाया । फेरि महास्नान पंचविंशति प्रस्थले गुठिराषि कार्त्तिक शुक्ल पूर्णिमाका दिन प्रति वर्ष चलाया । फेरी यी राजाका पालामा अघि पशुपतिनाथका पूजक स्वामि आफना स्वइच्छाले नेपाल छाडि विदा भै गया । फेरी यी पछि कोहि एक विमलानन्द नाम षोढ़ान्यासि स्वामि आई टंकेश्वर मा आसन गरी वस्याका छन् भंन्या षवर राजाले सुनि भेट गर्न गया शास्त्रार्थ गरी पशुपतिनाथका पू-जक ठहराई पशुपतिनाथकन अर्पण कारि गरि दिया । देवपत्तनका लगाम लिंदा असिनाको भय हुंथ्यो यी स्वामि सित सम्मत गरी असिना निवारण निमित्त यथाक्रमले पशुपतिनाथका पश्चिम दिशामा श्री दक्षिणामूर्त्ति ऋषि आवाहन गरी स्थापना गराया । आगम मूर्ति भनि चलाई गुठि राषि असिना निवारण गराया । फेरी यी राजाले देवपत्तनमा तिनाषाल भन्याका थानमा ईट् झिगटि धेरै पारी पोलि यथाक्रमले वोकि लै जादा बेलामा राजाले आफै पनी वोकि लै जान लागेका देखी सबै जात प्रजाहरू आइ धर्म निमित्त अहोरात्रमा वसारि दिया । पशुपतिनाथका देवालयमा गंगारानिका पालादेषि वनाई राष्याका विग्र्याको भुवनेश्वरी देवालय रानी सहित भै यथाक्रमले बनाई वसाया ।

फेरि यि राजाका पालामा तिह्लौतिया ब्राह्मण धर्माइ झाले चाँगुनारायण मा भोज षुवाउनु जादा गोत्र हत्या गर्‍यो र तिन्को सर्वस्व सर्कार दाषिल् भयो र राजाले ब्रह्मस्व षानु छैन भनी धन जमा गर्दा

तीनलाष १००००० भयो र यैहि धन षर्च गरि ठुला शिलाका भैरवका अग्रभागमा ठुलो लिंगाकार ढुंगा को देवालय बनाइ अष्टधातु भाग संयुक्त गरी भुवनलक्ष्मी रानीका नामले भुवनेश्वर नाम शिवमूर्त्ति स्था - पना गरी धेरै षेत गुठि राखी नित्यार्चन गराया । फेरि यहि धनले सिभुका लिंग जीर्ण भयो भनि नया सालवृक्ष ल्याइ लिङ्ग षड़ा गरी शिलाका भगवानका पाँचै मूर्त्ति देवालय देषि पश्चिम दिशामा सारी सुन का पाचै मूर्ति बनाइ स्थापना गरि दिया । फेरि यिनै धनले पशुपति नाथका पुजा हारि स्वामि सित मतोगरी शिवार्चन चण्डिका शास्त्र प्रमाण गरि पशुपतिनाथमा वर्षबंधन अस्पर्श अगमागमन वस्तु अर्जित पापक्षय निमित्त कैलास कुसुमारोहण नाम गरी प्रतिवर्ष चलाया । यस्तै धेरै गुठि राषि दिया यति ।गर्दा पनि धन धेरै वाकि रहंदा बज्रयोगिनी चाँगुनारायणका देवालय अधिका पुरानु भयो भनी जीर्ण उद्धार गरी दिया । फेरी जयवागेश्वरीका देवालय २ पत्र यंत्राकार गरी बनाया । यति गरी बाकी धन शेष सबै भोका प्यासा अभ्यागत हरूकन भोजन गराई धन समाप्त गर्‍या। यो राजा का पालामा अकस्मात एक दीन का रात्रिमा जयवागेश्वरीमा चोर पसि सबै गहना चोरि ढोकामा राषि बाहीर आइ पाटिमावस्न गयो। ताहाँ बाट चोर उठन न सकि रह्यो र सबै चिताइ दारहरूले हाहाकार गरी षोज गरी रहेका बेलामा यो राजा जाई हेर्न जादा त्यो चोर कक्की उठन बोलन नसकी रह्याको देषी । देविका गहना यथा स्थितै थियो चोर मारि गहना देविकन लाइ दिया ।

यी राजाका भाई पार्थिवेन्द्र मल्ल पितृपक्षका अमावास्याका दिन मरण भया र ब्राह्मण द्वारा कान्तिपुरमा दशमि कर्म चलाया । फेरि यी राजाका पालामा सवाजयसि रायले काशिमा अश्वमेध यज्ञ गर्दा सबै मुलुक संग कर ली कन रहेको वेलामा यी राजाले खबर सुन्या र हामिले पनि त्यो अश्वमेध यज्ञका पुण्यमा भाग लिन्या हो भनी लडायी नगरी यज्ञमा चाहिन्या वस्तु नेपालका चिजबीज सौगात दी पठाई सवा जय सराय राजाकन खुसि गराया ।

फेरि यी राजाका पालामा श्रीगुह्येश्वरीका भक्त कान्तिपुर नह्लेबाहालका समन्तभद्र नाम गर्‍याको कोहि एक गुवाहाल थियो । नेपालमा आफनु गुण सिद्धि केहि प्रख्यात नगरी रहेका थिया यिनको र टुप्पा लामा को लगि पर्न जादा टुप्पा आइ लाग्दा गुवाहाल परेवा भै भाग्दा चील भै टुप्पाले लगार्दा गुवाहाल शिषापाकु भित्र लुक्यो । यहा पछि टुप्पा लामाले ठुलो स्वरूप धारि तेस पाकु माथि वसि उफ्रि २ मिचन लाग्यो र उसै वषतमा समन्तभद्रले श्रीगुह्येश्वरीकन आराधना गरी मलाई रक्षागर भनि पु- कार्दा गुह्येश्वरी प्रसन्न भै दर्शन दिंदा समन्तभद्रले साहाय पाइ मंत्र प्रयोग गरी टुप्पा लामा लाइ मार्‍या अद्यापि गुह्येश्वरी प्रकट भयाको ठाउमा केहि आकार बनाई स्थापना गर्‍याका छन्। यो कुरो गुप्तै थियो । यहाँ पछि गरीब भै लासामा गयाको थियो । वहाँ रहदा बस्दा एकदिन कोठिवाल महाजन हरूले यस गुवाहालकन रुपैया दि सुनिनका घर पठाया उस सुनिनका भोट्यानिले चाडै नदि विलम्ब गर्दा भ-

गडा भयो र वांडा रिसाइ फर्क्या पछिबाट भोट्यानीले आफना घ्यांपामा जाड् हेर्दा सव रक्त भै रह्याको देषि वहुतै मनमा फिक्का गरी तेस गुवाहाल कनषोजन आयी। तेस गुवाल लाई पाई घरलगी वहुतै प्रार्थना गरी रक्त भएको जाड सव जस्ताको तस्तो गराइदिदा एक घ्यांपाभरि जाड वोको गुवहालको घरसम्म पुऱ्याउन आयी। उस्तो करामत यस गुवहालको देखि मानिसहरूले मानिता गरी पोसाक वदलिदिया। यस्तै समय लासामा यै गुवहालको घरपट्टिको छोरा लक्षणी थियो। गुवहाको खवर लिन टुप्पा भन्याको लामाले मनसुबा गरी मन्त्र प्रयोग गरी वेरामी गर्दा यस गुवहालले थाह पाई आराम गरिदिदा यसै कुरामा मार्न खोज्न्या दुवै जनाको तकरार भई गुदेलमाथि रिसाई आई लासाका मुख्य लामाले यस समय ठूलो तुषार वृष्टि हुन्या योग छ। यस्तो तरहको धर्म गऱ्या मात्र प्रजाको रक्षा होला भनी शहरमा डुकुडुकी फिराया। यही कुरो वत्तिश कोठी का महाजनहरूलें सुनी त्यस गुवाल सँग यसमा कोही युक्ति उपकार गर्नाको तिम्रो सामर्थ्य छ कि भनी सोद्धा यस कुराको भय निवारणको जुक्ति म गरौंला भन्दा कुरा शहरमा फैलिन गै लासाका लामासँग खवर पुग्यो र लामाले वोलाई वात चित गर्दा म गरौंला भनि प्रतिज्ञा गऱ्यो। जुन दिन तुषार वृष्टि होला भन्याको थियो यस दिन यस गुवाहालले पहाडमाथि जाई मन्त्र प्रयोग गर्दा सो मन्त्रका प्रभावले सव तुषारवृष्टि सोहीपहाडमाथि पर्न गयो। एक दुई दिन संम तुषार वृष्टि भया उप्रान्त त्यस पहाडवाट लासा आयो सव दुनियाले तमासा हेर्न गयाका थिया। तहाँ पछि यस गुवहाललाई वहुतै मान्नीता गरी लामाले प्रीति गरी आफना साथ राख्या। यस्तै समय एक दिन चिया खादा यस गुवहालले चिया नखाई कचोरा लिई चिया सबै छरिदियो र लामाले मैले दिएको चिया ष्यान नखाई छऱ्यौ भन्दा त्यस गुवहालले भन्यो अरूथोक केही कारणले होइन कान्तिपुरको मेरा घरमा अग्नि प्रवेश भयोर आगो निभायाको हो भन्दा लामाले उसै घडी चिठी लेखी फलाना दिन यस वखतमा यस गुवहालको घरमा अग्नि प्रवेश भयाको होकि भनी वुझ्न मानिस पठाया त्यस पछि यसै लामाले त्यस गुवहालसंग तमो सामर्थ्य ठूलो छ कि मेरो सामर्थ्य ठूलो छ यस्को परीक्षा गरौं गनी दुवैले पक्षीको स्वरूप धारी उड्या गुवहालका वरावर लामा आकाशिन सकेन। फेरि फट्याङ्ग्राको स्वरूप धारी खेतमा जाई गहुँका वालाको टुप्पामा अडिदा गुवहाल वस्याको गहुँ कोवोट ठाडै रह्यो लामा वस्याको गहुँको वाला निहुऱ्यो। पछि फेरि हामी दुवै जना अरूकै गहुको वांटमा प्रवेश गरे फलाना वोटमाछ भनी ठहराउन भनी लामा अलप भयो र गुवहालले यो गहुंको वालाको यसै ठाउंमा तम्रो जीउ रह्याको छ भनी टहराया। त्यस पछि गुवहाल लुकदा वल्ल वल्ल गहुको वोटमात्र ठहराउन सक्यो यसै ठाउमा छ भनी ठहराउन सकेन। त्यहाँ पछी दुवैलै आफनु स्वरूप धारी तिमी धन्य म भंदा पनि वडो पुरूषार्थी रह्याछौं भनी लामाले गुवहाललाई आफना घरमा सङ्गै ल्याई राख्या। थोरै दिन रह्या उप्रान्य गुवहालले नेपाल आउनु निर्मित्त विदा माग्दा लामाले विदा दिएन। यस गुव-

हाललाई नेपाल जान दिन्याछैन भनी पहरा चौकी राखी छाड्या । यस गुवहालको भने एक मूर्ति लामा-ले बसायाको ठाउँ बसी दोश्रा मूर्ति शहरमा पनि थियो । लामाले भन्या घटमा यस गुवहाललाई तारि नदिनु भनि राख्याको हुनाले केहीदिन अरू रहे पछि यस गुवहालले नेपाल आउनुको मन सूवागरी अनेक तरहसँग विदा माग्दा पनि विदा नदिंदा एक दिन त्यसै आउनुको इच्छाले घाटमा आउँदा घाटवालाले लामाको चिह्न नभै तारि दिन्या छैन, तिमि जान्या भया आफै जाउँ भन्दा त्यस वाडाले वचन पाई एक रुमाल नदीमाथि बिछाई उसमाथि बसी नदीमा हेलि आयो । घाटवाला हरुले पछि लागि लामाले भन्या को यिनै मानिस रह्याछन् भनी आउँदा भेट्टाउन सकेनन् । यो कुरा लामाले थाहा पाई नेपालमा चाँडै आई समस्त गुवहाल नपुग्दै घरपुगि २।४ भारी आलमाल बोकी जपमाला पुस्तक हरू चिह्न देखाई तमा बाबा मन्या भनी गति चिता संस्कार गरायो, यहाँ पछि गुवहाल आई चिता संस्कार गन्याको सकाचार सुनी लामाले छवी मराई अनर्थ गन्या वर पस्न भएन भनी भोट फर्की बहाल बनाई बाहलैमा शरीर त्याग गरी गुप्तै रह्या ।

फेरी यी राजाका पालामा लम्बनाभ्का भन्याका ब्राह्मणले गुह्येश्वरीकाकवच यन्त्राकार बनाउँदा रा-जा बक्साई राजा समेत भै ईश्वरीकन चढाया । वर्ष प्रति त्रास्रा चतुर्दशीका दिन अद्यापि सो कवच देवी कन पहिराउ छन् । यी राजा बहुतै ज्ञानी देवी माथि अनि भक्ति मान् थिया । यस्तायी कान्तिपुरका राजा नृपेन्द्रमल्ल नेपाली संवत् ८०७ आषाढ़ शुक्ल तृतीया शनिश्चर बारका दिन परलोक भया । रानी आदि २४ स्त्री सती गया ।

अस्य पुत्र भूपालेन्द्र मल्ल भोगवर्ष १४ यिन राजाका पालामा विमलानन्द नाम षोडा न्यासी स्वामी श्री पशुपतिनाथका पूजाहारी थिया । यही समय राघवानन्द नाम षोड़ान्यासी स्वामी दक्षिण देशबाट आई श्रीपशुपति नाथको दर्शन गर्न आउँदा अघिका स्वामी विमलानन्दले राजा बक्साई राघवानन्दकन पूजा हारी गरी आफु बिदाभै काशी जाई उद्धार भै गया । यि राघवानन्द स्वामीले राजा बक्साई अघि नभया को दमनारोहण भनि नेपाल रक्षाको निमित्त पशुपति नाथमा कर्म चलाया ।

फेरि यी स्वामीले यन्त्रमतले मठ बनाई पाताल गङ्गा साधना गरी आफुले नित्य स्नान गरी लोक जन सबैले धन्य कहाइ पशुपतिनाथका नित्य सेवा गर्दै थिया । फेरि यी स्वामीले अघिका पवित्रारोहण पनि जगाइ दिया । स्वामी बस्याका घरमा पवित्र बनाई वर्ष प्रति चढ़ाउदै थिया पछि यी स्वामीले आ-फुले बनायाको मठ भित्र बनाउने रीत गरी चलाया । पवित्रारोहण दमनारोहणका खर्च स्वामी खायल द्रव्यबाट चलाउनु भनी चलाया ।

फेरि यी स्वामीले श्रीखराउ चन्दनमा यन्त्र लेखी बडो गुप्त गरी नित्य जाई पशुपतिनाथका ईशान मा राखी नित्य आवर्ण विधिले पूजागरी राजा प्रजा सबैले धन्य कहाई कर्म चलाई रह्याका थिया ।

यस्तै समयमा कोही एक कान्तिपुरको चिलिको नेवार नामले नित्य देश उत्तर भागमा लुकी इन्द्रायणी पीठमा रात्री सेवा गर्न जाँदा एक दिन पीठ विषे नेपालेश्वरी वछला देवी आइ बसदा वछला देवीका गणले सन्मान गर्‍याको देखी आई स्वामी संङ्ग सबै कथा कहँदा स्वामीले नेवारको मनसुवा जानी राजा बकसाई प्रेत चतुर्दशीका दिन युगादिदेखि नाना पूजागरी राख्याको नेपालेश्वरी वछलापीठकन खुशी गराई आमावास्याका दिन प्रधानहरूका यात्रा प्रति पदाको दिन स्वामी आफै आई पशुपति नायकन रात्रि भर जगाई ईश्वर कुतुहल लीला गराई धार्नी ७ सेर १ सिंदूर छरी प्रतिवर्ष थरयात्रा गराया। फेरि यी स्वामीले राजा बुझाई नेवार चिलि नाम प्रधान ले धेरै द्रब्य षर्च गर्‍यो भनी देवपत्तामप्रधान गराइ दिया।

अब बाबा नृपेन्द्र मल्लका पालामा भाइ महीपतीन्द्रमल्ललाई मन्त्रीका खेलले बन्धनमा राख्याका थिया संवत् ८०६ सालमा महीपतीन्द्र मल्ल भागी ललित पत्तनमा गया। नृपेन्द्र मल्ल राजाले तिमी सङ्ग सलुक गरी मिल्दछु। मेरा भाईकन सौं पीपठाउँभन्दा ललितपत्तका राजाले लौ भन्ने उत्तर पठाई शरण आउन्याकन मरण गर्न्या छैन भना महीपतीन्द्रमल्लकन आफ्ना राजकुलका चिस्धा चोकमा राख्या आफु भोलिपल्ट सबेरै कान्तिपुर आया। ललित पत्तनका राजा श्रीनिबास मल्लले आफ्ना छोरा योगनरेन्द्र मल्ललाई महीपतीन्द्र मल्ल साथ ली आउनु भनी पठाउंदा योगनरेन्द्रमल्लले ईश्वरदास प्रभृति परमानहरूलाई चौकी राखी आफु टेकु दोभानमागै सत्य बाचा गर्‍या। यसदिनका रात्रीमा पोस्तिक किसि भन्याका प्रधान प्रभृति मानिस पठाई भाईकन लिन पठाउँदा पोस्तिक किसि नाम प्रमाणले ईश्वर दास काजीलाई नृपेन्द्र मल्ल राजाका आज्ञाले महीपतीन्द्र मल्लकन लिन आया भनी भन्दा ईश्वरदास काजीले योगनरेन्द्र मल्लका चिह्न नआउन्ज्याल सौंपिदिन्या छैन सेवा. आशीर्वाद दिन्छु भंछौं भन्या आउ भन्दा पोस्तिक किसि वहुतै रिसाई कान्तिपुर फर्क्या। योगनरेन्द्र मल्ल कान्तिपुर बाट फर्कदा भेट भयोर पोस्तिक किसि आदि प्रधानहरूले घोडाको वाग समाई कान्तिपुर फर्कनु होस भनी जिद्दी गरी भन्या। तै पनि योगनरेन्द्रमल्लले वचन नसुनी ललितपत्तन फर्क्या। भोलिपल्ट चौकीरह्याका परमानहरू आफ्ना घरगयाको बेलामा फेरीकान्तिपुरका राजाका मानिष खसमगरहरू आई महीपतीन्द्र मल्ल बस्याको घरलाई घेरी जबर्जस्ती गरी घरभित्र पसी समात्न जाँदा महीपतीन्द्र मल्लले द्वाल बाट अङ्गुली बाहिर निकाली सारै रोई मनाई मार्नलाग्या ढोका खोली कोठा भित्र आउन लाग्या हेप्रजाहो मेरो जीव रक्षा गर भनी बिन्ती गर्दा शरण आया कालाई यहाँ सम्म भया पछि अवश्या हेरिरहन्छौं लौं समात लौमार भनी जम्माभै ती चेर्‍याहरूकन समाई कुटी मार्‍या कतिका हात भाच्या कतिका गोडा भांच्या. कतिलाई लातले मार्‍या कतिलाई कुलोमा गाड्या कतिलाई कपाल फोर्‍या कति भागि गया। तिनीहरू सबैका हतियार लुटी लिया लबेदा सुरुहालपटुका पगरि समेत उतारि लिया।

काशीराम आले कालुठकैया मुखियाहरूकन कुटी सक्या पछि राजकुलमा थुनिराख्या । फेरी कान्तिपुरका मानिसहरूले अवतारराजाहरू टेकु दोभानमा बसी सलुक गऱ्या । अब पाटन जान खुलस्ता भयो भनी ठानी आउन्याहरूलाई थुनि राख्या । यही खबर कान्तिपुरका राजाले सुन्दा अब जाउ पाटनका हरूलाई पनि समाई ल्याउ भनी अह्राउदा कान्तिपुरबाट भागि गयाका मदन नाम ब्राह्मणकन समाई जुंघा दाह्री लुछिल्याया । फेरि यस्तातरहको कलह बिचैबाट उठी सलुक नभै रहंदा यस्तै समयमा श्रीनिवास परलोक भया ।

यहां पछि पाटनका परमानहरू चार जना संवत् ८०७ नष्ट आषाड शुक्ल पूर्णिमाका दिन महिपतेन्द्र मल्ल लाई कान्तिपुर का राजालाइ सौंपिसलुक गरी रस्ता खुला गरु भनि जादा यहि खबर थाहा पाई महिपतेन्द्र मल्ल भाग्या र कान्तिपुरका परमान हरुले थाहा पाइ ललित पत्तनका प्रजाहरूकन कान्तिपुरमा थुनि राख्या । थाहापछि संवत् ८०७ आषाढ शुक्ल तृतिया शनिश्चरवारका दिन कान्तिपुरका राजा नृपेन्द्र मल्ल परलोक भया । राजा भूपालेन्द्र मल्ल उमेर कचा हुनाले मन्त्रिहरूको मन नपर्दा अरु प्रमानहरु संग विरोधभै कान्तिपुरबाट देव पत्तनमा आई श्री पशुपति नाथकन नित्य दर्शन गरी पुराण सुनि गोदान अन्न वस्त्रादि दान गरी रहन्या चिकुदिनाम प्रमाण कन राजा नृपेन्द्र मल्ल परलोक भयाको चार दिन पछि देव पत्तन देखी कुटि कुटि लुछि कान्तिपुर ल्याउदा थोचिथोंला पुग्दा चेष्टा हरायाको थियो । श्रेष्ठ महाजन खुसल पोढ्या सब जातले कुट्या लातले खाद्या यस्तै तरह सँग समाई ल्याउदा एक जनाले कपालमा लाठाले बजार्दा रगतका धारा बह्यो । बेसि घर भयाका कसैले रगत बह्याको थामि देउ सात हजार मोहर लेउ यो रगतको मोल ७ हजार मोहर भयो भन्दा झन सारो स्यस्का मुखमा बाटामा रह्याको विष्टा मुत्र लि मुखमा जवर्जस्ति गरी खादि खादि राखी दिया । यहाँपछि चिकुटि बशिघर दुवैलाई गुप्त प्रकट वैरमा माऱ्या। चिकुटिका परिवारलाई जहाँ जहाँ पायो त्याहा त्यहा समाई कुटी माऱ्या भागि जान सकन्या मात्र बाँच्या । पाटनमा भागिजान्या टौ दक बाहेक बालकहरु स्त्रीहरू मात्र बाँच्या । यहाँ पछि लक्ष्मी नारायण जोशी मूल काजी भया । यहाँ पछि अघि पाटनका थुनिराख्याका काजीहरूकन छाडी पठाया यहाँ पछि केही सामर्थ्य नभयका महीपतीन्द्र मल्ल डराई लुकिरह्याका राजपुत्रकन भाद्रपद शुक्ल ११ बुध वारका दिन राघवानन्द स्वामीका घरमा लुक रह्याका ठाउँ बाट डोरिले बाँधी ताना तान गर्दा राघवानन्द स्वामीले माफ गर माफगर भनी बुझाई विंति गर्न आउंदा स्वामीकन भऱ्याङ्बाट खसाली मही पतीन्द्र मल्लकन अन्यायसित जीवहरण गऱ्या । उपान्त शिरकाटी ल्याई लक्ष्मी नारायण काजीले हेऱ्या । यहां पछि राघवानन्द स्वामी यस्ता अन्यायी राज्यमा बस्नु छैन भनी ललितपत्तनमा आया ।

यहाँ पछि राज पुत्र माऱ्याको प्रायश्चित गर्न निमित्त गरुड नारायण पशुपति नाथ शिखर ना-

रायणमा जाई पूजा मान्य गऱ्या । सबकाजीमाथिको मुख्य काजीभै राज काज गऱ्याको थियो । त्यस्तै समयमा संवत् ८०८ श्रावण महिनामा राजायोगनरेन्द्र मल्ल काजी ईश्वरदास कान्तिपुर जाई भूपालेन्द्र मल्ल राजासंग भेट गऱ्या । यो खबर भक्तपुरका राजा जितामित्र मल्लले पाई कान्तिपुर आया र त्य-सवेला लक्ष्मीनारायण काजीले जितामित्र राजालाई हजुरले काजी भागिरामलाई खोसि देउ गोर्खामा बस्न जान्यालाई भिकाई काजी गर त्यहाँ पछि तिनै शहर मिलि रहौंला भनी भन्दा भक्तपुरका राजाले तिमि ले भन्या माफिक काजीलाई खोसन्यातछैन भनी रिसाई फर्कि गया । यहाँ पछि पनि कान्तिपुरका काजीहरूले त्यस भागिरामलाइ काजी नगर यति गऱ्या मिल्दछु भनी पठाउदै गर्दथ्या । यहाँ पछि भक्त-पुरका राजा ले निष्कारणमा गोर्खा जाइ रहन्या डावया काजीको बावुलाइ मारिदिया ।

यहाँ पछि संवत् ८०८ भदौ महिनामा कान्तिपुरका काजीहरूललितपुरमा जाई दुवै सहर मिली भक्तपुरमाथि चढ़ ई गरी फर्की इन्द्रजात्रा गरी सकी फेर भक्तपुरमाथि लडाई गरी प्रजाकन दुख दिदा प्रजाहरू दिकभ भोल्टिपल्ट यसै भागिराम काजीको निमित्त दुख पायौं । अब यस भागिरामलाइ मार्न्याहो भनी घर घेरा दिँदा भागिराम भागि गया । प्रजाहरूले घर लुटी धन दौलत अन्न वस्त्र लुटिलिया वस्तु लिन नपाउन्या हरूले घर भत्काइ भयाल दलिन काठहरू चोकमा चिनि राख्या का टुक्रा समेत लुटी लगी घरमा आगो लाई दिया । यहाँ पछि प्रजाहरू राजकुलमा जाइ हेमहाराज अब यस्तो होईन कान्तिपुर जान्या हो कतिले पाटन जान्यावो भंदा पर्ख एक दुइ दिन सम्म नहतपताउ भन्दा प्रजाहरूले अब पनि हजुर यसै भंनुहुन्छ हिड कान्तिपुर भनी पाखुरामा समाई राजालाई राजकुलवाट निकाली कान्तिपुर लैजादा अब प्रजाहरूले कसो गर्न लाग्या राजालाई बाढ़्या गर्न लायाकि घटिया गर्नलाग्या भनी रानीहरू ठूलो स्वर गरी रोया । प्रजाले राजालाई कान्तिपुरका मुख्य काजी लक्ष्मी नारायण कहाँ लग्या । काजी कस्ता थिया दर्वारमै ल्याइ राजाले लाउन्या पोशाक गहना पहिरी राजाका पलङ्ग बढ्यानमा बस्तथ्या । लडाइमा पनि जादैनथ्या । रात दिन रानी सँग मात्रै बसिरहन्थ्या । यसकाजीले भक्तपुरका राजा आया भंने खबर थाहा पाइ ललितपत्तनका राजा कन ब.लाउन पठाउँदा योगनरेन्द्र मल्ल कान्ति-पुर आया तिनै राजा बसी बात चित सलुक गरी पाटन का र भक्तपुरका राजा फर्कि गया । पाटनका लगाको जगा भन्या छाडी दिएन । यहाँ पछि प्रजाहरूले भगायाको काजी कल्लयरीमा बस्न गयाका भागिराम लाई योगनरेन्द्रले बोलाए पछि जितामित्र र जा आई भक्तपुर लगि फेरि काजी गऱ्या । अघि प्रजाहरूले लुट्याका आलमाल भिकी सुम्पि-दिया । त्यहाँ पछि पाटन वस्नलाभया । लडाईमा काजी परशुराम भागि आउँदा नेलठोक राखदा नेलैमा मऱ्या । यहा पछि प्रजाहरू जमा भै जाई लडाई गरी नौ कोन जितिलि नौकोतघरमा रहयाका १३६ जना कन छाडी पठाया । पछि योगनरेन्द्र मल्लराजाले मिहीनत गरी मेरा मुलुक भी'कदिया । यस्तो मिहीनेत सधैं मेरा खातिर गर्नुपर्दछ भन्दा प्रजाहरूले बिन्ति

गऱ्या । हेमहाराज श्यावास गर्नमा भन्या गर्धनले शिर उठाउन सकुन्ज्याल गरौंला ।तर एक थोक हाम्रो विन्ति बयाभन्नुहोला त आफ्ना सुख दुःख को कुरा विन्ति गर्न निर्तित्त प्रजाकन संहार गर्न्या धर्म भयाका एक असल काजी बक्स्या जाला भनी विन्ति राख्या र राजा योगनरेन्द्रमल्ल यस कुरामा बहुतै प्रसन्न भई प्रजाकन बोध दिई देवताका पूजा गरी सब कन भोज खुआया । यहाँ पछि संवत् ८१० भदौ महीनामा कान्तिपुरमा थिया । योगनरेन्द्रमल्लले लडाई गऱ्या मूल काजी लक्ष्मीनारायण जोशी आफ्ना घरबाट दरबार जाऔं भनी आउँदा उसका घरमा खस मुखिया हरू जाई केही सल्लाह गर्नु छ भनी एकातिर लगि शस्त्र प्रहार गर्दा दुवै हात कपालमाँ राखि दरबारतिर भागि जाँदा बाहिर बस्याका खसहरूले लघारी घेरै ठाउँ घात गरि मार्दा यो खबर रानीले सुनी राजकुलबाट बाहिर निस्की आउँदा बुझाई भित्र लग्या तहाँपछि रानी ले लक्ष्मीनारायणको रगत चाँदोका भाँडा मा उठाई मूर्ति मुर्दालाई पर राखि लगि संस्कार गराया । यहाँ पछि भूपालेन्द्र मल्ल राजाले भद्दिमानसिंहलाई मुख्य काजी गरि दिया ।

श्रीपशुपति नाथकन राघवानन्द स्वामीले विधिपूर्वक नित्य पूजा गरि रह्याका थिया । पछिअन्त कालका वखतमा मजस्तै स्वामी आवस भन्या अभिलाषा छ भन्या मलाई आर्यघाटका बागमती वारि समाधि लिन देउ होइन भन्या जहाँ तिमीहरूको इच्छा वही समाधि लिन देउ भंदा राजाका समीपमा रह्याका दुर्जनहरूले यस्ता तरहको विचार ठहराई भन्दा स्वामिहरूलाई पशुपतिनाथको पूजक गरि राख्नु कठीन कुरो छ । तसर्थ बागमती पारि लगी समाधिगाऱ्न्याहो भंदा उसै माफिक राज राजेश्वरी सन्धिसमाधि लगीराखदा 'राघवानन्द' स्वामी आफुले भन्या माफिक नपुगी दुर्जनका बुद्धि सुनी आर्यघाटमा समाधि लिन नदिदा, उसै जगामा समाधि लिई शून्यमागया ।

यहाँ उप्रान्त श्रीपशुपतिको पूजक योग्य पुरुषार्थी स्वामीहरू आएनन् । यहाँ पछि वछले श्वरीका यात्रा जगायाको वर्ष ४ पछि रारीकन स्वप्न भयो र राजा रानी दुवै जाई श्रीपशुपतिनाथकन पूजा गरी श्वेतविनायकका कबच मूर्ति बनाई घेरै गुठि राखी बाँडाहरू कन गुठियार गरी कार्तिक शुक्ल पूर्णिमा र प्रतिपदाका दिन प्रतिवर्ष रथ यात्रा गराया । यही जात्रा गराउन जादा रजिकहरू मिली विन्ति गर्दा राजाले रजिक कूप बनाई दिया ।

फेरि यि राजाका पालामा प्रेत चतुर्दशीका दिन रात्रीमा एक रानी परलोक हुँदा कान्तिपुरका घेरै देवताहरूको जात्रा आधामात्र भयो । अमावास्याका दिन हुन्या जात्रा सब मनाहि गरी दिया । देवताका मूर्तिछोपि स्वस्थानमा लेगया । श्रीवछलेश्वरीको जात्रामात्रै क्रमैसित संपूर्ण गराया । मनाहि गर्न सकेनन् । यहाँ पछि राजा भूपालेन्द्र मल्ल तिनै सहरको सलुकमै एकै भैरहँदा तीर्थ वर्त गर्नाका इच्छाले राजधानी शहर कान्तिपुर बाट प्रस्थान गरी हरिद्वारका मेला भर्न गया । तीर्थ वर्त गर्दैजांदा

अयोध्यादेखि चारदिनका रास्तामा ज्ञानी ईश्वरका भक्तिमा चित्तलाग्याका राजा भूपालेन्द्र मल्ल संवत् ८२१ कातिक कृष्ण त्रयोदशी बुधवारकादिन परलोक भयार साथ जांग्या मान्सिहरूले इनका शरीर बाकी आठ कोश जमिन सम्म ल्याई गंगा जीमा पुन्याई अग्नि संस्कार गराया । य हाँ पछि राजा संग जान्या प्रमानहरू फर्कि आई राजा परलोक भयाका खबर कहन नसकी डराई आफना आफ्ना घरमा लुकिरह्या । खबर जाहेर भया पछि माघ शुक्ल पञ्चमीका दिन राजा भूपालेन्द्र मल्लका जातक पत्र पलङ्गमा राखी अग्नि संस्कार गन्या । यिनका संसर्ग गर्ने रानी प्रभृति आठ जना सती गया ॥ ॥

अस्य पुत्र महीन्द्र मल्ल यिनका अर्को नाम भास्कर मल्ल भोग वर्ष २१ यी राजा चौध वर्षका उमेर हुंदा बाबा भूपालेन्द्र मल्ल परलोक भयाका हुन् । यी राजा अति चंचल स्वभाका थिया धेरै पक्षीहरू पाल्न्या अनेक स्थानमा जाइ फिर्न्या सिकार खेल्न्या मा अति रत थिया । एक दिन तिनै सहरका राजा एकमै मिलि रहदा का समयमा भक्तपुरका राजा कान्तिपुरका राजा भास्कर मल्ल सिधुलिको बाटो गरी चारकोशझाडी तिर हात्ती षेदामा जाँदा भास्कर मल्लले १३ हात्ती समाई नेपालमा ल्याइ पुन्याया । भक्तपुरका राजाले मात्र एक हात्ती पनि ल्याउन सकेनन् । यसैमा भास्कर मल्ल अति सुरा प्रतापी ठहर्न जाँदा पण्डित हरू राज द्वारमा आई राजाको वर्णन गरी राजा गजपति महीन्द्रमल्ल भनी नाम राखी प्रख्यात गराया । यि राजा ब्राह्मण पण्डित हरू देखि खुशी भै ब्राह्मणहरू कन धेरै बिर्ता बक्सिस गन्या । सदा सर्वदा ब्राह्मण कन सन्मान गर्थ्या । बारम्बार शिकार खेल्ना निमित्त तराई तर्फ जाथ्या । एक समय आफ्ना लगा तगी तस्थीनका थर बट बासी धेरै थारु हरू आइ अनेक तरहका षोज वस्तु सौगात चढाइ करजोरी जीवनवृत्ति को आधार मांग्दा राजा षुशी भै धेरै जग्गा बक्सिस गरी भुजा नाम जात प्रख्यात गरी फर्कि आया अद्यापि यस नामको जात रह्याका छदै छन् । फेरि यि राजाले नेपाल कान्तिपुर राज धानी शहरको जगा भरीका ब्राह्मण हरूकन धेरै बिर्ता संकल्प गरी दिया । यस्ता दानी औ बडा शूरा राजा हुन । यी राजाका २ बिबाहिता रानी थिया स्व इच्छाले राषे का दुवै मैंज्यू-हरू थिया । ४ स्त्री हरू सित रस क्रीडा बिहार गर्नको निमित्त किम् डोका स्थानमा सुन्दर घर धर्म साला बनाई सदा सर्वदा रस रङ्ग गर्दथ्या । फेरी यिराजाले हात्ती खेदाको निमित्त सिंधुलमा दुई महिना तंम बास गन्या । मुसलमान् हरू आई राजासित बातचित गरी तिनी हरू लाई राजाले चाह गर्दा नोकर भै रह्याका थिया । यस्तै समय मूल काजी भंगल ठकुर ले मुसलमान् संग को प्रीति राजाले गर्न लाग्या भनी हात्ती खेदा नपाईठ थामिराख्या राजाले हात्ती खेदा जान्या छैन गंगाजी संग पुगी स्नान गरी फर्की चाडै आउंला मान्दा तैपनि काजीले नमान्दा मुसलमान् हरूसंग मिली काजीले थाह नपाउन्या गरी जानलाग्दा काजी भंगल ठकुरले भाहापाई उमराव हरू संग सल्लाह गरी जुक्ती गरी राजाकन पठाएनन् । यहाँ पछि मुसलमा तुरूक सवार जाना २० राजाले साथ गरी

नेपालमा ल्याई कान्तिपुर सहरमा मुसलमान हरु जंबा डेढशय सम्म लाई खान खर्च दी अ फना चाकरी गर ई राख्या । यस्तै तरह संग रहँदा मुसलमान् हरूले राजालाई रिझायार झंगल ठकुर मुख्य काजी कन खोसी मुसलमान् लाई काजी गर्‍या । यहाँ पछि झंगल ठाकुर प्रभात उमराव हरुले अब राजाले घटियाको सङ्गत गरी हिन्दुको धर्म नेपाल पोल्न लाग्या । यस वखतमा हामीहरुले सक्या सम्म को युक्ति गरी इनीहरुलाई ननिकाले हामी सब हिन्दु मुसलमानका करामा हुन लाग्यौं भनी सल्लाह गरी कान्तिपुर का प्रजाहरु खशहरु ललित पहानका परमानहरु सब एक कठाभै मिली मुसलमानहरुलाई शस्त्र प्रहार गरी मार्दा राजामुसलमानहरु एक पट्टिभै राजकुलमाबसी बंदुकले हानी तरवारले काटी धनुष प्रहार गरी नेवार खस डेढ शयलाई जखमा गर्‍या यस्ता तरह सँग युद्ध हुँदा सब मुसलमान् हरूकन कटाकाट गरिकन मार्‍या । चार पाँच जनामात्र भागिगया । समाहन सकेनन् । कान्तिपुर शहरका बिचमा यस्ता तरहको ठूलो तकरार उठी लडाईं गरी मुसलमान् हरुलाई संहार गर्‍या । यसै दिन भक्तपुरका राजाले देवदो कोटमा चढाई गर्न आया र यीनीहरु संग पनि लडाईं गरी ७०,८० जनाहरु कन खतं गरी हराई पठाया । पछि फेरि झंगल ठकुर मूल काजी भया अघिका माफिक राजा संग मिल्या ।

८३७ ज्येष्ठ कृष्ण अमावास्या का दिन ललितपत्तन का राजा सिद्धि नृसिंह परलोक भै राजा शून्य हुँदा ४ काजी कान्तिपुर जाई राजा शून्य भयो अब हजूर कन राजा माग्न आयौं भनी बिंति गर्दा लौ भनी आज्ञा दि पठाया । ४, ५ दिनपछि पनि केही उत्तारा नमिल्दा पाटन्या प्रजाहरू सब मिली आई २४ प्रमानहरू सित हामी सब मिली कान्तिपुरमा शरण जाउँ भनी बिन्ति गर्दा ती २४ प्रमानहरू सबै जम्मा भै कान्तिपुर जाई राजाकन बुझाई सिंदूर जात्रा गरी ललित पत्तन लैजाई संवत् ८३७ आषाढ़ शुक्ल १५ कोदिन महेन्द्र मल्ल कन मणि मंडप सिंहासनमा राखी राज्याभिषेक दिया । महेन्द्र मल्ल राजा ले कान्तिपुर ललितपुर दुवै सहरका राजा भै रहदा समय संवत् ८३९ नष्ट आश्विन सुदि २ का दिन धाना छे घरको बिरेश्वर उपाध्या र निह्लाका मेलु बाबु दुई जनाले कान्तिपुर बाट एक रानी ल्याई पाटनमा राख्या । यसै दिन भक्तपुरका राजा भूपालेन्द्र मल्लले शस्त्र सहित सैन्य ली पाटन आया महिन्द्र मल्लले खबर पाई सैन्य सहित पाटन आई भक्तपुरका सैन्यलाई समाई वस्त्र छोडाई हतियार लुटि लिय ॥ भूपतीन्द्र मल्ल राजालाई र राजकुमार रणजित मल्ल कन जान नदी राखी २ हात्ती र १६००० रू-पैया लीछाडि पठाया । त्याहाँ पछि बिरेश्वर उपाध्याय लाई समाई थुन्या मेलु बाबुकाजी भागि गया । त्याहाँ पछि पाटनको भाराली अनन्त सिंह काजी ले मुख्य काजी भया । कान्तिपुरको भारा झंगल ठकुर काजी ले लिया । यी राजा का पालामा राजाको २९ वर्षको उमेरमा १२० वर्षमा आउन्या महामारी आई नेपालमा प्रवेश भै संवत् ८३६ साल चैत्र महिना देखि कान्तिपुरमा प्रारम्भ हुन गयो । पैले सहर ग्राम हरूका घर घरमा मूसाहरू मर्‍या त्यस पछि हात्ती घोडा भेडा बाख्रा हाँस कुखुरा गाई

भैसी बनमा जीव जन्तु मृग बँदेल आदि वनचर मऱ्या । पृथ्वीमा सर्वत्र पशुपक्षी जीव जन्तु आदि प्राण नाश भया । पछि महामारी अति प्रज्वलित भैरहदा काखिमा काँधमा कर्ण संधिमा फोका उठी कपाल दुखने व्यथा लागी नेपालका सहर ग्रामहरूमा असंख्य मानिस मऱ्या । चैत्र महिना देखि कान्तिपुर मा मऱ्या । असारमा ललितपुरमा मऱ्या । भक्तपुरमा मऱ्या यस्तै तरह सँग रोग फैलियो । ढोका बा - हिर का षस हरूमा भन्या यस रोगले ज्यादा मरेनन् । रोग हुन्या मानिस हरू भन्दा क्षणमात्र रोग लागी तत्कालैमा मर्दा शहर ग्रामहरूमा मर्यादा व्यवहार विचार संचार सव वन्ध हाहाकार भै गयो । यस्तै तरह सँग रोग भै रहँदा कान्तिपुर का मानिसको इच्छा तो मानिस हरूत रोग हुन्या वित्तिकै वेग सित जाई मातातीर्थ पुगी मरण भया । कोही पचली घाटमा मरण भया । कोही वागमती मा मरण भया । कोही विष्णुमतीमा मरण भया कोही बाटामा मऱ्या यस्ता तरह सँग मर्दा मर्न्यालाई काचो आदि चाहिन्या कुरो पनि दिन सकेनन् । दिनमा १०० । १२० मानिस मर्दा धेरैका सन्तान शून्यभै अपुताली लाग्यो । यस्तै समय अघि श्रीपशुपति नाथका दक्षिण मुख बाट दन्त प्रकाश भयो । मछीन्द्र नाथको जात्रामा पनि ३१ आग्ला भाँचियो । मीन नाथका रथमा अग्नि प्रवेश भै जल्यो । कीर्तिपुर व्याघ्र भैरवका नेत्र देखि मनिको मुख पतन भयो । नव ग्रह गण पनि घोप्टि रह्या । नेपाल मण्डलका सबै स्थानका ठूला ठूला देवता का स्थानमा उपद्रव भयो । यही भयले प्रजाहरू त्राहि त्राहि भै सहर छाडी धेरै मानिस भागि गया । यस्तै समय कान्तिपुर का मुख्य काजी भंगल ठकुरले राजा महेन्द्र सिंह मल्ल दुई रानी लाई दुई मइजू टहलुवा चार जना मात्र साथ गरी किडो स्थान का घरमा सव सरजाम तयार गरी राषी अरु वाहिरी मानिस कोही आउन जान नदिई वन्ध गरी लुकाई राख्या । यस्तो तरह सँग राषि छाड्या का छ महिना पछि पनि सहर ग्राम हरूमा मानिस वरावर मर्दै थिया । यस्तै समय एक जोगी आई भंगल ठकुर काजी कन यस्ता वचन सुनाया । अहो गमार । काजी तेरो शान्ति स्वस्ति पूजा पाठल महा-मारी निवारण हुन्या छैन देशी परदेसी सव जनालाई इच्छा भोजन गराउ तव महा मारी देवी सन्तुष्ट भै रोग निवारण होला । पशुपति नाथ पनि प्रसन्न होलान् । यति भनी योगी स्वान मा गया । त्यहाँ पछि काजीले योगीका आज्ञा नुसार योगी सन्यासी फकीर सहर वासी सबै जातका ग- रीव गुरुवा सवलाई वोलाई धेरै धन खर्च गरी हनुमान ढोकामा इच्छा भोजन गराया । दिन ४ संम ठूलो अन्न दान गर्दा मरण भय वहुतै निवारण भैं गयो । यस्तो समय एक दिन कोही ज्यापू किड़ो संघ माको खेतमा जादा राजाले भयालमा छिद्र वनाई ज्यापू लाई डाकी सहरको समाचार कस्तो छ भनी सोद्धा हेमराज ! चारदिन भयो वहुतै रोग निवारण भयाकोछ भनि ज्यापूले विन्ति गर्दा यति समाचार सुन्नेवित्तिकै त्यहीः भयाल खोली फाल हाल्न तयार हुँदा रानी हरूले भरसक गर्दा थामदा पनि थामन सकेनन् । राजाले वन्धभै रहन वहुतै गाह्रो मानी भयालैबाट फाल हाली वेगसित दौडी आई सहरमा

जाई दर्बारमा प्रवेश गऱ्या । ज्राहाँ पछि रानी र मयज्युहरू पनि दर्बारमा आया । यसै दिन का रात्री मा रानी र मैंज्युहरू सँग राजा बसि रहँदा यी राजा माथि महा मारीको दृष्टि लाग्यो । रोग प्राप्त भै शुद्ध सूर्य वंशी राजा महेन्द्र मल्ल नेपाली संवत् ८४२ साल भाद्र कृष्ण ११ का दिन परलोक भया । या राजाका पालामा ७ वर्ष सम्म महामारी आई रोग समन नभै रोगका पीडाले श्रोष्ठभाज्युहरू धेरै मरण भया । किशानीहरू कन बोलाई अफ्ना आफ्ना ईष्ठ देवता जगाई सनाथ गुठी नाम राखी गुठी जनहरू अम्मा भै मरण काजमा भेला हुनु निमित्त गुठ तुल्याया । अघि भाज्युहरूको सनाथ गुठी थिएन । असक्त हुनाले किशानीहरूले मुर्दा छुन्या उन्का रीत भै गयाको हो । इनै वर्षमा दर्बारका कुमारी शून्य मा जांदा बाबाहाल देवपत्तनका कुमारी लैं जाई आसनमा राखी पूजा मान्य गराया । दुई महिना सम्म राखी कुमारी कन समान गरी अर्की कुमारी साग्नी राखी फर्काई दिया । त्यहाँ उप्रान्त कान्तिपुर रा – जधानी शहरमा सूर्य वंशी शून्य भ गया भनी लोक जन सबैले हाहाकार गर्दा रानी र चारै जनाले प्रजाहरू कन बोलाई कोही एक सूर्य वंशीका छोरी पट्टिका सन्तान जगज्जय नाम गऱ्या का ठाकुर कन राज्याभिषेक दिया । ज्राहाँ चारै रानीहरू सह गामिनी भै यथाक्रमले राज राज्येश्वरी सन्ध्याका श्मशान मा प्रवेश गरी अग्नि प्रज्वलित भै आधा शरीर जलि सकेको वेलामशान विषे ज्येठो रानी खडा भै करजोरी यस्तो वचन बोलिन् । हे लोक पंच हो हाम्री हरू कन भडो कष्ट प्राप्त भयो सन्तान शून्य यि राजाले सजीव छदा धेरै पक्षीहरू पाली फेरी असग ढोका बाहिर सत्तल बनाई धारा बसाई मूर्ति बनाई बसाइ यथा क्रमले प्रतिष्ठा गरी धेरैं ब्राह्मणकन भोजन गराया यस्तातरहले मुख्य काजी भंगल ठकुरले राजा महीन्द्र मल्ल र रानीहरूको नामले धेरै धर्म कीर्ति गरिदिया । महामारी आइ कान्तिपुरमा शुद्ध सूर्य वंशी राजाकन लोप गरी सक्या उप्रान्त यसरोग नेपालमा निवृत्त भै गयो । जगज्जय मल्ल राजा भोग १४ यि राजा कन सूर्य वंशी राजा शून्यमा गया पछि सतीले छोरीपट्टिका सन्तानकन ल्याई राज्याभिषेक गरिदियाका हुन् । यि राजा लाई श्रीगुह्येश्वरी प्रसन्न भै एक कोही मैंथिल ब्राह्मणकन स्वप्नविषे दर्शनदी आजका चौथो दिनमा राज्याभिषेक पाउला भनी जगज्जय ठाकुरकन भनिदिनु भनी यस्ता तर– हको वचन स्वप्नविषे दर्शन दिई आज्ञा प्रसन्न हुदा सो मैंथिली ब्राह्मणले जगज्जय कन भेटी ईश्वरीका अनुग्रहका वाणी स्वप्नप्रमाण मन्त्र उल्का वचन सुनायाका थिया । अकस्मात् दैव योगले महीन्द्रसिंह मल्ल परलोक भैं राजा शून्य हुँदा यिनै जगज्जय मल्लकन सतीले बोलाई प्रजाहरू सँग सम्मत गरी रा- ज्याभिषेक दियाको हो । यिन राजाले राज्याभिषेक पाय उप्रान्त अघि श्रीगुह्येश्वरी प्रसन्नभै मलाई स्वप्नविषे आज्ञा भयाको भनी मैथिल ब्राह्मणलाई समझी इनले भन्या बमोजिम पुग्यो भनी बहुतै खुशीभ मैथिल ब्राह्मणकन मेराईष्ट देवता गुरुहुन् भनी बहुतै सन्मान गरी कान्तिपुरमा वास गर्न दिई नुवाकोट- माथेरै विर्ता संकल्प गरीदिया यहाँ पछि श्रीगुह्येश्वरीका यात्रा अघि नचल्याकोमा कवच मूर्ति बनाई अ–

खण्ड दीप ज्वाला लिङ्ग ढाल्नु इत्यादि नाना विधिले मन्त्र पूजा गराई जगाई प्रति वर्ष जात्रा गराया। बत्तिश कोठी महाजन हरु राषी धेरै षेत गुठी राषी कर्माचार्य हरु कन गुठीयार राखी दिया । यी राजा नहुँदै इनका दुई पुत्र जन्म भयाका थिया । राजेन्द्र प्रकाश र जय प्रकाश पायापछि मोहन चोकमा जन्म्या का ३ पुत्र राज्य प्रकाश नरेन्द्र प्रकाश चन्द्र प्रकाश यी राज कुमार हरुर कुमुदिनी नाम रानी सहित भै सुख विहार गरीरह्या का थिया । राजा भया को ६ वर्ष पछि बडा लक्षणले युक्त भयाका ज्येष्ठ पुत्र राजेन्द्र प्रकाश दैव जोगले परलोक भया र राजाले बहुतै शोक गर्‍या । यिनै ज्येष्ठ पुत्रका लक्षणले म राजा भयाको हुँ भनी बहुतै फिक्री मान्या । अब मेरा अन्तमा जय प्रकाश राजा होला । यसका पालामा देव धर्म राज्य कही रहन्या छैन प्रजाहरुले पनि बहुतै दुष पाउलान् । भनीं शोकले महिना ३ सम्म दर्बार बाट बाहिर ननिस्कि रहदा त्यससमग चार थरि थस सिपाही हरु आई राजा कन बुझाया । हेमहाराज १ पुत्रका निमित्त यस्ता तरह संग शोक गर्न्या होइन । राज काज नगरि रह्या कसो होला । हजुरका ४ पुत्र छन् भनी बिन्ति गर्दा राजाले आफ्ना मनको सन्देह तिनीहरु लाई बताया र ती थसहरुले जयप्रकाशको स्वभाव अति क्रूर छ इनले देव धर्म राज्य नाशन्या छन् भनी हुकुम भयो । यसो भनु भयाहामी ले राज्यप्रकाश कन राजा गरौंला । मोहन चोकमा जन्म भयाका हुनाले राज्य गर्न जोग्य का पनि छन्। भनी राजा रानी कन चित्त बुझाई थस थरिहरु फर्कि गया । इन दिनदेखि यही मतलब राजा थसहरुको भयाको थाह पाई जयप्रकाशले थस थरि हरु कन मनमा बहुतै दगा राख्या । ताहाँ उपान्त केही काल गया पछि कान्छा पुत्र चन्द्र प्रकाश दैव जोगले परलोक भया र इनका नामले सहर पूर्व भाग टुकुचा पारी भीम मुकुका पोखरी भनी यथाक्रमले बनाई प्रतिष्ठा गर्‍या । फेरि यिन राज कुमार का नामले कोही पशुजन कन सुवर्ण रुप गहना पहिराईदिया । जात्रा पठाउँदा नेपाटोलको उदासले राजाले पठाएको हो भनी थाह पाई साह्रै हास्य गर्‍यो । पछि बाट राजाले पठायाका मानिसकन मैले साह्रै अपहेला गर्‍या भनी बहुतै डराई भोलिपल्ट राजाकन १ थाल भरि सुन चढाउन लैजाँदा तैंले अपहेला गर्‍या को माफ छ भनी ल्याएको सुन पनि फर्काइ दिया । यि राजा बहुतै निर्लोभी थिया । संवत् ८४६ आषाढ शुक्ल ११ का दिन भंगलठकुर काजी ललित पत्तन जाई कान्तिपुरका राजा जगज्जयमल्ल सँग ल्याई दुबै राजा मिलाई भक्तपुरमाथि चढाई गर्‍या धेरैको घरहरुमा आगो लगाई प्रजाकन दुख दिई भक्तपुरका राजासित धेरै धन लिई राजा कान्तिपुर फर्कि आया । संवत् ८५० माघ शुक्ल द्वितीया । पूर्वफाल्गुनी नक्षत्र सोमबारका दिन ललित पत्तनका राजा विष्णु मल्ल कन आफ्ना त्रिकन्या कन्या दान गरिदिया । यी राजाका पालामा जयव गेश्वरीका देवालय भित्र चोरपसी गहना सबै चोरि लैजाँदा चोर को तलास मा लागी रह्याका थिया चोर फेला पार्न सक्याका थिएनन् । चोरि लग्याको ३ महिना पछि ५ वर्षकी कन्या कुमारी आर्य पुत्रीका शरीरमा देवी प्रादुर्भाव गरी मेरा गहना चोरन्या चोर हाडीगाउँमा

ढोकाभित्र पाटिमा वसी थाम वजाइरहयाको छ भनी आज्ञा प्रसन्नहुदा कन्याकुमारीका वचन प्रतीतमा-नी सबै जना गइ हेर्न जाँदा थाम वजाइ रहयाको देखी यही हो भनी ठहराई समाइ ल्याइ राजा बक्सा-ई शासना गर्दा सबै गहना मिल्यो ती सब अलंकार देवी कन चढाइदिया । फेरी यी राजाले दर्वार अगाडी धारा कृष्णको देवालय महाविष्णुको देवालय वनाइ मूर्ति स्थापना गरी गुठ राखी यथा क्रमले पूजा मान्या गराया । आहाँ पछि यो राजाले मैथिल ब्राह्मणहरू गुह्येश्वरीका ठूला सेवक हुन् । मेरामाथि इश्वरीको अनुग्रहबाणी स्वप्नामध्ये आयाको इनै मैथिल ब्राह्मणहरूबाट हो सोही वचन प्रमाण चार दिन पछि राजा हुन पाउँला भन्या अभिलाषा मनैमा नभयाको मलाइ राज पदवी प्राप्तभयो । यिनीहरूबाट मलाइ ठूलो गुण भयाकोछ भनी वहुतै प्रीति गरी मिलिरहँदा नेवार थरि हरूले नसही निरानराखमा सबै तिरौंलिया ब्राह्मणहरूको घर लुटी धन सम्पत्ति सर्वस्वहरण गरी खाइ दिया । त्यसै वर्षमा वर्षा शून्य भै दुनियामा सबै हाहाकार भै गयो । यो संकष्ट देखी राजा अति शान्त हुनाले मनमा विचार गरी मेरा पालामा प्रजाहरूले ब्रह्मस्व हरण गन्या भनि राजाले प्रजाहरूको उद्धारका निमित्त श्रीपशु पतिनाथमा महाबलि भोग नाम गरी गुठ राखी प्रतिवर्ष धर्म कर्म गरी इश्वरकन मान्या ।

फेरि केहीदिन पछि यी राजा वहुतै शान्त स्वभावका हुनाले गोर्खाका राजा पृथ्वीनारायणशाह आई नुवाकोट दखल गरी वही वास गरी गोर्खाका राजा कहाई हुकुम चलाइरयाकाथिया । याहाँ पछि यिन राजाले मनमा यस्ता तरहका विचार गन्र्याकि मेरा पालामा ब्रह्मस्व हरण पनि भयो राज्य पनि घट्यो लक्षणले युक्त भयाको ज्येष्ठ पुत्र पनि खस्यो माहिलो पुत्र जयप्रकाशको स्वभाव अति खरावछ यसले हिन्दूधर्म केही राखन्या छैन कुलको धर्म स्थिति राखन्या छैन प्रजाले पनि दुःख पाउनन् यसर्थ अब मैले जिउनु व्यर्थ छ । बाँची मैले यश नाम प्रख्यात गर्न कदाचित् सकन्या छैन यस्तो हेरिरहनुचाहिँन बरु चाडै मर्नु पाय बढीयाहुँदोहो भन्न विचार गरी चाडै मरण होस भन्या निमित्त उपाय गर्न लाग्दा ? कोही इटुंबहाल को दुष्ट बाँडाले भेद वताई हेमहाराज हजुर लाई केवल चाडै मरुँ भन्न्या इच्छा भया मंजे श्वरीका मूर्ति वनाई जात्रा गर्नु हवस तब चाँडै मर्नु होला । भनी पुस्तक देखाई विधान क्रम देखाउदा राजाले यही मतलव मनमा गुप्त राखी मंजेश्वरीका मूर्ति वनाई श्रीपंचमीका दिन कान्तिपुरमा ल्याई जात्रा गराया । यही जात्रा गन्र्या उप्रान्त तिन महिना पछि जगज्जय नाम गन्र्याका शान्त स्वभाव भया-प्रजाहरूबाट घटिया भन्न नसक्ने संकोच राखन्या राजा नेपाली संवत् ८५५ फाल्गुन वदिपञ्चमीका दिन परलोक भया ।

अस्य पुत्र जयप्रकाश मल्ल भोग गर्य ३३ यीनी नेपाली सवत् ८५५ फाल्गुन व दि ६ कादिन राज्याभिषेक पाया । यीन राजाले आफु राजा भया पछि यस्तो काम गन्र्या । विवाह गरी ल्याय को मिरयानी दया लक्ष्मी लगन मैज्यू बाँडाकी छोरी चटख्या मैज्यू वाहिर राख्याकी धन्य स्वभावीछोरी

यति स्त्रीहरूसित विहार गर्दथ्या । यीन राजाले आफु राजा भयापछि आफुलाई नसहन्या जात षस हरू जैसी भड़ेल हरू लाई इनीहरूमिली मेराभाइ राज्य प्रकास मोहन चोकमा जन्म्याको हो भनी उस्लाई राजा गर्न खोजन्या छुल्याहा हुन भनी कसैको विश्वास नमानी टाढा गरिराख्या । भाइ लाई पनि यी छुल्याहा सित मिली मेरा गादीमा वसुला भन्या पछि शुद्धन हुँदैन भाई राज्य प्रकाश मल्ल कन वहुतै डर देखाई धपाई पठाया । राज्यप्रकाश दाज्यूदेखी वहुतै डराई भागदा वाग्मती वाढी आयाको थियोवहुतै कष्ट पाई वाग्मतीतरी ललितपत्तनका राजा विष्णुमल्ल आफ्ना पिता ज्यूका चरणमा शरण गया । राजा विष्णुमल्लले पनि वहुतै अनुग्रह गरी मेरा सन्तान छैन मेरा शेष पछि तिमि लाई राजा गराउँला आफु सगै दरवारमा राखी खान पिना दी आनन्द गरी राखि छोड्या । याहाँ पछि तिनै सहरका राजा रण जित मल्ल ललित पत्तनका राजा विष्णु मल्ल लाई र दुवै सहरका सव काजी प्रमानहरू कन निमन्त्रणा गर्न्या भोजन गराई सकी वैठकमा तिनै राजा वसी आनन्दसित वात चित गर्न लागीरह्याका थिया । जय प्रकाश मल्लले क्या चाँजो गर्न्याका थिया भन्या वैठक भित्र कुकुटीमा धेरै दौलत सुना चादि अरूधेरै किसिमका चिजहरू वाहिर वाट वेस गरी देखिन्या गरी ढोकामा मसिनु कपडाको पर्दा लगाई भित्र वत्तीहरू वाली वाहीरवाट सव भित्र देखिन्या गरी राख्या काथिया रणजित मल्ल विष्णु मल्ल औ काजी प्रमाणहरूका दृष्टि कुकुटभित्र पर्दा धेरे दौलत चिज वस्तु देखि राजा त हामीहरू भंदा वहुतै धनाढ्य रह्याछन् भनि ठान्या । यति देखिसक्या उप्रान्त विदा भई मनमनमहाँ हामी भन्दा वहुतै तालिवर रह्याछन् भनी फिक्रि गरी आफ्ना आफ्ना २ सहरमा गया । आहाँ पछि ललित पत्तनका राजा विष्णु मल्ल कन विखुन भैरह्याको देखि काजी प्रमाण हरूले हेमराजका कारण क्याहो हजुर सुर्ता गर्नु हुन्छभनीविन्ति गर्दा राजाले भन्या हे मन्त्रीहरू मलाई अरूथोका सुर्ता केहीहोइन जयप्रकाशमल्लले दौलत देखाई पठाया अवहामीहरूले उस्का वदला क्या देखाउं भन्या उनका दौलत भंदा हामीहरूको वहुतै कमी छ अव कसो गर्न्या हो भनी सल्लाह गर्दा काजीप्रमाण हरूले विन्ति गर्न्या । हेमहाराज सुर्ता नगर्नुहोला हामीहरूले अव आफनाप्रजाहरूकन देखाउँला राजाको मुख्यधन भन्नुत प्रजाहरू हुन् भनी विन्ति गर्दा राजा खुशी भै लौ हाम्रा राज्य भरिका प्रजाहरूलाई सफेद पोसाक पहिरी हाजिर हुन आउनु भनी वर्दी दी झिकाउ भनी आज्ञा दिदा काजी प्रमाण हरूले राजाको हुकुम माफिक दिनको ठेकान गरी तिन सहर मध्य पाटनको राज्य ठूलो हूँनाले प्रजाहरूकन झिकाई जंवा गरी राखी कान्तिपुर भक्तपुरका राजा काजी प्रमाणहरूसवकन निमन्त्रणा गरी भोजन गराइ सक्या पछि चौकोटका पञ्च भयालमा तिनै राजा वस्या पछि प्रजा हरूकन वाचाई दर्शन दिया हतियार लियाका सफेद पोशाक पैह्याका प्रजाहरू सवले दर्शन गरी दर्वारका सामने प्राप्त गरी वस्या र विष्णु मल्ल राजाले राजा रणजित मल्ल राजा जयप्रकाश मल्ल सँग यथा गरू मेरो दौलत भन्नुत इनै प्रजाहरू हुन् भन्या । त्यहाँ पछि

भक्तपुर कान्तिपुरका राजाले पाटनका राजाको प्रजाहरू धेरै देखि इ सबैफौज जंमै लडन आया भन्या हामीले राज्य थाम्न सकिने रहेनछ भनी ठान्या । जयप्रकाश मल्लले वेनांहरू अर्ध्या लो भैं आफ्नो अन्त दिया छु भके धनी रहे छुर भन्या लिया । त्यहां पछि बिदा भैं आफ्ना आफ्ना सहरागमा गया ! पछि भक्तपुरका राजा रणजित मल्लले वहुतै फिक्का मन गरी भक्तपुर गै प्रमाणहरू सित सल्लाह गर्न्या । अब हामीले कसो गर्न्या हो । जयप्रकाश मल्लले दौलत देखाया विष्णु मल्लले प्रजा देखाया अब हामीले उसको वदला क्या देखाउँ धन देखाउँ भन्या प्रजा देखाउँ भन्या पनि उनी हरूको बराबर हाम्रो छैन भंदा काजी प्रमाणहरूले हेमहाराज केही सन्देह नमान्नु होला हामी हरूले पनि धेरै संग्रह गरी राख्या का चिजबिज शास्त्र औषधीहरू केहि धन हरू देखाउँला भन्ने बिन्ति पूर्बक सल्लाह गरी ठहराई जय प्रकाश मल्ल विष्णु मल्ल प्रभृति काजी प्रमाणहरूलाई निमन्त्रणा गरी भोजन गराइसक्या पछि धेरै डोरिमा उन्याका साचो को झुप्पाहरू भण्डारेले बैठकमा राखिदियो । त्यहांपछि रणजितमल्लले विष्णु मल्ल जय प्रकाशमल्ल संग भन्या आफ्नो आफ्नो मुख्य चिज भयाको मलाई देखायौ, दौलत दुनियाँ मेरो दुवै छैन जो भयाको हेर्छौ भन्या देखाउछु भनि दुवै राजाकन उठाई धेरै कोठाहरू खोली पुराना पुराना धेरै जातका औषधी तेल आदि अरू औषधी कागतहरू भयो वेद पुराण तन्त्र वैद्यशास्त्र आदि धेरै ग्रन्थ हरू र केही जेवर का चिज बस्तु वस्त्र धनहरू देखाया । त्यहां पछि दुवै जना बिदाभै भक्तपुरका राजा वहुतै सकल पदार्थ का संग्रही रहेछन् । इनी संग वखत अनुसारका कामलाई चाहिन्या चिज नभ याको केही रहेन छ । त्यस्तो संग्रह हामीहरूलाई छैन भनी हारमानी आफ्ना आफ्ना सहरमा आयाथ्या ।

ताहाँ उप्रान्त थरी मुखियाहरू र एक दुई हामीहरूले हामीहरूलाई राजा ले नजिक राखेनन् खोज खवर केही गर्दैनन्, इनबाट हामीहरूलाई भलो होला भन्या आशा छैन भनी मिली जय–प्रकाश मल्लका कान्छा भाई नरेन्द्र प्रकाश मल्ल कन बुझाई हात ली दरबार बाट बाहिर ल्याई देवपतनमा राखीं टुकुचा पारका देवपत्तन साँखु चाँगु गोकर्ण नन्दी ग्राम मति पाँच ग्रामका राजा गराया । त्राहांपछि थरि मुखिया काजीहरूले हे महाराज हजुर हरू पांच भाई एकै हो दुई भाई परलोक भया एक भाई ललित पत्तनमा गई आनन्दसित बसिरह्याका छन् हजुर पनि राज पुत्र योग्यको हुनु हुन्छ । दाज्यु भाई भन्या कोत जोरि नहो भनी राज्य प्रकाशलाई पनि वहकाई प्रजाहरूका खेत लुटी विग्रह गरीरहँदा ४ महिना पछि राजा जय प्रकाश मल्ल वहुतै रिसाई दल सहित गरी आफै युद्ध जाई भाई सित लडाई गरी देवपत्तन देखि लखारी भक्तपुर सम्म भगाई पठाया । भाई नरेन्द्र प्रकाश दाज्यु देखि वहुतै डराई रणजित मल्ल राजाका शरण गया । रणजित मल्लले अघि बाज्याहरूका पालामा कान्तिपुरबाट भागि आउन्या राज कुमार सदाशिव मल्ल राख्याको चोकमा राखी खाना पिना दी राख्या नरेन्द्रप्रकाशमल्लहरू वहुतै लाचार भैराख्याका थिया । केही वर्ष पछि शून्य मा गया । राजा जयप्रकाश

मल्लले ती मुखिया काजीहरू देखि दगागरी आफुदेखि टाढा गरी राखि छोड्या। ती थरि काजी मुखियाहरू पनि मिली गुप्तसंग षेल कमाउन लागिरह्या कै थिया। कान्तिपुरकाराज्य भक्तपुरका राजाले दषल गर्दा समय बाबाका पालादेखि का मुख्य काजी मंगल ठकुरलाई पोसी मासकी पतककी सुपु मासकी कन भक्तपुरका राजाले लियाको मेरो राज्य दषल गरीदेउ भनी २१४ महिना बादा दि मुख्य काजी गर्‍या। राज्य हात लिनाको उद्योग गरी रहँदा समय बाडे भिकि दिन नपकी मेरा राज्य अरुले लियाको हेरी मात्र रहन्या आफ्नु राज्य अरुले लियाको आफ्नु गर्न नसकन्या भनी राजा जयप्रकाश मल्ल अप्रसन्नभै भंडार खालमा केही सल्लाह गर्नु पर्छ भनी डाकि लगी मारी कसैले थाह नपाउन्या गरी इनारमा खसाली माटाले पुरिदिया। याहाँपछि कान्तिपुरका काजप्रमाणहरू कन जंमागरी राजा जयप्रकाशले भन्या मेरा द्रोही शत्रु नाश गरी सक्यों अब तिमी हरुले मेरा भरतक गरी सेवा मर सेवा गर्‍या अनुसार बक्सौंला भनी मुख्य काजी न भै राज काज होइ सक्तैन लौ काजी हौ भनी एक दुई जना लाइ भंदा कसैले पनि राजाको उग्रस्वभाव देखि काजि हुन कबुल गरेनन्। पछिबाट उपाध्या भानुलाई काजी गर्‍या। याहाँ पछि ... सबजमा गरी आफु समेत जाई भक्तपुरमाथि चढाई गरी आदि राज्य हात लिन गया, हात लाउन नसकी फर्कि आया। याहाँ पछि बाहुन काजी कन पोसी टौडिक लाईमुख्य काजी गरीदिया संवत् ८६३ कान्तिपुरका राजा एक्ला भइरहँदा भक्तपुरका रणजित मल्ल राजाले कान्तिपुरका राजाको राज्य भै रह्याका पल्लो चोक आदि ७।८ गाउँहरू जितिली याहाँ पछि विष्णुमल्ल राजासित मिली भक्तपुरका रणजित मल्ल माथि चढाई गरी आफ्नु राज्य मध्य केहि हल्ल लाई दाप्चा फुल बारीका कोटघरमा आफ्नो लगाई फर्कि आया। ललितपुरका राजा विष्णु मल्ल परलोक भया पछि भाई राज्य–प्रकाश मल्ल राजा भया। २ भाई दुइ शहरका राजा भै सुखसम्भोग गरी रह्याका थिया। राजा आफ्ना बाबा जगज्जयमल्ल कापाला देखि गोर्षाका पृथ्वीनारायण शाहाले पश्चिमको राज्य दखल गरी राख्या को र पूर्व पट्टिको राज्य भँवरकोट दुवुचौरकोट आदि ग्रामहरू भक्तपुरका राजाले दखलगरी राख्या को हुनाले राजा जयप्रकाशले त्यस बेला फिराई लिनानिमित्त घेरै फेरा चढाई गर्‍या। तैपनि आफ्ना मुलुक सब आफ्नो भयाको थिएन र काशीरामथापा प्रभृति थरी मुखियाहरू काजी हरूलाई आफ्ना मुलुक हात लाउनु भनी भारादि राख्याकोथियो। यिनी हरूले राजा जयप्रकाश मल्ल संग ज्यादा प्रीति नहुनाले हामीहरूले कतै मिहेनत गर्‍यापनि राजाले हामीहरू माथि को दगा छोड्न्याछैनन् कारण अघि हामीहरूले नरेन्द्र प्रकाश मल्ल कान्छा भाईलाई पाँचग्रामको राजा गराउँदाको रिस इनले छोड्याको छैन भनी राजाको अन्तकरणको मतलब थाहा पाई मुलुक लिनामा बेस गरी चित्त नलाई केही उद्योग गर्‍या भईं मात्र गरी रह्याका थिया। याहाँ पछि राजा जयप्रकाश मल्लले आफ्ना मुलुक घेरै वर्ष संम पनि हातलाइ नाददा अघि मेरा बाबाका पालामा पनि इनीहरूले मलाई राजा नगराई भाईलाईराजा

गर्न भरसक गऱ्याथ्या इनीहुरुले कदापी मेरो सब मुलुक हात लाई दिन्या छैनन् भनी ठानी मनमा दगा राखी संवत् ८६६ श्रावण शुक्ल पूर्णिमाका दिन रिसाई गै नन्दिग्राममा वास गरी चावहिल गणेश समीप गौरी घाटमानै मन्त्री स्नान गर्न लागिरहेका काशीराम थापा हरि कार्कीका छोरा र वलि वन्स्यात बूढाथोकी विष्ट प्रभृति पर्वतीय उमरावहरूलाई जवर्जस्ती संग पक्री प्रजाहरुले सुन्न्या गरी के भने भन्या इनीहरू लाई मेरा अघिको राज्य पश्चिम नुवाकोट आदि ग्रामहरू र पूर्व भँवरकोट दुबुचौरकोट आदि राज्य हात लाई देउ भनी अनेक तरह सँग भन्याथ्या भन्या भन्या माफिक सबै थोक पुऱ्याइ पनि दियाँ तै प न इनीहरुले लौ भनी दिलासा मात्र दी केही उद्योग नगरी यति दिन संम बिताया । भन्न सारो आफना हात का राज्य साँखु चाँगु पनि भक्तपुरका राजाले लिन आया । यसो भया पछि मविग्रने भयाँ तिमिहरूले भन्या माफिक मेल गरि सक्याँ अब तिमी हरूलाई क्षमागरी छाड्न्या छैन भनी बहुतै रिसाई यस्ता कुरा गरी उमरावहरुले आफ्ना शिरको पगरि उतारी जमिनमा राखी बहुतै प्रार्थना गरी हेमहाराज हामीहरुले केही उद्योग नगरी रह्याका होइनौं १०;१२ दिन पाव वक्सनु हवस शत्रुले लीराखेको सब मुलुक निश्चय हात लाइ दिउँला पावा टऱ्या उप्रान्त पनि मुलुक हात लागेन भन्या हामीहरूलाई जसो इच्छा छ उसैं माफिक गर्नु होला भनी कटहर आदि फल फूल धेरै चढाई अनेक तरह सँग बिन्ति गर्दा पनि ... जयप्रकाशमल्ल बहुतै रिसाई तिमीहरूले मलाई ५,६ फेरि आशा भरोशामात्र दी ढाट्यौ अब म कदापि ... हिरुका वचनको पतीत मान्या छैंन कान्तिपुर शहरमा जाऔं हिड भनी हुकुम हुन्या बित्तिकै ती उमरावहरू उठी बडो वेग सँग भाग्या । मधिस्या सिपाहीहरुलाई हुकुम दीं समात्न लगाई उमरावहरू ८ जनालाई मार्न लाया । सिष्वाण काजीकन पनि माऱ्याँ टौडिक आदि काजीहरू भागि गया । राजा जयप्रकाशले आफ्ना बडावीर उमरावहरूलाई माऱ्या भन्ने यही खवर गोर्खाका राजा पृथ्वीनारायणसाहले नुवाकोटमा सुनी बहुतै हर्ष मानी लडाई गऱ्या । याहाँ उप्रान्त ती मारिएका उमरावहरू का परिवार सन्तान परशुराम थापा प्रभृति उमरावहरू मिलि आफ्ना दाज्यू काशिराम थापा आदि उमरावहरू लाई माऱ्याको रिसले सम्मत गरी गोर्षाका राजा पृथ्वीनारयण शाह लाई भक्तपुरमा बोलाइ ल्याई साँपुचाँगु दषल गराया । साँपु चाँगुमा कसैलाइ जान आउन न दि राखदा आफ्ना सैन्य सिपाहि जम्मा गरी जयप्रकाशमल्ल शुद्ध ज... लडाई गर्दा ठानामा रह्याका गोर्खाली सैन्य हटाउन नसकी फर्कि आया ।

यहाँ पछि कान्तिपुरका प्रजाहरुले राजा संग अब कसो गर्न्या हो भनि बिन्ति गर्दा ठाना बसि रहन्या लाइ उठाउन सकन्या सुरासुरा काजीहरू अघि लगाइ जानु पऱ्यो भनि आज्ञा गऱ्या । ताहा पछि राजाले केहि नबोली रहदा कान्तिपुऱ्या प्रजाहरू ललितपत्तनका राजा राज्यप्रकाशमल्ल छेउ जाइ गुहार माग्या र राज्यप्रकाशमल्लले पनि प्रजाहरुको बिन्ति सुनि मदत गर्नालाई आफ्ना सब सैन्यहरू लाई जाउ भनि

खटाई डाक्रया प्रमाणहरू उमराव हरुसमेत लाई लड़ाई गर्न पठाया ।

त्यस्का २।४ दिन पछि जयप्रकाशमल्लका ५ वर्षका बालष छोरो लाई देवपत्तनमा लगि राखि उमरावहरू मान्याका दिन भागी आउन्या टौढिक प्रमान आदि काजिहरू लाई डाकी प्रजाहरू र काजि एक भै मिलि जयप्रकाश मल्लका पुत्र लाई राज्याभिषेक दिन लाग्दा जयप्रकाशमल्लले थाहा पाई तलेज्यूका देवालय भित्र जाइ लुकि रह्या

याहाँ पछि जयप्रकाशमल्लका पुत्र कन जोतिप्रकाश मल्ल नाम गरी राजा प्रजा प्रमानहरू मिलि साघु चोंगु माथि चढाइ गरी १००।२०० मानिस मारी पृथ्वीनारायण साहका सैन्यलाई हटाइ पठाया त्यो समय आश्वि मैह्लाथियो । जयप्रकाशमल्लले दशैंको कर्म स्थापना आदि गरो सक्याका थिया । नवमि-का दिन इन्द्रचोक घरमा उपाध्या वासी भाजु पूजा गर्न आउदाजयप्रकाशले थोरै मानिस जम्मागरी उपाध्य भाजुका घर वेरि घर लुट्न आउदा उपाध्या भाजु भागि ललित पत्तन गया र नवमी पुजा वेलामा गर्न नपाउदा उपाध्या भाजुको भाईलाइ बोलाई, दर्बार लागि आधारातका समय नवमीपुजा चाहि चाडै गराइ जयप्रकाश मल्ल भागि जाइ पहिले पाटनका काजि कालिदासका घर र ताहाँपछि आफ्ना भाइ राज्यप्रकाश मल्ल भयाका ठाउमै ताहाँपछि पाटनमा भागि आउन्या उपाध्या भाजुलाई कान्तिपुरमा पठाइ दशमि कर्म गराया । संवत् ८६६ कातिक बदि १ रोज शुक्रवारका दिन जयप्र-काश मल्ललाई सतिगल् घरमा वास दि ललितपत्तनका काजिहरू तह्लौलमञ्जुङ्का उमराउहरुले जयप्रकाश मल्ललाई फेरी तिमिलाई कान्तिपुरका राजा गराउला भनि बोध दि राख्याका थिया । याहाँ पछि जयप्रकाशमल्ल लाई दुर्दशा प्रभावले दुःख पाउनु थियो र जयप्रकाशको चित्त चंचलभै

: : मैह्ला सम्म सतिगल घरवास गरी सक्या उप्रांत भक्तपुरका राजा रणजित मल्ल सित शरण जाउं भन्ने चित्तमा आयो र काठछे सम्म गया पछि प्रमाणहरू उमरावहरु जाइ बुझाइ भक्तपुर जान दियेनन् । फेरि १ मैंह्लासम्म काठछेमा वासगऱ्या । फेरि जान लाग्दा ललितपत्तनका काजि उमराउ हरु जाइ बोध दी थाम्या । त्यस पछि ४।८ दिन वहि वासगरी पुलचोक ग्राममा जाइ एकमैंह्ला सम्म वासगऱ्या । फेरी देवपत्तन जानाको इच्छा भयो र देवपत्तनमा जाइ १ रात-वस्या । भोलि पलट रात्रिविषे कान्तिपुरका प्रजाहरु देवपत्तन जादा जयप्रकाश मल्ल भागी फेरी पुल-चोक मै गया । ताहाँ पछि मातातीर्थमा जाई वासगऱ्या । यहि साल संवत् ८६७ वैशाख शुक्ल अष्टमीका दिन महापाल्मा मछिन्द्रनाथका रथ अड्कि रहदा मानीसका स्वरुप कोई एक आई देवता छोइ दर्शन गरी गयो । उसलाई कसैले चिह्नपनि सकेनन् त्यस्ले देवता लाई छोएको हुनाले शान्ति गऱ्या । पशुपति नाथमा पनि महास्नान राज्यप्रकाशमल्लले गराया । ज्येष्ठ शुक्ल दशमि आदित्यवारका दिन जावलाखेलमा मछिन्द्रनाथ जात्रागरी लैजादा आस्लो भाचियो र आस्लो फेर्न लाग्दा रथ ढल्यो ।

देवतालाई भिकि पाटिमा राखी ४।५ दिन भित्रमा रथ सिध्याई आदित्यवारका दिन रथमा देवताकन राख्या । सोमवारका दिन जात्रा गर्दा फेरी आग्लो भाचियो । फेरी आग्लो फेरी जात्रा गर्दा आग्लो फेरी पनि भाचियो रथ पनी ढल्न लाग्यो यसरी आठदिनका विचमा २ फेरी रथ ढल्यो यस्तो भयाको कसैले सुन्याको पनि थिएन भोलि पल्ट ठूला ठूला काठ ल्याइ टेवा लगाई रथ चढ़ागरी शांति पूजा गरी बहुतै मुस्कील संग जात्रा संपूर्ण गर्‍या ।

याहाँ पछि आषाढ शुक्ल त्रयोदशि बृहस्पति वारका दिन मातातीर्थ बाट उठि जयप्रकाशमल्ल ठिमिमा जाइ बास गर्‍या २।४ दिन पछि भक्तपुरमा जाइ २।३ महिना बास गर्‍या । ताहा पछि भक्तपुरका राजाले साँधु चाँगु लिन कन उद्योग गरी जयप्रकाशमल्ललाई नजर बंदिराषन आट्या र त्यो मतलब जयप्रकाश मल्लले थाहापाई अब याहाँ बसि मेरो भलो हुन्या छैन भनि मनमा विचार गरी देवपत्तनमा श्रीगुह्येश्वरीका स्थानमा आई १।२ महिना बासगर्‍या ।

ताहाँ पछि रात्रि विषे पंच लिंग भैरवको दर्शन गर्नाको इच्छा भै जादा कान्तिपुरका प्रजाले देषि बहुतै करुणा गरी अभय वाचा बाधि प्रमानहरु सँग भनि ल्याई दर्बारका एकचोकमा बास गराया । पछिबाट कान्तिपुर्‍याका काजीहरुले जयप्रकाश लाई दर्बारमा तिमिले बस्नु हुँदैन बाहिर शहरका १ चोकमा बास गर भनि ३।४ फेरा भंदा प्रजा हरुले उसो काहा हुंछ भनि भन्नु सकेनन् र याहाँ बसी मलाई भलो हुन्या छैन भनी गोदावरी संधिमा बस्नु गया । यस्तै समय जयप्रकाश मल्लकी रानी दयावतीले कान्ति- पुर्‍याकाजीहरुका बुद्धिमा लागी ललितपत्तनका काजीहरु हात ली जयप्रकाश मल्ल लाई गोदावरी संधि बाट भगाउदा जयप्रकाश मल्ल गोकर्णेश्वरमा गया । ताहाँ पछि केहि दिन बसि भयमान्याहरुले हामी- हरुकन अपजश होला भनी ताहाँ पनि बस्न दियेनन् र काहिं बास न पाई बहुतै दुःख पाई श्रीगुह्येश्वरीका चरणमा शरण गरी बस्न गया ।

ताहाँ पछि राजाले विचार गरी अबत जेसुकै भयापनि यहा बाट उठि दोश्रो ठाउमा जान्या छैन भनि केवल ईश्वरीका चरणमा शरण ली बस्ने आधार गरि नित्य सेवा जप स्तोत्र गरी रह्याका थिया । यस्तै समय गोर्षाका राजा संग कान्तिपुरका काजिहरुले हाम्रा जगा छाडी देउ भंदा जयप्रकाश मल्लकन कान्तिपुरमा आइ राजा भया भन्या हामिले लियाका सब राज्य तिमिहरुका हात सपुर्त गरौंला भनी गोर्षाका राजाले भन्या तह्नौंका राजासंग पनि ललितपत्तनका काजिहरुले त्यस्तै कुरा गरेमा पनी जयप्रकाशमल्ल लाई कान्तिपुरमा बास भै गयो भन्या लामो डाडा तिमिहरुलाई सौंपौंला भन्ने जवाफ दिया यस्ता तरहले कान्तिपुरका काजिबरु र ललितपत्तनका काजिहरुले हामो जगा छाडि देउ भनि भन्दा गोर्षाका रतह्नौं लमजुङ्का काजिहरुले यस्ता तरहका जवाफ दियाका थिया । जयप्रकाशमल्ल राजा केहि दिन सम्म श्रीगुह्येश्वरीका चरणका शरण गरी रहँदा राजाको सेवा देषि ईश्वरी प्रसन्न भै एक कोहि

जोगिस्वरूपका हातबाट खड्ग दान दिलाया । आपना गादीमा पुत्र जोतिप्रकाशमल्ललाई राखी दया-
वती रानी र टौढि प्रभृति काजिहरुले पुत्रकन राजा गरायाको र ४ वर्ष पुगि पाचौं वर्ष लाग्दा ईश्वरी
बाट खड्ग दान पाउदा अबत मेरा दुःख हरण शत्रुका मरण हुन्या लक्षण आयो भनि जयप्रकाशले
धैर्यमन गरी रह्याका थिया । यी राजाजयप्रकाश मल्ल आपना राज तखत् बाट पतित भै दुःख पाउदा
इनका साथ न छाडी रह्याका वंशिधर मास्की अजित्सि मास्की घ्यौमचा आदि २०।२५ जना मानिस
मंत्रीहरू साथमा थिया गुह्येश्वरीका स्थानमा वास गऱ्या पछि जागेश्वर वैद्य पनि राजाका चरणमा आई
आफ्ना घरमा भयाको सरजाम ल्याउदै भोजन गर्दथ्या । यी राजाका महतारी कुमुदिनी रानिबाट पनि
छोराले बहुतै दुःख पायो भनि गुप्तसंग गहनाहरू बेचि रुपैया बारं बार दी पठाउने गरेकी थिईन् ।
यस्तौ समय संवत् ८७० शुक्ल १० का दिन कान्तिपुरका काजि हरूले अब यो जयप्रकाशमल्ल लाई
देवपत्तनमा राख्नु छैन भनिनिकाल्नु पर्छ सैन्य सिपाहि ली जादा त्यो खबर जयप्रकाशमल्लले सुनी आफुसंग
रह्याका मानिसहरू पठाई देवपत्तनका र तांह संधिका मानिसहरू र कसाहि पोढ्याहरू जमा गरी इश्व-
रीका भित्री मण्डमा जाइ प्रदक्षिणा गरी रहेका बेलामा बडो वेगसंग १ माछा उफ्री आयो सो माछा
जयप्रकाशले बिचैमा टिपि उसै घडि ग्रास गऱ्या । यति प्रत्यक्ष पाइ ईश्वरीबाट ठूलो अनुग्रह भयो भनि
खुसि भै साष्टाङ्ग दण्डवत् प्रणाम गरी जयप्रकाशमल्ल बाहिर निस्की संधै आपना साथ रह्याको खुडा
ले सानिनाम घोडा माथि सवारभै जोगिस्वरूपले दियाको खड्ग हातमा ली प्रस्थान गरी आउदा
गौरीघाट् संधिमा कान्तिपुरको काजी प्रजाहरू संग भिडियी उस बखतमा जयप्रकाशमल्लले ठूलो शब्द गरी
हेप्रजाहरू तिमिहरू निर्दोषि हौ तिमिहरू एकातिर सर मेरा द्रोहिहरू सँग म लड्छु भनि शस्त्र प्रहार
गरि पैले ४।५ जना कन मारि हटाइ ल्यायी कसैलाइ गौरीघाट् संधिमा माऱ्या । कतिलाई कसाहि गाउं
संधिमा माऱ्या । कसैलाई हाडिगाउं संधिमा माऱ्या र कान्तिपुऱ्याकाजिहरू सैन्य सिपाहिहरू सहित जता
जता पायो उता भागि गया । जयप्रकाशमल्ल सरासर जाई सोकनढोकाबाट भित्र पसि कान्तिपुर
सहर भित्र प्रवेश गरीं सिंहढोका बाट तलेज्यूमा जाइ देवालय प्रदक्षिणा गरी ढोकामा साष्टाङ्ग दण्डवत्
प्रणाम गरी दक्षिणा चढाई आफ्ना पुत्र जोतिप्रकाशमल्ल कन काखमा राखि भयालमा बसि प्रजाहरू-
लाइ बोलाई हेप्रजाहरू कान्तिपुरका राजा जोतिप्रकाशमल्ल यै हो म देखि केहि संदेह मान्नु पर्दैन
एकमाना पाई बालक पुत्र को रक्षागरि राजकाज गरी रहुँला हाम्रा मुलुक अघिदेखि शत्रुका हातमा
पऱ्याको फर्काई लिन उद्योग गर्दा तिमि हरुले भरसक गरि मेहनत गरि दिया भनि प्रजाहरुलाईमधुर
वाणिले बोध गरी सुनाई सब प्रजाकन खुसि गराई हात लिया । प्रजाहरूले पनि हेमहाराज अघि हामि-
हरू बाट भयाको सब अपराध क्षमागरि प्रसन्न हुनु होला चरणको सेवा हामिबाट सक्याभर गरुंला
अब उप्रान्त शत्रुका हात पऱ्याको राज्य भिकदा खेलखंड गर्न्या र नगर्न्या माथिविवेक गऱ्या जाला सास्ती

प्रसादको धन हजुर हुनु हुँछ भनि प्रजाहरूले विन्तिगन्या। याहापछि ती भिष्वाल तुइष्वाल आदि दुष्टकाजि हरूलाई समाइ मारि जमलोक पठाया। थंबुकोठामोच्यार हुल नायक हरू साँनजना लाइ पनि मान्या। मुख्य काजि टौढक र जयप्रकाश मल्ल कान्तिपुर प्रवेश गन्या भंन्या खवर सुन्ने वित्तिकै मनोरथसि लाइ मेरा परम शत्रु कन तैले बुइगलमा लुकायि छस् भनी सर्वस्व हरण गरीं लिया। दयावति रानी लाई विगान्यो गरुडसिंह भडेलले षबर जाहेर हुनि वित्तिकै गोर्षाका राजासंग शरण जाइ जीव वचायो यहि शत्रु साधन गर्न नपाउदा राजा बहुत दिक थिया। यिनै रानि संग विराउ भयाका उपाध्या भानु भक्तपुर भागि रहन्या लाइ भन्या मान्या। यस्ता तरहसंग राजा जयप्रकाशमल्लले छुल्या शत्रु हरु संहार गन्या। कोहि काजिहरू र जयप्रकाशमल्ल दोष डराई विष षाई मन्या। दयावती नाम रानी लाइ बडो दुष्टिनी ठराई आफ्ना स्वामी मलाइ त्याग गरी दुष्ट काजि गरुडसि भडेल संग रत भै सत्य छाडि परपुरुष तुल्या-उन्या भनि बंधनैमा मान्या।

ताहाँ पछि ललितपत्तनका राजा भाइराज्यप्रकाश मल्ल का स्त्रीहरु १६ थियार स्त्रीहरुका विरोधले नेत्ररोग दीर्घ भै अनेक तरहसंग औषधि गर्दा पनि आराम नभै रहदा जोतिष देखाउदा गणे शको दोष भनि ठहराउदा र चोभारका गणेश को देवालय वनाई गजुर चढाइ प्रतिष्ठा गर्दा भक्तपुर कान्तिपुरका राजा मंत्रिहरुलाई निमंत्रणा गन्याका थिया। भक्तपुरका राजा रणजितमल्ल गणेश दर्शन निमित्त आया कान्तिपुरका राजा जयप्रकाश मल्ल भन्या २१ फेरा सम्म अनेक विनि गरी बोलाउन पठाउदा पनि आयेनन् झन् सारो पाटनका लगाभित्रको कोत हरुमा आगोलाइ दिया। श्रीगणेश दर्शन छाडि यस्ता तरहको बुद्धिगन्याको खवर सुनि कालिदास धनवंत मंत्रिले गोर्षाका राजा पृथ्वीनारायण शाह कन पत्र लेषि नुवाकोट् दषल गरी लेउ भनि पठाउदा गोर्षाका राजाले अवसर पाइ दखल् गार लिया। राज्यप्रकाश मल्ल राजाले चोभार गणेश स्थानमा ४ दिन वास गरि विधिपूर्वक प्रतिष्ठा कर्म गरी शहर फर्क्या।

याह पिछि जयप्रकाश मल्लले नगर्कोटि हरु झिकाई सिपाहि वनाइ नेपालमा राजाका करार गन्या। दर्माह दिना निमित्त पशुपतिनाथका भण्डार खोलि पनि लिया। यछे महालक्ष्मीका अगाडी को धम्वा ढालि सुनका सिंह रातमा उठाइ कान्तिपुरमा ल्याया। यस्तै अनेक उपद्रव गन्या। संवत् ८७३ चैत्र मैह्नामा राज्यप्रकाश मल्लका पुत्र परलोक हुदा भया। पछी वैशाख शुक्ल तृतीयाका दिन गोर्षाका राजा पृथ्विनारायण शाह नेपाल खाल्टामा प्रवेश गरि ललितपत्तन राज्य फर्पिङ् चितलाङ्ग आदि ग्रामहरु दषल गरि लिदा।

याहा पछि भिष्वान धनश्याजिले सैन्य सिपाहि जमा गरी लड़ायी गरी आफ्नु मुलुक आफ्ना गन्या। संवत् ८७४ मा कान्तिपुरका काजि त्रिकुटि मास्कीले पनी नाला दुममा चढ़ाई गरी मुलुक जिति फर्कि

आया संवत् ८८६ आश्विन कृष्ण परेवाका दिन गोर्षाका राजा पृथ्वीनारायणशाहले कान्तिपुरका राज्य धर्मथली दषल गरी लिया संवत् ८८६ आश्विन सुदी सप्तमीका दिन जयप्रकाशमल्लले धानछेका काजी कालिदास लाइ नगर्कोटी सिपाहि पटाई चोकको पाटिमा बसी रह्याका वेलामा शिरमा पर्शु प्रहार गरी मान्या । यहि खबर पृथ्वीनारायण शाहले सुनि खुशी भयाको वढाइ गन्या ।

तांहा पछि गोर्षाका राजा पृथ्वीनारायणशाहले नेपाल खाल्टा भित्र प्रवेश गरी ललितपट्टानका राज्यहरुमा धेरै ग्राम दषल गरी लिया । फेरी येहि समय गोर्षाका राजाले थान्कोट बलम्बु सतुंगल दह्चोक दषल गरी किर्तिपुर दखल गर्न निमित्त भ्रमसिपेलमा डाना बस्न आउदा राज्यप्रकाशमल्लका सेना र जयप्रकाशमल्ल राजा धेरै सैन्य जमा गरी लडायी गर्न जाइ पन्या । ठुलो लडायी भयो यो लडाञी हुदामा जयवागेश्वरीदेवीआपना देवालयबाट भ्कर्भराकार गरी केहि स्वरुप हिडाइ जाई लडाञी हुदा देवीका प्रभावले घनघोर अना युंदको भारी लडाञी भयो । यो लडाञीमा देवपत्तनका सिपाहिले प्रथम प्रहार गन्या । यसै लडाञीमा सुरप्रतापस हाका नेत्रमा तीर लागी एकछिनैमा गयो । कालु पाडेकाजी पनि यसै लडायेमा पन्या अरु गोर्षाका काजि भैयाहरु समेत धेरै सेनाहरु सम्हार गन्या घडि १२ सम्म बडो युद्ध हुदा दुइतर्फका लस्कर मध्ये देशदेखि ल्याई दर्माहदी राष्यका सिपाहि हरु र अरु प्रजाहरु सेनाहरु गरी बाह्र सयेजना मानीस सम्हार भयो यस्ता तरसँग लडायीहुदा गोर्षाका राजा पृथ्वीनारायण शाहका असल सुरा सुरा काजी उमराव सिपाहि धेरै मारिदिया । पृथ्वीनारायणशाहले आफ्नु जीवको अन्सय गरी दह्चोक डाडा चढी भागी जादा एक कसाई र पुतुवारले बोकि रातारात गरी नुवाकोट्मा पुन्यायी दिया

याहां पछि कसाई पुतुवार लाई मेरा माथि इनिहरुले बहुतै गुण गन्या भनि खुसिभै मेहर्वानि गरी राख्या। पुतुवार लाइ नजिक गरि राख्या। याहां उपरान्त जयपकाशमल्लले गोर्षाली सबै शून्य भयो भनि बडो हर्ष गरी बढाइ गरी कान्तिपुर फर्कि आया विचार नगरी फर्कनाले जयप्रकाशमल्ल राजा चुक्या । यिन दिन देष गोर्षाका राजा पृथ्वीनारायण शाहले आफ्ना असल सुरा सुरा काजि उमराव सिपाहि हरु धेरै लडाईमा मर्दा आफ्नु बल घटन गएकोले चढाई गर्न नसकी रहेता पनी नेपाल लिनाको इच्छा नछोडि फेरी लडायी गर्न निमित्त सैन्य सिपाहि बटुल्या जमागरी ६।१० वर्ष सम्म यहि उद्योगमा लागी रह्याका थिया । त्यस बीचमा गोर्षाका राजाको भय दूर हुन गै जयप्रकाशमल्ल बहुतै आनंद सित रहदा कोहि समय हनुमन्तिमा वज्रेश्वरी र लुटिदेवीका समीप केटाकेटी ठूला साना जमा भै एकै शहरका मानिस दुइ पक्षभैं ढुंगाले हानि जुभ्रेलाउये योगीत अधि कान्तिपुर शहर बसाउदा संपूर्ण गर्न्या राजा गुणकामदेव का पालादेखी श्रीकुमार देवता राजा माथि प्रसन्न भै स्वप्नमा दर्शन दी वर्षपूर्ति एकपक्ष अघिदेषी सिठी चथु सम्म ढुगाको जुभ्रेले गाई परचक्रको भय देशोपद्रव निवारण होला भनि चलाइ राख्याकोमा यि

राजा जयप्रकाशमल्लले मनाही गरी दियाका थिया । रात्रिमा वडो भयंकर शब्द बोवर भयाको राजा प्रजा सबैले सुन्या र यो कुरो मनाही गरी वढ़िया रहेनछ भनि फेरि सिठि खेलाया । यहाँ उप्रान्त संवत् ८८० भाद्रवदि चतुर्दशिका दिन ललितपत्तनका राजा विश्वजितमल्ल लाई चाकुवाहालका काजिका छोराले छल गरी परलोक गराउदा जयप्रकाशमल्लकन ललितपत्तन लेजाई राज्याभिशेक दिया । यिन राजाले दुवै सहरको भोग गरी रहदा अघि कान्तिपुरमा बाहिर राख्याकि यौटि स्त्री पाटनका धंचा जोसि संग गया कि थियिर जयप्रकाशमल्लले शत्रु संहार गर्न निमित्त धंचा जोसिलाई टकसारको काम दिउँला भनि बोलाउदा धंचा जोसिले मलाइ मार्नाको जुक्ति गऱ्या कोहो भनी ठानि वहुतै डराई भिष्वाल धनकाजिका शरणमा गयो र भिष्वाल धनकाजिले जयप्रकाशमल्ल लाई टेकु दोभान् तीर डुल्ने वखत पारी उतै बाट कान्तिपुर धपाइ पठाया । भक्तपुरका राजा रणजितमल्ललाइ नै ल्याइ संवत् ८८२ ज्येष्ठ मैह्लामा राजा मऱ्या । रणजितमल्लले पनी राजकाज गऱ्याको निकोनमानि तिनी लाई पनी भक्तपुर धपाइ पठाया ।

यहाँ पछि फेरि ललितपत्तनका काजिहरू कान्तिपुर आइ जयप्रकाशमल्ल लाई वहुतै तरह सँग मानि फेरि ललितपत्तन ल्याई राजा गऱ्या ६ मैह्ला सम्म राजा गरी सक्या उप्रान्त ललितपत्तनका काजिहरूसँग चित्त न मिलि बाहिर मिलि राख्याझैं गरो रहि मनमा दगाधरी कान्तिपुर आया इन्द्रचोक घरका देवानन्द उपाध्या भाजुकन ललितपत्तन पठाइ थार्लाछ काजि धनवंत भिष्वाधन आदि यी प्रधान-हरू लाई जयप्रकाश मल्लका आज्ञाले सात पुर्खाको धर्म दी सत्यवाचा बंदेज गरी राजाले बोलाया भनि अनेक तरह सँग सत्यवाचा गरी कान्तिपुर ल्याका । कान्तिपुर आया पछि जयप्रकाश मल्लले सत्य छोडी सबै काजिहरूलाई बंधनमा राख्या । भिष्वाल धनकाजिले जयप्रकाशमल्लको बंधनमा म रहन्या छैन । पृथ्विनारायण शाहनक सलाम गर्न्या छैन भनि प्रतिज्ञा गऱ्याको थियो र बंधनमा पार्दा आफ्नु कम्बर बाट शस्त्र झिकि मुट्ठमा रोपि प्राण त्याग गऱ्या यो कुरा पाटनका प्रजाहरूले थाहा पाई हुल उठि रात्रिका विचमा अटकनारायणका स्थान सम्म पुगेका थिए । जयप्रकाशमल्लले खवर पाइ २ जना लाइ मारी ५ जना लाइ समाई हटाइ पठाया । त्यस पछि ती ललितपत्तनका ५ काजिहरूकन स्त्रीको पोशाक पैह्लाइ आवरूली फाजत गरि छाडि पठाया । त्यही बेला ललितपत्तनका प्रजाहरू लाइ गोर्खाका राजा पृथ्वीनारायण शाहका हजुरमा जाई हाम्रा ललितपत्तनमा राजा शून्य भयो । हजूर लाई राजा मान्न आयौ भनि विन्तिगर्दा राजाले आफ्ना भाई दलमर्दन शाह साटो पठाइ दिया । केहि दिन राज्य भोग गरी सक्या उप्रान्त पछि बाट नुन कपास बंद गरी दिदा दलमर्दनशाह लाई नै राजा गरी पृथ्वीनारायण शाह संग जुद्ध गऱ्या । तै पनि नुन कपास पठाइ न दिदा दलमर्द शाह लाईहरू त बाट गिराई गोर्खातिर धपाई पठाया । यहाँ पछि पाटन शहर वासी ठाकुर तेजनरसिंह मल्ललाई राजा थाप्या । यसै

समय एका एक मोहन चोकमा शीतला प्रवेश भै राज पुत्र कीर्तिप्रकाशमल्ल परलोक भया । आफ्ना कुलका रीत अनुसार पलङ्गमा राखी श्मसानमा लगीयथाक्रमले जलाया । याहाँ भंछ तिरौंनिया ब्राह्मणहरू हजुरमा नजिक रह्याको काजी हरूले हेर्न नसकद। तिरौंतिया हरू भागी नुवाकोट जाई पृथ्वीनारायणशाहसंग मिल्न गया । भक्तपुरका राजा रणजितमल्लले अब जयप्रकाशमल्ल निसन्तान भैंगयो भनी विस्क्याट जात्रा हेर्न जान्या कान्तिपुर वासीहरूलाई यिनिहरूको ठरसा ठूनोहो भनी नसही छेकिराख्या । यस कुराको जयप्रकाशमल्लले मनमा दगा राखीरह्याका थिया र शतबीज छर्न आउन्या मन मतीपारका प्रजाहरू सबै छेकी देवपत्तनका कोटमा वन्ध गरी ३ मैह्ना सम्म छेकी धेरैं रूपैया लिई घपाइपठाया । फेरी यिन राजाले लड़ाई गर्न निमित्त मधेसिया सिपाहीहरू पाली फौज बढ़ाइ राख्याको थियो । ती सिपाहीहरूलाई खाना खर्च तलब दिनु पर्दा ललितपत्तनका राजा विष्णुमल्लले चाँदिका जलहरी बनाई श्रीपशुपतिनाथकन चढ़ाइ राख्याको थियो भनि भंदा पशुपतिनाथका दक्षिण दर बाजा सम्मुखको धर्म शिलाउठाई त्यसठाउँको सुनको जलप लायाको धातुको भाँडा दर्शनहरू भिकी ल्याई सिपाहीहरू लाई तलब दिया । जयवागीश्वरीका भंडार भित्रको धन पनि लिई खर्च गर्‍या । ठाउँ ठाउँका देवालयको गजुरहरू पनि भिक़्या । यस्ता तरहसंग देवताका स्थान स्थानमा रह्याका माल लिई खर्च तुल्याया । मेरा फत्ये भैंगयो भन्या देवता हरूलाई दोवर द्रव्य चढ़ाउला भनीलियाकोहो । यहाँ पछि तिनै धन खर्च गरी धेरैं पार्थिव पूजा गर्‍या । फेरी वैरीको पातिर नगरी तुनजादेवीको देवालयको जग पुरानो भयो भनी जगा बनाई दिया । प्रतिष्ठा गर्दा धेरै बाजा नाच बनाई दरबारमा भीमसेन आदिधेरैं देवनाकन निमन्त्रणा गरी देवताहरू लाई पूजा मान्य गरी यथा क्रमले वडो जात्रा गराया । फेरी सिभुका लिङ्गविग्र्यो र नयाँ लिङ्ग बनाई खडा गरी बौद्धमार्गी बाट यथा क्रम गराई लिङ्ग फेरी दिया । एक दिन पंच लिङ्ग भैरवका स्थानमा एक ज्यापूका शरीरमा देवता प्राप्तभै पंच लिङ्ग भैरवका शिला मूर्तिमाथि पलेटीमारी साह्रै कांपन लागिरह्याको थियो । उस बखतमा ताँहाँ रहन्या मानिसहरूले निमि कोहौ भन भनी सोद्धा जयप्रकाशमल्ललाई डायि ल्याउ तब कहन्याकुरो कहुला भन्दा यदि खबर दर्बारमा पुर्‍याया पछि राज्य नष्ट हुन पर्‍यो थियो र राजा लाई अहङ्कार हुन गै मलाई राजा पनि नभन्या भोजखाई मदले मातियाको ज्यापु रहेछ । त्यसलाई छोढ़न्या छेन भनि बहुतै रिसाई दर्बारका नासल चोक ल्यायी क्याहो भनी सोद्धा केही भनाउन न सकदा केहि न भनी काप्न लागी रह्याको ज्यापुलाई टुपि समाई सास्ति गर्न लाग्या । यति गरी हातिका खम्बामा बाधि राखदा बिचमा त्यो ज्यापु मरि गयो भोलिपल्ट त्यस्को सर्वस्व हरण गर्‍या । ताहाँपछि अर्कोज्यापु माथि देवता चढ्यो र त्यो खबर सुनि राजा शुद्धा जाई सोधदा राजातिर मुख न देखाई जता राजा छन् उता कंढो पारी रिसाई जसमाथि हामीले प्रवेश गरी रह्याको उस्लाइ हेला गरीस भने अब तेरा

राज्यको आसन गर्न्यास भनी भन्या र राजाले अनेक तरहसंग बुझाउदा पनि बुझाउन नसकी दर्वार आया । यसै दिनका रात्रीमा कौमारीदेवी वाट स्वप्न दर्शन दी हे जयप्रकाशमल्ल तलाइ वरदान दिना निमित्त तेसका शरीरमा प्रवेश गरी रह्याकी थिया । तैले मलाई अवहेला गरि केहि विवेक न गरी मैले प्रवेश गरी रह्याको मानिस लाई तैले मर्दरि दिइस अव यो राज्यको माया नगर शत्रुको जय होला भनि रीशाई यस्ता तरहको कुरा आज्ञा भएको स्वप्न देख्या जयप्रकाशले मनमा वहुतै संताप मानी विस्मात गरि तुल्याइ पूजा मान्या गर्न्या । फेरी इनलाइ जात्रा वनाई देवीकन सन्तुष्ट गराउना भनि वास्तु चक्र प्रमाणले घर वमाइ दिया यंत्राकार सुन्दर रथ वनाई गण वटुक सहित गराइ कौमारी देविको जात्रा इन्द्रजात्रामा त्रिवार रथारोहण गर्न्या रीतगरी जात्रा वनाया । जयप्रकाश मल्लले सिधुलिपा लचोकबाट लस्कर पठाइ भादगाउ संग लडाई गर्न नालदुम् वाट आई जितपुरकोट् घेर्दा भादगाउं बाट पनिफौज चलाई पृथ्वीनारायणशाहा राजा समेत भै लडायी हुदा श्रीजयप्रकाशमल्ल तिरका लस्करले जिति लगारी पठाउदा राजा पृथ्वीनारायणशाह यकलै भागी आउदा भादगाउंको यौटा ज्यापुले खेतमा जादा देखदा वोकि ल्याइ दरवार सम्म पुर्‍याइ दिदा त्यो ज्यापुमा पछि खोजि सिरपाउ वक्सी झारा वेठ वेगर उघाउनुनी पोता माफ गरीवीर्ता पनि वक्सनु भयो , फेरि भादगाउ वाट गोर्खा फर्कि जानु भयो । ताहाँ वाट पछि नुवाकोटमा वस्नु हुदा नेपालका अवाल वोसिवाला झिकाइ दर्वार वनाइ ताहि राजगर्नु भयाको थियो त्यही वेला नुवाकोट भैरवी आदि देवताका स्थानमा पूजा पाठ पुरश्चरणादि गरि प्रस्थान गरी ठाना हालि आउदा धुलिखेल वनेपा खडगपुर चौकोट पनौति वाट आइ सांगा समेत सात गाउ जिति लिया । पश्चिम पट्टि दहचोक भिमढुंगा वाट आइ थान्कोट पांगा नयाँगाम जिति कीर्तिपुर माथि चढाई गर्न्या । कीर्तिपुरमा ललितपत्तनका काजि टौधि श्रेष्ठ काजिहरू जाई कोटमा वस्याका थिया । तिनीहरू सित लडाई गरी कीर्तिपुरलाई घेरा दीं ढोका वाहिर वाट मद्दत आउन र निस्कन नदिराखदा संवत् ८८६ नष्ट चैत्र शुक्लका रात्रिकोटमा रहन्याहरू मध्यै कोही गोर्खा तर्फ मिल्नजाई गोर्खाली कन कीर्ति-पुरमा प्रवेश गाराउँदा ती गोर्खालीहरू देश भित्र गै प्रजाहरू सामने देखा पर्‍याका धेरै लाई मार्‍या १२ वर्ष देखी उभोका मानिस हरू सवैको अघि शूर प्रताप शाहकन तीरले हानी एकाक्षी गरीरह्याको रिसले नाक काटिदिया । उस हुलमा लुकीरहन्या र भागि जान्याहरूको मात्र नाक बाँच्यो । याहाँ पछि संवत् ८८७ पौष कृष्ण ११ सोम वारका रात्री प्रजाहरू जंमाभै चिराक वाली गोर्खालीहरूकन शहरमा प्रवेशगराया याहाँ उप्रान्त घेरा दिंदा दिंदा पशुपतिनाथका कृपाले र वान पनामा भक्तपुरका कौमारी-का हात बाट प्रसाद पायाको प्रभावले भाग्य सहाय भै देवपत्तनमा प्रवेश गर्दा वडो जयशब्द भयो । यिनै राजा पृथ्वीनारायण शाहको ठूलो कीर्ति यही हो । पृथ्वीनारायणशाहका प्रताप ठूलो हुनाले सवत् ८८७ साल आषाढ शुक्ल प्रहिपदाको दिन अहो रात्र भरमा २१ फेरा सम्म भूमी कम्प भयो । याँहा पछि

भदौ महिनामा इन्द्रज त्रा थियो कान्तिपुर शहरका राजा जयप्रकाशमल्लले कौमारी देवीको जात्रा गरी-रहँदा गोर्खाका राजा पृथ्वीनारायणशाहले दर्वार कान्तिपुर जाई प्रवेश गर्‍या पछि जयप्रकाशमल्ल २।४ घडिसम्म युद्ध गर्‍या गोर्खालीहरूकन हटाउन नसकदा फछिबाट देवालयका जगहरूमा बारूद बिछाई कान्तिपुर शहर छाडी पाटनका राजा तेजनरसिंहमल्ल छेउ गया। याहाँ पछि गोर्खालीहरू बारूदल पोली मर्‍या। यसमा तुलाराम पाँडे बारुदले पोलीमर्‍या। विक्रम संवत् १८२५ शाके सवत् १६९० नेपाली सवत् ८८८ साल भाद्र सुदि १४ पूर्वाफाल्गुनी नक्षत्र गंडयोग आदित्य वारका दिन १७ घडी रात जादा बडाप्रतापी गोर्खाका राजा पृथ्वीनारायणशाह कान्तिपुर शहरमा प्रवेश गर्‍या।

॥ इति ॥